# परमेश्वरको अदालतमा
# वेद र बाइबल



रामचन्द्र ढकाल

# परमेश्वरको अदालतमा वेद र बाइबल

रामचन्द्र ढकाल

# परमेश्वरको अदालतमा वेद र बाइबल


लेखक : रामचन्द्र ढकाल
बोर्लाङ-९, गोरखा
सम्पादक : हरिप्रसाद सोडारी
प्रकाशक : बि. एन. पुस्तक संसार प्रा. लि.
अद्वैतमार्ग, काठमाडौँ, नेपाल ।
फोन : ०१-४२३३८७४, ९८५११४१४७५
*email* : *bnpustaksansar45@gmail.com*



आवरण : सन्तोष दाहाल
संस्करण : पहिलो, वैशाख, २०७८
प्रति : १२००
ले-आउट : बिएन डेस्कटप
अद्वैतमार्ग, काठमाडौँ

नेपालमा मुद्रित

# शुभकामना

॥ॐ॥

**धर्मो रक्षति रक्षितः**

धर्मको रक्षा धर्माचरणद्वारा हुन्छ । धर्मको व्याख्यान र धर्मसम्बन्धी लेखादिद्वारा मात्र सम्भव हुँदैन । "विष्णुसहस्रनाम"मा एउटा वाक्य आएको छ- "आचारप्रभवो धर्मः" । आचरणद्वारा धर्मको अभिवृद्धि हुन्छ । सायद हामी सनातनीहरू यहीं नेर कमजोर हुँदै गएका छौं कमजोरीको फाइदा धेरैले उठाउन खोजेका छन् साथै उठाइराखेका पनि छन् । हाम्रा पुर्खा ब्राह्मण थिए अतः हामी स्वतः ब्राह्मण हौं । हाम्रा पुर्खा क्षेत्री थिए हामी स्वतः क्षेत्री भयौं । यस्तै अनेक पारम्परिक मान्यता बोकेर बस्यौं । हाम्रा पुर्खा सनातनी (हिन्दूवादी) थिए, त्यसैले हामी हिन्दूवादी हौं । यस्ता धेरै गोरेटो (लकिर)मा हिँडिराखेका छौं । पुर्खाको पारम्परिक गोरेटोको दुहाई दिने हामीले पुर्खाले के गरेका थिए ? कसो गरेका थिए ? सनातनी (हिन्दूवादी) भएर के गरेका थिए ? कसो गरेका थिए ? आदि विचार गर्न सकेनौं । ब्राह्मण, क्षेत्री या सनातनी (हिन्दूवादी) हुनको लागि हामीले हाम्रा पुर्खाहरूले गरेको आचरणलाई आत्मसात् गरेर अनुसरण गर्न छोड्नुको कारण आजको समस्या हो जस्तो मलाई लाग्दछ । हामीले हाम्रो धर्मनिष्ठामा अडिन नसक्नाको कमजोरीलाई अरूको थाप्लोमा हालेर भन्ने गरेका छौं कि, फलानोले हाम्रो धर्ममा हस्तक्षेप गर्‍यो आदि-आदि । सायद यस्तै पीडाले पीडित भएर नै लेखक तथा विश्लेषक **श्रीरामचन्द्र ढकालज्यूले** यो समस्यालाई परमेश्वरको अदालतमा पुर्‍याउनु भएको होला ।

लेखकले वेदलाई मात्र परमेश्वरको अदालतमा उभ्याउनु भएको छैन अपितु कुरान, बाइबललाई पनि उभ्याउनु भएको छ । प्रथम कुरान र बाइबललाई आमनसामने राखेर बहस (समीक्षा) गरेको देखियो । यिनको उत्पत्तिकाल तथा प्रयोजनको नालीबेली केलाएर बहस गरेको देखियो । त्यो समीक्षामा कुरानका तर्कहरू समेटिएको देखिएन । आशा छ अर्को संस्करणमा

त्यो समेटिनेछ । यस कृतिमा वेद र बाइबलका तर्कहरू प्रस्तुत गरेर निकै युक्तिपूर्वक बहस गरेको देखियो । बाइबल र कुरान दुवै अवैध मानव सन्ततिद्वारा निर्मित पुस्तकलाई शास्त्र भन्न मिल्दैन । वास्तवमा शास्त्र त अपोरूषेय वेद नै हो । अतः तत्(वेद)प्रतिपादित धर्म नै वास्तविक र उत्तम धर्म हो ।

लेखक **श्रीरामचन्द्र ढकाल**ज्यूले निकै मिहिनेतका साथ तुलनात्मक अध्ययन गरेर तयार पार्नुभएको पुस्तक धर्मसम्बन्धी अध्ययन र अध्यापन कर्ताहरूको लागि अति उपयोगी सिद्ध हुनेछ । विशेषतया बौद्धिकवर्गमा इसाई मिसनरीहरूले वैदिक धर्मप्रति फैलाएको भ्रमलाई हटाउन यस पुस्तकले निकै सहयोग पुऱ्याउनेछ । यसलाई अङ्ग्रेजीमा पनि तयार पार्न सके विदेशिएका सनातन हिन्दूधर्मका सन्ततिहरूलाई जो बाइबलीय संस्कारले प्रभाव परेको छ, त्यसलाई केही मात्रामा निस्तेज पार्न सफल हुनेछ जस्तो लाग्दछ ।

तर अहिलेको ज्वलन्त समस्या भनेको अनपठित र अल्पपठित वर्गलाई जो प्रभावमा परेर धर्मप्रचार गरेर भ्रममा परेका छन्, त्यस्ता वर्गलाई उपयोगी सामग्री तयार पार्न जरूरी छ । त्यसको लागि एउटा पुस्तक र एउटा व्यक्तिले मात्र सम्भव छैन । संस्थागत र योजनापूर्वक तयारी गर्नुपर्दछ । कुत्सित प्रचारकहरूलाई गाली गरेर मात्र, भाषण गरेर मात्र पुग्दैन । त्यसको लागि उपयोगी सामग्रीसहित घरदैलो गर्नुपर्दछ । उनीहरूले पनि साना-साना सामग्रीको साथ घरदैलो गरेर भ्रम फैलाएका छन् ।

अन्ततः परमेश्वरको अदालतमा वेद र वैदिक धर्मको पक्षमा नै फैसला हुनेछ भन्ने विश्वासका साथ लेखक **श्रीरामचन्द्र ढकाल**ज्यूलाई साधुवाद ।

**अनन्तश्री विभूषित महामण्डलेश्वर, स्वामी आत्मानन्द गिरि,**
अध्यक्ष,गलेश्वर आश्रम, देवघाटधाम, तनहूँ

# शुभकामना

आत्माज्ञान प्राप्त गर्नु नै मानव जीवनको परमलक्ष्य हो । आत्माज्ञानद्वारा मुक्ति प्राप्त गर्नु नै परमपुरूषार्थ हो । यसका लागि पौरस्त्य महामनिषीहरूले अनेक पन्था अवलम्बन गरेका छन् । "रूचीनां वैचित्र्यात्" महामनिषीहरूका विविध चिन्तनधारा प्रवाहित भए । विविध मार्ग अवलम्बन गरे पनि जलको अन्तिम मिलनविन्दु समुद्र भएजस्तै मानव जीवनको अन्तिम विन्दु आत्मज्ञान र मोक्षप्राप्ती हो । विविध धार्मिक पन्थाको चिन्तनपूर्वक सबैमा रहेका गूढतत्व प्रस्तुत गरिएको यो पुस्तक अत्यन्तै मननीय छ । यसका लेखक रामचन्द्र ढकाललाई सरस्वतीको कृपा मिलिरहोस् । मेरो आशीर्वाद छ ।

**▪ स्वामी ज्ञानानन्द सरस्वती**<br>
(पीठाधीश श्रीहरिहर सन्यास आश्रम)<br>
अध्यक्ष- नेपाल सन्त समाज<br>
देवघाटधाम, चितवन

# शुभाशंस

रूसी अनुसन्धाता डा. निकेलस नोटोबिचले महात्मा ईशामसीहको १८ वर्ष अज्ञात जीवनको सम्बन्धमा The unknown Life of Jesus भन्ने शोधप्रबन्ध प्रस्तुत गरेपछि विश्वभरिका अध्येताहरूको ध्यान यसतर्फ आकर्षित भएको पाइन्छ। डा. जकालियट र अन्य देशी-विदेशी विद्वान्हरूले समेत महात्मा ईशामसीहले नालन्दाको बौद्धविहार, जगन्नाथ(वाराणसी जस्ता तीर्थस्थान रतिब्बती एवम् नेपाली हिमाली उपत्यकाहरूमा विभिन्न आध्यात्मिक गुरूहरूसँग वैदिकसनातन धर्मको भक्तिशास्त्र, योगशास्त्र एवम् बौद्ध शिक्षासमेत ग्रहण गरेर आफ्नो देशमा गई धर्मप्रचार गरेको उल्लेख गरेका छन् (डा. स्वामी प्रपन्नाचार्य, वेदमा के छ ?, पृ.६४-६७)। ज्ञान रसाउने हिमालीमूलबाट भारतवर्षभित्रका हिन्दू, बौद्ध र जैनजस्ता धर्मधारामात्र नभई इस्लाम र ईसाइजस्ता सुदूरवर्ती धर्मधाराहरू पनि सिञ्चित र पल्लवित भएको रहस्यलाई नेपाली जनमानसमा बुझाउन विद्वान्हरूको एकीकृत प्रयास आवश्यक छ । यसै सम्बन्धमा एकजना नेपाली अध्येता रामचन्द्र ढकालजीले वेद र बाइबलका सन्दर्भहरूको तुलना गर्दै अनुसंधानात्मक ग्रन्थ तयार गर्नभएको थाहा पाउँदा अत्यन्त प्रसन्नता भएको छ । विश्वभरि हिमालीधर्मको ध्वजा पताका फहराउने महनीय कार्यमा अरू विद्वान्हरूको पनि रूचि जागोस् र हिमवत्खण्ड नेपालले संसारलाई यस्तै अनगिन्ती ज्ञानका आलोकहरू प्रदान गर्न सकोस् भन्ने राष्ट्रदेव पशुपतिनाथसमक्ष प्रार्थना गर्दछु ।

**श्री १००८ स्वामी रमणानन्द गिरि**
महेश संन्यास आश्रम, देवघाट-५, तनहूँ

# शुभसम्मति

प्राचीन कालमा धर्मको परिभाषाभित्र अहिंसा, सत्य, बुद्धि, विवेक र ज्ञानलाई समेटिएको थियो । साथै धर्मलाई मानव र मानवताको आधार मानिन्थ्यो । धर्म एउटै थियो, नित्य, शाश्वत र सनातन । त्यहाँ अरू कुनै विशेषण चाहिँदैनथ्यो । समय बित्दै जाँदा धर्मको परिभाषा धमिलियो र मानिसका व्यक्तिगत राग द्वेषलाई धर्मको नाम दिइयो । परिणाममा धर्म पनि च्याउ उम्रिएसरि थरिथरिका जन्मिए । धर्मको नाममा विभेद र झगडा सुरु भयो । आरोपप्रत्यारोप, आर्थिक प्रलोभन, धर्मान्तरण र संख्याको प्रतिस्पर्धा । यी त अधर्म भए । खै विवेक ? खै बुद्धिको उपयोग ?, खै सत्य ? सत्यमा पनि विवाद हुन्छ र ?

यो त अधर्म हो । धर्मको खोल ओढेर आएका यस्ता अधर्मलाई धर्म मान्नु नै गल्ती हो । विचारमा पनि विकार आएपछि त्यसलाई पन्छाउन संस्कार चाहिन्छ । कसिङ्गर जम्मा भयो भने त्यसलाई समय-समयमा बढार्नुपर्छ । घाउमा विकार भरियो भने त्यसलाई निचोर्नुपर्छ । आवश्यकता अनुसार चिरफार पनि गर्नुपर्छ ।

त्यस्तै वैचारिक सरसफाइको खोजी हो, यो परमेश्वरको अदालतमा वेद र बाइबल । यस पुस्तकमा रामचन्द्र ढकालले धर्मको नाममा वर्तमानमा मौलाएका विकृति र विसङ्गतिलाई राम्रैसँग चिरफार गर्नुभएको छ । शल्यक्रिया गरेपछि केही समयसम्म बिरामीलाई छटपटाहट हुनसक्छ । तर यस्तो शल्यक्रिया बिरामीको स्वास्थ्यका लागि हितकर नै हुन्छ । वर्तमानमा धर्मको नाममा फैलिइरहेको घृणित परिवेशलाई सच्याउन साहसिलो कलम चलाउनुभएकोमा रामचन्द्र ढकालजीलाई फेरि पनि धन्यवाद ।

**प्रा.डा. गुरूप्रसाद सुवेदी**
महेश संन्याश आश्रम,देबघाट-५, तनहुँ

# इजलासको साक्षीहरू

विद्वान् लेखक श्रीरामचन्द्र ढकालज्यूले अथक परिश्रम गरी स्वानुभव र इतिहासका कुराहरूलाई समेटेर परमेश्वरको अदालतमा वेद र बाइबल भन्ने पुस्तक तयार गर्नुभएकोमा सर्वप्रथम धन्यवादको पात्र हुनुहुन्छ । नेपालको विविधता, सामाजिक सद्भावना भाइचारा, सहिष्णुता, सौहार्दता, परस्पर निःस्वार्थ रूपमा सहयोगी भाव आदि देखेर एकलकाटे स्वभाव भएका र धनबल तथा कुटिलचालले विश्वलाई नै एकल धार्मिक साम्राज्यवाद लाद्न हजारौं वर्षको योजना बनाएर हिंडेका पश्चिमाहरूले कुन कुन अस्त्रद्वारा विश्वलाई कब्जा गर्न सकिन्छ भन्ने रणनीति अनुरूप चलेका ती समुदायका कुटिल मनसाय र गतिविधिका विविध स्वरूपलाई पर्दाफास गरेर जनसमक्ष ल्याई नेपाली माटोको विविधतालाई जोगाउने सकिन्छ भन्ने आशा गर्दै कठिन परिश्रम गरेर विद्वान् लेखकज्यूले हाम्रोसामु पुस्तकाकारको रूपमा पस्किनु भएको छ । विश्वलाई अब अस्त्र बलले कब्जा गर्न सकिंदैन । कब्जा गर्न सहज उपाय भनेकौ धर्म हो भन्ने बुझेर रिलिजन अर्थात् पन्थलाई धर्मको संज्ञा दिंदै व्यापक जन र धन खर्च गरेर कुन ठाउँमा कस्तो प्रहार गरेर सो समाजको मूल्य, मान्यतालाई भत्काउन सकिन्छ भनी प्रहार गर्दै हिंडेका धर्म परिवर्तनकारीका गतिविधिप्रति हामी सोझा नेपाली लगभग बेखबर नै छौं । हाम्रै सामाजिक मूल्य मान्यतालाई अनुकरण गर्दै आफ्नो जनमत तयार गर्न विभिन्न प्रलोभन देखाएर स्वार्थसिद्ध गरी विश्व कब्जाको सपना लिएर हिंडेका छन् । त्यस्तो अँध्यारो समूहको विरुद्ध जान्नको लागि परमेश्वरको अदालतमा वेद र बाइबल प्रकाशस्वरूपमा अवस्थित भएको छ । यस्ता समाजलाई कुमार्ग र सत्मार्गको बारेमा स्पष्ट देखाउने यस पुस्तकको अध्ययन सबैले गर्नुहुनेछ भन्ने आशा राख्दै प्रकाशक, लेखक र सहयोगी सबैमा नमन गर्दछु । नमस्कार ॥ नारायण ॥ जय सनातन ॥

**रामकृष्ण उपाध्याय**
हिन्दू जागरण नेपाल, मित्रपार्क काठमाडौं

दुई दशक शिक्षण पेशामा आबद्ध भई विद्यालयस्तरका थुप्रै पाठ्यपुस्तक तयार गर्नुभएका रामचन्द्र ढकालले पछिल्लो समयमा लामो खोज र अनुसन्धान पश्चात तयार पारिएको "परमेश्वरको अदालतमा वेद र बाइबल" पुस्तक मजस्तो धर्मसंस्कृतिमा अभिरूची राख्नेलाई पाश्चात्य धर्म दर्शनको तुलनात्मका अध्ययन गर्न भारी सहयोग पुऱ्यायो ।

रामचन्द्र ढकालद्धारा प्रस्तुत यस ग्रन्थ अध्ययन गर्दै जाँदा मैले पढेको दयानन्द सरस्वतीद्धारा लिखित सत्यार्थ प्रकाश ग्रन्थलाई झलझली सम्झन पुगेँ । त्यसमा विशेषतः तुलनात्मक अध्ययनका लागि यथेष्ठ प्रमाणहरू पेस गरेका यत्रतत्र आउँथ्यो । उक्त पुस्तक प्रकाशनले धार्मिक जगतमा एउटा हलचल नै ल्याइदिएको थियो । यतिबेला ढकालज्यूबाट प्रस्तुत परमेश्वरको अदालतमा वेद र बाइबलले पनि आजको बौद्धिक वर्गका समाजमा एउटा नयाँ आध्यात्मिक अभियान जन्माउने देखिन्छ । अन्ततः पुस्तकले मजस्ता हजारौं पाठकलाई यो पुस्तकले धित मार्नेछ भन्ने मेरो पूर्ण विश्वास छ । अतः यो ग्रन्थ संग्रहनीय र पठनीय छ । लेखक रामचन्द्र ढकालज्यू धन्यवादका पात्र हुनुभएकोछ ।

धार्मिक विश्लेषक, **मोहन लामा**
चितवन

धर्म मानवका लागि हो तर मान्छे धर्मको निम्ति होइन भन्ने मान्यताले नै मानवता, नैतिकता र यथार्थतामा अडिने, आलोचना सहने अनि तार्किक छलफलमा विश्वास गर्ने पनि प्रवृत्ति छ हाम्रो सनातन परम्परा । यही विशेषताकै कारणले आज १९५५८८५१२१ वर्षदेखि हाम्रो अस्तित्व यथावत् छ । बेलाबेलामा बढी, पहिरो, ज्वालामुखी नआएका होइनन् तर सृजना र सुन्दरता नै आफ्नो पहिचान बनाएको सनातन धर्मले आफूलाई अडाउन र बढाउन सकिरह्यो । सृष्टिकालदेखि आजसम्म हुँदै पछिसम्म रहिरहने हुनाले यो धर्मलाई सनातन धर्म भनिएको हो । निश्चल संस्कृत व्याकरण यसको जरो हो, ज्योतिष विज्ञान यसको आँखा हो, वेदान्त यसको मेरूदण्ड हो, संस्कृतको शब्द निर्माण प्रक्रिया र आजसम्मको सनातनी उपलब्धी यो सनातन सभ्यताको सम्पत्ति हो । यसमा कल, छल, भ्रम केही छैन । त्याग, साधन, निष्ठा, योग र समर्पणको पुञ्ज

हो सनातन धर्म, सभ्यता । ठीक यसको विपरित छ पाश्चात्य धर्म र मर्म । हो, यही मर्म केलाउने अत्युत्तम कर्म प्रस्तुत पुस्तकका रचयिता रामचन्द्र ढकालज्यूले गर्नुभएको देखेर खुशी लागेको छ । वस्तुत : यो पुस्तकमा वेद अर्थात् वैदिक परम्पराको सत्यता र बाइबलीय भ्रम र मानवहिंसाको बारेमा ब्यापक अनुसन्धान गरेको देखिन्छ । वेद र बाइबल दुवैले परमेश्वरको वकालत गर्ने तर दुईवटा प्रकृति नितान्त फरक भएको तुलनात्मक अध्ययन गरिएकोले पुस्तकको नाम "परमेश्वरको अदालतमा वेद र बाइबल" शीर्षक सार्थक हुन पुगेको छ । यही तुलनात्मक परिवेशमा यस पुस्तकका रचयिता रामचन्द्र ढकालले तटस्थ भई परमेश्वरको अदालतमा गरेको आफ्नो फैसलाको सक्षी बस्न पाउँदा म औधी खुशी छु । परमेश्वर शब्द वेदको शब्द हो । सनातन सभ्यतामा सनातन प्रभूका अनगिन्ती नाम प्रचलित छन् र हरेक नामलाई बराबर सम्मान गरिएको छ । क्रिश्चियनहरू भारतीय उपमहाद्वीपमा छिरेपछि यही परमेश्वर शब्द ओगटेर परमात्माका अन्य नाम शब्दहरूप्रति घृणा फैलाउने कुत्सित इसाईमतप्रति पुस्तकको नामबाट नै भयंकर व्यङ्ग्य पुस्तक छ । धार्मिक विषयवस्तु भए पनि भाषाशैलीमा सहजता, सरसत र मधुरता भरिपूर्ण हुन्छ ।

वास्तममा क्रिश्चियनधर्मको न छेउ छ, न त टुप्पो नै । यो हावामा उम्रिएर हावामै लहराएको आकासेवेलीजस्तै हो । वास्तवमा इसाइमत विश्व सभ्यताको ऐजेरू हो । जसरी ऐजेरूले सदावहार वृक्षहरू ढाकेर सुकाएर मार्छ यसै गरी कथित इसाईधर्मले संसारका हजारौं, भाषा, सभ्यता र उपलब्धी ध्वस्त पाऱ्यो । युरोप, अष्ट्रेलिया, अफ्रिका र अमेरिकी प्रायद्वीपका हजारौं भाषा सभ्यता र जाति मास्यो यो कुरताले । क्रिश्चियन मतले काला जातिहरूमाथि गरेको बर्बर दमन मानवताकै कलंक हो । सेतो रंगलाई नै कुरताको प्रतीक बनायो इसाईमतले । श्वेतनीति अपनाएर बेलायत, अष्ट्रेलिया र अमेरिकाका आदिवासीहरूको संहार गरेका घटना कसले विर्सेको छ र ? भारतीय उपमहाद्वीपकै कति कति आदिवासी सभ्यताहरू मासिएका ज्वलन्त उदाहरण छँदै छन् । यो संसारमा धर्मको नाममा सबैभन्दा बढी नरसंहार इर्साले जति अरू कसैले गरेको छैन । एउटा हातमा बाइबल र अर्को हातमा तरबार लिएर निस्किएको यो

भयावह महामारीकै कारणले पृथ्वीकै अस्तित्व रहने हो किन नहुने हो भन्न सकिने अवस्था छैन ।

यो सुन्दर संसारमा आगो लगाउने काम गरे सधैं क्रिश्चियन, मुसलमान । अरूको अस्तित्व नस्वीकार्ने र इतिहास नै आफैँबाट सुरू गर्ने यिनीहरूको आततायी व्यवहारले आज पूरै विश्व सन्त्रस्त र पीडित छ । मुसलमानी आतंकले एशियाका सयौं सभ्यता नासे जस्तै क्रिश्चियन आतंकले पुरै सभ्यता नष्ट प्राय : भएको कुरा स्वतन्त्र विश्लेषकहरू सबैले स्वीकारेको विषय हो । हाम्रै सनातन धर्मका समेत लाखौं ग्रन्थहरूलाई समुद्र तार्ने र नास गर्ने काम यही उग्रताले गऱ्यो । नेपालमा त हामी हिन्दूले सबै मत मतान्तरलाई सम्मान गरेकै हौं र छौं । मुसलमानसँग भातृभाव राखेर पहाडमा सँगै बसेका ढाइसय वर्ष वितिसक्यो । राज्य सत्ताका कुरा नगरेर सामान्य जनस्तरका कुरा गर्ने हो भने क्रिश्चियनलाई हिन्दूले भातृभाव राखेकै छन् । तर आज गुनको बदला बैगुन गरेर रात दिन सैतान धर्म भनेर आलोचना गरिरहेको सुन्न पाइन्छ । आफ्नो संख्या बढाउने खेलोमा हिन्दू संस्कृतिका प्रत्येक कुरालाई नकारात्मक व्याख्या गर्ने कामको हद पनि पार भएको छ । देशमा देखिएको कथित धर्मनिरपेक्षवादी होलीवाईनको सत्ताले पनि कथिन धर्म निरपेक्षताको मर्म विर्सेर सनातन हिन्दूधर्ममाथि नै दमन र पक्षघात गरिरहेकै छ । शान्ति र सहिष्णुता के हिन्दूले मात्रै अपनाएर यो राष्ट्रमा वा विश्वमा अमनचयन होला त ? पक्कै पनि हुँदैन । यही अन्याय र बर्बरताको परिणामस्वरूप यो महत्वपूर्ण कृति निस्केको हो । वास्तवमा इसाईको उग्रताले अपराध, अन्याय र आतङ्कको हद पार गरेकैले आज विद्वद्वर रामचन्द्र ढकालले बाइबललाई पारलौकिक अदालतमा हाजिर गराई उसका विश्वस्तरीय करतुतको पर्दाफास गरी आफूलाई विश्वकै उत्कृष्ट न्यायाधीश सावित गर्नुभएको छ ।

अन्त्यमा यो पुस्तकलाई प्रत्येक सनातन हिन्दू धर्मावलम्बीहरूले गीताजीलाई जस्तै श्रद्धा राखेर घरघरमा पढ्नेछन् । विशेषतः प्रत्येक युवाको हातमा यो पुस्तक परोस् । शान्ति र सहिष्णुता हामी हिन्दूले मात्र चाहेर हुने होइन । जाई कटक नगरे पनि झिकिकटक नगरेमा आफ्नो अस्तित्व नै समाप्त हुने कुरा सबैले जान्नु पाऊन् । यो पारलौकिक अदालतमा गरिएको नेपाल आमाको सन्तानको इजालसबाट । यो इजलासको अध्ययनबाट इसाईमत बज्रप्रहार भोगेका सबैको मति फिरोस् र सबैले यो

दासता त्यागेर आफ्नो मूल घरमा फर्किएर सानन्द रहन पाऊन् भन्दै परमेश्वरको अदालतका न्यायाधीशलाई पुनरपि धन्यवाद ॥

**वाचन सम्राट पं. भीमकान्त पन्थी, गुल्मी**

ॐ श्री परमात्मने नमः सत्य ब्रूयात् प्रिय न ब्रूयात सत्यमप्रियम् ।
प्रियं च नानृत ब्रूयात् एष धर्म सनातन ॥

सामान्य लौकिक बुझाईमा संसारमा दुई सत्ता विद्यमान रहेका छन् । एक आध्यात्मिक अर्को भौतिक । वृहत् पारमार्थिक चिन्तनमा ती दुवै सत्ताको आधारमा एकै शक्ति छ । अर्थात् ती दुई सत्तामा भेद छैन । एकीभाव विद्यमान छ । त्यही बोधको विहंगम विस्तार तथा अनुभूति नै वास्तवमा आध्यात्मिकता भनेको सांसारिक काम्यकर्म या लौकिक व्यवहारभन्दा पनि बोध र भाभावित अभ्यासद्धारा प्राप्त गर्ने विषय हो । त्यसको परमलक्ष्य या साध्य भनेको ब्रह्मसाक्षात्कार या स्वरूपमा भन्नुपर्दा सत्य, ज्ञान र आनन्दको व्यापक क्षितिजमा प्रवेश हो । त्यही विषयको गहनता र खोजीमा मानव जगत् सदियमयौंदेखि भौतारिरहेको छ या अर्को अर्थमा भन्नुपर्दा त्यसको प्यासी भएर निरूपणमा लागेको छ । वास्तविक स्वरूपको दर्शन र वृहत्तर मानवीय कल्याणका मार्ग प्रशस्त गर्नका निमित्त समयको कालखण्डमा विभिन्न शास्त्रहरू बने । ती शास्त्रीय मान्यताले सत्यको निरूपण गर्ने अभ्यास निरन्तर गरिरहेका छन्, सँगसँगै तिनले समाजको परिभाषालाई पनि समेट्न खोज्दा एक अर्कालाई उँचो या निचोको भावले दृष्टिगोचर गरेका दृष्टान्त धेरै छन् । जसले गर्दा मानवीय मूल्यमान्यताभन्दा अभिमानजन्य जडता, धर्मान्धता र एकआपसमा घृणाका भाव पैदा हुन थाले । परिणाम अद्यावधि देख्न पाइएको छ या अर्को अर्थमा भन्नुपर्दा समुदायले त्यसको पीडा बोध गरिरहेको छ । समग्रताको मूल्यांकनमा आध्यात्मिक चेतनाको स्तर सँगसँगै प्राणीजगत्को कल्याणको मार्गमा कसले अभिमुखीकृत या परिलक्षित गरेको छ, आजको समाजमा मानवनिर्मित कट्टताभन्दा आस्थाको पक्ष विराट् बन्न पुग्नुपर्दछ, हाम्रा पहलकदमी पनि विशालताको वकालतमा खर्चनु बढी सान्दर्भिक हुन जान्छ ।

यही क्रममा मेरा बालापनका सहृदयी मित्र रामचन्द्र ढकालले निकै मिहिनेतपूर्वक खोजपूर्ण अध्ययनका साथ 'परमेश्वरको अदालतमा वेद र बाइबल' पुस्तक प्रकाशनले अत्यन्तै हर्षित तुल्याएको छ । यही सन्दर्भलाई लिएर दुई शब्द खर्चने चेष्टा पनि भयो । समग्रताको भावमा जनमानसलाई घच्घच्याई विकृति र विसंगति तथा धार्मिक आस्थाको अन्धतामा गरिने कुठाराघातको सही विश्लेषण छ भन्ने मैले पूर्णतः विश्वास लिएको छु । अन्तः समाजमा चेतना, बोध र जागृतिका लागि यो पुस्तकले धार्मिक नेपाली समाजमा एक विप्लबी भूमिका निर्वाह गर्दछ भन्ने कुरामा म अडिग छु । अन्तमा पुस्तकको अन्तरवस्तुको गुह्य कुरा जनजनमा प्रचारित भएर ब्यापक आध्यात्मिक चिन्तन र सर्वोत्कृष्टताको कसीमा जनमूल्यांकनलाई ठूलो टेवा दिन सकोस् भन्ने शुभेच्छाका साथ पुनश्चः लेखकको अद्वितीय प्रकाशनप्रति हार्दिक साधुवाद व्यक्त गर्दछु ।

**वाचनप्रवीण पं. दीनबन्धु पोखरेल**, गोरखा

१० भदौ २०७७ को साँझ त्यसपूर्व थाहा नभएको फोनबाट एउटा कल आयो । फोन उठाउँदा अपरिचित आवाजबाट सोधियो 'तपाई विश्व हिन्दू महासंघ नेपालको भरतराज पौडेल हो ?' तत्काले मैले जवाफ दिएँ "हो, म बोल्दै छु । मैले किन भन्न नपाउँदै "परमेश्वरको अदालतमा वेद र बाइबल" नामक कृतिबारे भूमिका लेख्न अनुरोध गरियो । अनुरोध गर्ने लेखकचाहिँ चितवन निवासी रामचन्द्र ढकाल हुनुहुँदोरहेछ । त्यसपछि छोटो फोनवार्ता गरी इमेलमा कतिको पाण्डुलिपी पठाइदिने र मैले भूमिकाका लागि केही लेखिदिने सहमति गऱ्यौं । सर्सर्ती पाण्डुलिपी पढैं, रूचीकर लाग्यो । आजको नेपालका लागि यो कृति पठनीय छ । अझ भनुँ समकालीन नेपालका धार्मिक-साँस्कृतिक तथा आध्यामिक जगत्मा उठिरहेका कतिपय जल्दाबल्दा प्रश्नहरूको उत्तर यस कृतिले दिन सक्ने रहेछ । प्रारम्भमा ग्रन्थ परिचय दिई प्रमुख धार्मिक चिन्तनको उद्घोष गरिएको छ तापनि खासमा यो कृति चीन, उत्तरकोरिया, श्रीलंका, पाकिस्तान, भुटान, भारत, अफ्रिका, जापानलगायतका देशमा बाइबलीय इसाईबाट गराइएका धर्मान्तरणका गतिविधि, त्यसको विस्तार र रोकावटसम्बन्धी विश्लेषणात्मक जानकारी दिँदै लेखक महोदयले येशूको चिनारीसहित बाइबलीय इसाई

धर्मान्तरणका प्रमुख वैशिष्ट्य एवं सिद्धान्तबारे पर्याप्तमात्रामा सांकेतिक चर्चा गरेका छन् । नेपालीभाषामा यति स्पष्ट रूपमा इसाई धर्मान्तरणका विसंगतिबारेमा अन्य कुनै कृति देखा परेको छैन । वास्तवमा नेपाली समाजको स्वाभिमान र पहिचान विरूद्ध इसाई धर्मान्तरणवादीहरू दुश्छल र दुश्प्रवृत्ति बुझ्न यो कृति अत्यन्तै सहयोगी हुने विश्वास मैले लिएको छु । नेपालका धार्मिक साँस्कृतिक तथा आध्यात्मिक क्षेत्रमा रूची राख्ने र क्रियाशील हरेक व्यक्ति र संस्थाका लागि यो कोसेढुंगो हुनेछ । यस अर्थमा लेखकप्रति उच्च सम्मानजनक भाव प्रकट गर्दै हृदयतः साधुवाद व्यक्त गर्दछु । नेपाली समाज यो कृतिबाट लाभाविन्त हुँदै जानेछ । आशा एवं विश्वास छ यस कृतिका लेखकबाट भविष्यमा अझ परिष्कृत, शोधपरक तथा उपयोगी कृतिहरू आइरहनेछन् । हार्दिक शुभकामना व्यक्त गर्दछु । अन्त्यमा यस कृतिमा उल्लेख यो अंश यथावत् यहाँ उद्धत गर्न सान्दर्भिक ठानेको छु । "सन् १९८९ मा बर्लिन वाल भत्किनेबित्तिकै केही नेपालीले टिप्पणी गरेको थिए । अबको युद्ध इस्लाम विरूद्ध इसाई युद्ध हो । लाक्षणिक सुरूवात श्रीलंकाबाट भई नै सकेको थियो । त्यो युद्ध सिंहाली र तमिलबीच थिएन, बौद्ध धर्मावलम्बी र इसाईबीच थियो । त्यसैले त्यहाँ नर्वे मध्यस्थताका लागि आयो । ७९ प्रतिशतको हारहारीमा इमान्जेलिकल लुथरन जनसंख्या भएको नर्वे थियो । अनन्तः कोलोम्बो सरकारले नर्वेलाई वार्ताबाट बर्खास्त गऱ्यो र डेनमार्कबाट विदेशमन्त्रीलाई भिसा दिएन । युनिसेफका प्रमुखलाई पनि बर्खास्त गऱ्यो । स्मरण रहोस्, नेपालमा भने त्यही वर्गको पैसाको भकारी बोकेर संविधानसभा, सभा, शिक्षण तालिम र संविधान निर्माण सहकार्यमा पार्टीका ढोकाहरूमा धाइरहेको छ । नेपाल आएको ईयू ट्रोइकामा पनि स्वीस परराष्ट्र मन्त्रालयको प्रतिनिधित्व थियो, धर्मसापेक्ष उत्तर युरोप खुलेरै नेपाली समाज विरूद्ध लागेको छ (नेपालमा इसाई चलखेर २०७२ डा. शास्त्रदत्त पन्त)" । वास्तवमा वि.सं. २०६३ जेठ ४ गते पुनः स्थापित प्रतिनिधि सभाले उल्लेखित नियोजित प्रवृत्तिको वशीभूत भई जनआन्दोलनको भावनाविरूद्ध समेत गएर अनादिकालदेखि सदा स्वतन्त्र गोरक्षक सनातन हिन्दू राष्ट्र नेपालको मौलिक पहिचान तथा अस्तित्व हटाउन हिटलरीशैलीको प्रयोग गरेर धर्म निरपेक्ष नेपाल गरिएको थियो । धर्मान्तरणको लाइसेन्सीकरण सुरू गरे त्यसयताको नेपाल राष्ट्रियता तथा सामाजिक सद्भाव एकपछि अर्को गरी खल्बलिदै गएको जगजाहेर छ । हाम्रो मौलिक धर्म, संस्कृति, संस्कार र सभ्यतालाई पुनः स्थापित

गर्नुपर्ने राष्ट्रिय दायित्व हामी नेपालीको यो पुस्तामा रहेको समयमा यो कृति दिएर लेखकले यथोचित गुन लगाउनुभएकोमा पुनः हार्दिक कृतज्ञता ज्ञापन गर्दै समस्त सनातनी हिन्दू समाजले यो कृति मन लगाएर पढोस् भन्ने अपेक्षासहित यो लेखनी बिट मार्दछु ।

**भरतराज पौडेल,** उपाध्याक्ष-विश्व हिन्दू महासंघ नेपाल ।

मेरो आत्मिक मित्र लेखक रामचन्द्र ढकालजीले विशेष खोज र अनुसन्धानपश्चात् प्रकाशन गर्नुभएको पुस्तक परमेश्वरको अदालतमा वेद र बाइबल यो शीर्षक हेर्दा वि.सं. २०५३/५४ सालमा म धादिङ जिल्लामा इसाई धर्मावलम्बीहरूको हिन्दू र बौद्ध धर्ममाथि भएको प्रहारको याद गरायो । त्यतिबेला म आफैँलाई उनीहरूले शैतानको संज्ञा दिएका थिए । मैले धेरथोर बाइबलको अध्ययन गरेकोले केही सवाल जवाफ गरेकाले त्यति ज्याजती गर्न सकेनन् तर सोझा सिधाहरूलाई इसाईधर्ममा बलजफ्त गरेर प्रवेश गराएको पाएको थिएँ । त्यतिबेला उक्त स्थानको करिब १० दिनको भ्रमण र अनुसन्धानपश्चात् मैले फोटोसहित कान्तिपुर दैनिक र तथ्यकथा म्याग्जिनमा "हिन्दू अधिराज्यमा इसाईहरूको विग्विगी" शीर्षकमा लेख प्रस्तुत गरेकोमा मलाई इसाई मिसनहरूको धेरै डर र धम्कीहरू आएका थिए । आज रामचन्द्रजीजस्ता लेखकहरूले यस विषयमा अध्ययन अनुसन्धान गरी थप यथार्थ कुराहरू सबैका सामु पस्किने जमर्को गर्नुभएकोमा उहाँको साहसी कदमको कदर गर्दै यो पुस्तकले "वेद र बाइबल"मात्र नभएर कुरान र त्रिपिटकको अनुसरण कर्ताहरूलाई समेत सहयोग पुग्ने आशा एवं विश्वास लिएको छु । मलाई केही कुरा राख्न दिनुभएकोमा मेरो व्यक्तिगत एवं संस्था र सामाजकै तर्फबाट उत्तरोत्तर प्रगतीको शुभकामना व्यक्त गर्दछु ।

**सूर्य लोप्चन तामाङ,** संस्थापक एवं प्रमुख सल्लाहकार-बौद्ध जागरण केन्द्र

आदरणीय दाजु रामचन्द्र ढकालको पुस्तक परमेश्वरको अदालतमा वेद र बाइबल निकै लामो र कडा परिश्रमको फल हो । बजारमा आएपछि पुस्तकले धर्म र आस्थाको नाममा चलेको व्यापार र खुलेका पश्चिमा पसलहरूलाई गतिलो झापड हान्ने पक्कापक्की छ । यसका साथसाथै यस पुस्तकले चर्चका ती गोप्य काहानी पनि बयान गरेको छ । जसमाथि आजसम्म नेपालीहरू र नेपाल सरकारको ध्यान पुगेको छैन । यो पुस्तक पढिसकेपछि सो विवेकी नेपालीहरू निन्द्राबाट झसङ्ग ब्यूँझेको महसुस गर्नेछन् ।

**अभिषेक जोशी,** संयोजक- हिन्दू युवा संयोजन नेपाल ।

सर्व योनिषु कौन्तेय मूर्तयः सम्भवन्ति याः । तासां ब्रह्म महद्योनिरहं वीजप्रदः पिता ॥

अर्थात् "हे कुन्तीपुत्र ! यो भौतिक जगत्मा जेजति जीवयोनिहरु जन्म लिन सम्भव देखिएका छन् ती सबैको बीजदाता पिता म नै हूँ यो तिमीले बुझ्नुपर्छ ।" "वसुधैव कुटुम्बकम्" (महोपनिषद्) अर्थ पृथ्वीवासी हामी सबै एक परिवार हौं । उपर्युक्त अत्यन्त उदार वैदिक सनातन दर्शन तथा भावनाहरुमाथि विभिन्न धार्मिक समूहमा (हिन्दू, इसाई, बौद्ध, इस्लाम) बाँडिएर खेलवाड गर्ने, वास्तविक धार्मिक आचरण प्रस्तुत नगर्ने, सामान्यजनलाई धर्मको नाममा शोषण गर्ने अपराधीलाई अवश्य परमेश्वरले दण्डित गर्नुहुनेछ । किनकि यहाँ आफ्नो हैसियत पनि साक्षीको हो ।
धेरै मिहिनेतपूर्ण अनुसन्धानबाट तयार भएको यस गहन संग्रहमार्फत श्रीरामचन्द्र ढकालज्यूले संकेत गर्नुभएको पीडितलाई न्याय मिल्ने र अन्य सोझासाझा जिज्ञासुहरूलाई धार्मिक आवरणमा प्रचलित लोभलालचमा फस्न र छलकपटबाट बच्न मद्दत पुग्ने अदालतले आशा लिएको छ ।

**कृपालु गौरसुन्दर दास, इस्कोन नेपाल**

लामो र अथक प्रयासपछि एक इतिहासको नयाँ आयम प्राप्त भएको छ । यस्तो ज्ञान प्राप्त गर्ने अवसर मनुष्यका लागि कहिलेकाहीँमात्र प्राप्त हुन्छ । साधारण मनुष्यको रूपमा धेरै मनुष्यको जन्म सधैं हुन्छ । ती लाखौं मनुष्यमा एक दुईजनामात्र व्यक्ति सन्त बन्न सक्छन् । लाखौं सन्तमा कोही एक दुई जनामात्र ऋषि बन्न सक्छ । केही लाखौं ऋषिमा एक दुई ऋषिमात्र बुद्ध बन्न सक्छन् । लाखौं बुद्धमा एक दुई महर्षि पद प्राप्त गरेको हुन्छ । महर्षि पद ज्ञानको अन्तिम चरम अवस्थामा रहेर लेखिएको पुस्तकको नाम नै परमेश्वरको अदालतमा वेद र बाइबल इतिहासको बारेमा धेरै किताब लेखिएका छन् । जसले एक समाजमा एक व्यक्तिको बारेमा लेखेका छन् । तर परमेश्वरको अदालतमा वेद र बाइबल नामक पुस्तकले सम्पूर्ण सम्प्रदायको इतिहासको वीज दिएको छ । मलाई यो पुस्तक पढ्दा आफैं नै यो इतिहासको समयमा त्यही घटनाको नजिक उभिएर निरीक्षण गरेको र ती घटना हुँदै गर्दा म आफैं त्यही स्थानमा

विद्यमान भएको अनुभव प्राप्त भएको छ । "परमेश्वरको अदालतमा वेद र बाइबल" पुस्तकमा अहिलेको विश्वमा रहेको इतिहासको पहिलो पान्ना खोलिएको छ । जो अज्ञानतामा रहेको थियो, आजसम्म यो प्रयास गरेको थिएन । आफ्नो अथक प्रयासबाट परमेश्वरको अदालतमा वेद र बाइबल भन्ने पुस्तक लेखेर हामीलाई सत्यज्ञान प्राप्त गर्नुभएको इतिहासविद् रामचन्द्र ढकालप्रति विनम्र आभार प्रकट गर्दै हृदयदेखि नमन गर्दछु ।

**आध्यात्मिक लेखक, नारायणविन्दु अधिकारी**

रूपन्देही

# मैले जे देखेँ

हरिप्रसाद सोडारी

रामचन्द्रजी र म एउटै भूगोलका । हामी गोरखाली पारामा हुर्किएर नेपाली शैलीमा बाँचेकाले एउटै कित्ताका पनि । हामी पेशाले शिक्षक, भावनाले संस्कृतिप्रेमी तसर्थ साथी पनि । उनी अलिक चञ्चल त्यसैले केही गोता खाए, केही अनुभव बटुले, केही ज्ञान संकल्न गरे, केही सत्य जम्मा गरे अनि पुस्तकीय आकारमा देखा परे । उनी जिज्ञासु र ज्ञानका लालची । छोटो समयमा छलाङ मार्ने उद्देश्यले केही दिन मूलघर छोडे र फेरि आए । उनको बाध्यता, कसैको उक्साहट, पूर्वजन्मको भागभोग, कर्मको नियति वा परिस्थितिको परिणतिले यसो गरे त्यो उपरवालेलें जानून् । फर्केर जे गरे त्यसले लाभ दियो, भावीपुस्तालाई सन्देश दियो, धर्मपरिर्वतन गर्नेलाई बाटो देखाइदियो । जीवन सिक्ने नै रहेछ अनवरत अनुभव गर्नु नै रहेछ ।

यसैले चरैवेति चरैवेति भनियो । ज्ञानको न त सीमा छ, न त अध्ययनको अन्त्य छ, न त खोजको टुंगिने मिति छ । यही चक्रव्यूह वरिपरि रहेर लामो प्रयासपछि उनी परमेश्वरको अदालतमा टुप्लुक्क देखा परे 'परमेश्वरको अदालतमा वेद र बाइबल' बोकेर । उनी गोरखाली त हुन् नै तर यसपटक उनको परिचय कलमवीरमा देखियो । परमेश्वरलाई नै निर्णय गर्न गाह्रो पर्ने गरी समस्या र त्यसका कारण बोकेर अदालतको मूलढोकामा ठिङ्ग उभिएको भेटिए ।

मैले वेद नपढे पनि पाना पल्टाएको छु । केही वर्षअघि प्रातस्मणीय गुरुदेव डा. स्वामी प्रपन्नाचार्यबाट 'श्रुतं हरति पापानि' गरेको थिएँ । बाइबललाई केही हेरेँ र केही पढेँ पनि । रामचन्द्रजी त बाइबलमा डुब्नुभयो पछि उत्रनु पनि भयो । त्यसपछि वेद र पुराणको श्रीचरणमा आफूलाई समर्पित गर्नुभयो । यो यात्रा जीवनपर्यन्त चलोस् ।
उहाँका अनुभव मननयोग्य बने र पाठकलाई पस्कनुभयो । धर्मान्तरण गरी बाइबल समातेर, क्रुसमा झुण्डिएर केही नेपाली विभिन्न कारणले डुबे, उत्रने प्रयासै गरेनन्, कतिलाई त उत्रनुपर्छ भन्ने होशै भएन । रामचन्द्रजी

वेहोशी भएनन्, जागे । किनकि बाइबल, पोप, फादर, पाष्टर, चर्च, क्रस, दशांशको रहस्यबारे उनलाई ज्ञात थियो । जो जाग्छ उसले जगाउँछ । उनले यथार्थलाई यथासक्य उजागर गरी पुस्तकमार्फत पुस्तौंपुस्तासम्म बोध गराउने प्रयास गरे ।

यो ग्रन्थ सम्पादनको जिम्मा मैले लिन खोजेको थिइनँ तर मित्रको अनुरोधलाई नकार्न पनि सकिनँ । पाष्टरको घुम्टो ओडेर कमाउन र रमाउन सक्ने हैशियत बनाएर फर्केको मित्रलाई सम्पादक बनेर स्वागत गरैं । मेरो व्यस्तताले काम बिलम्ब हुन पुग्यो । तथापि लामो समय पर्खे कति पनि पट्यार नमानी । मैले सम्पादनको क्रममा भाषागत त्रुटि हेरैं तर विषयगत भार रामचन्द्रजीलाई नै सुम्पैं । यसमा वेद र बाइबललाई होइन यसका बहरहरूको कमजोरीलाई देखाइएको छ । येशूलाई परमात्मा, बाइबललाई पवित्र ग्रन्थ घोषित गर्नेलाई घोत्लिन पर्ने तथ्यहरू देखाएका छन् । क्रिश्चियनधर्मको ढर्रा र चर्चको छत्रछायाँमा पलाएका ऐजेरूलाई उपचार गर्न सुझाएका छन् । वेद र बाइबलबीचको भिन्नता एवं नेपालमा उनीहरूले देखाएको ताण्डवनृत्य, द्वैत चरित्रका बारेमा तथ्यागत जानकारी दिएका छन् । बृहत्तर रूपमा अनुसन्धानको कसीमा रगाडिएर एकल प्रयासमा जे गरे त्यो कम प्रशंसनीय छ । 'घायल जाने घायल की गति' उनको 'ऐया' 'आत्थु'लाई यस पुस्तकले बताएको छ । रामचन्द्रजी ताप र चापले कोइलाबाट हीरा बनिसकेपछि मात्र पुस्तकीय आकारमा देखिन चाहेको बुझिन्छ । विन्दुवंश चलाए पनि नादवंशलाई पहिलोपटक जन्माएर पिता बनेका छन् ।

लेखनको क्रममा उनी निकैपटक चितवन, काठमाडौं र नेपालका अन्य जिल्लामा पुगे । प्रशस्त ग्रन्थहरूका पाना पल्टाउँदै धेरैको दैलो ढक्ढक्याए, कैयौंका कार्यालयमा धाउँदा चप्पल पनि खियाएका छन् । रामचन्द्रजी लौकिक आदलत त गएका छैनन् तर उनले उठान गरेका हरेक विषय भने परमेश्वरको आदलतमै उभ्याउनुपर्ने र त्यतैको यात्रामा धकेल्नुपर्ने देखिन्छन् । 'भावे तिष्ठन्ति देवताः' भनेझैं भावबाट नै आदलमा निसंकोच विषयहरू पेस गरेका छन् । आफूलाई कतै पनि वादी वा प्रतिवादीको रूपमा देखिएका छैनन् । कसैलाई वारेसनामा दिएका छैनन् । उनको लेखनीले कोरेका हरेक हरफहरू स्वतः स्फूर्त अदालत पुगेर पेश हुँदा वकिललाई दिनुपर्ने खर्च पनि जोगिएको छ । कल्पनामा होइन

यथार्थमा, विरोधका लागि होइन विचार बुझाउन यो ग्रन्थलाई पहिले अदालत पठाएका छन् । परमेश्वरबाट सफाई पाएपछि जनजनमा जानु लोककल्याणकारी हुने उनको ठम्याँइ छ ।

दिल के फफोले जल उठे सिनेकि दाग से
इस घरको आग लगि घरके ही चिराग से ।

भनेझैं घरमा आगो लगाएर न्यानो ताप्नेलाई झकझक्याउने काम गरेका छन् । कसैको खेदो नखनी, कसैको बिंडो नथामी, जीवनमा घटित, व्यवहारमा प्रतिबिम्बित, अनुष्ठानमा प्रकट भएका प्रमाणलाई समावेश गरिएको छ । दशांसले निम्त्याएको दशा, धर्मपरिवर्तनले थापेको धराप, परमेश्वरका नाम जप्दा आएको परनिर्भिरता, पश्चिममुखी प्रवृत्तिले ल्याएको पछौटेपनलाई राम्रोसँग चित्रण गरेका छन् । बाइबलको ठेक्का लिएर हिड्नेलाई येशूको आमा, येशूको भारतदेखि तिब्बतसम्मको यात्रा एवं मृत्युबारेमा सूक्ष्म विश्लेषण गर्न अनुरोध गरेका छन् । कुनकुन देशले किन बाइबल र येशूलाई अस्वीकार गरे ? खीष्टीयनले उपचारका नाममा धन्दा चलाए कि धर्म कमाए भन्ने सन्देहात्मक परिस्थिति अदालतमा पेश गरेका छन् । बाइबलका करणी र क्रिश्चियनका कथानीमा आएको अन्तरले कहाँ ? कसरी ? कसमाथि प्रहार र संहार गरेको छ भन्ने जानकारी राम्रोसँग दिएका छन् । वेद के हो ? पुराणले के दियो ? यसको औचित्यलाई केलाएका छन् । धर्म, धर्ति भुलेर चुरीफुरी गर्ने बामपुड्केहरूलाई सत्यतथ्यको क्याप्सुल खुवाएर उचाई देखाइदिएका छन् । उनको लेखाईमा गोरखालीपन, बुझाईमा देखिएको नेपालीपन, अध्ययन गर्दा प्रयोग भएको आधुनिकपनले गर्दा परमेश्वरको आदलतमा यो ग्रन्थले स्थान पाउँछ जस्तो लाग्दछ ।

बाइबलको लेखन कसरी भयो ? कतिजनाले लेखे, के हटाए, के थपे ? खीष्टीयनभित्र कति सम्प्रदाय छन् ? पुरानो र नयाँ करारले ल्याएको दरारदेखि बाइबलभित्रका अन्तरविरोधलाई चित्रण गरेका छन् । वेद र बाइबाल बोक्ने होइन अध्ययन गर्ने ग्रन्थ हो, पूज्नेभन्दा बुझ्ने शास्त्र हो भन्ने पक्षमा उभिएका छन् । धर्मको आडमा आफूलाई महान् देखाउने चुचुरेहरूका सोच र उदारताका दृष्टिले कसरी बाउन्ने बन्न पुगे भन्ने तथ्यलाई उजागर गरेका छन् । उनले गाली गरेका छैनन्, गलत गर्नेलाई सचेतमात्र गराएका छन् । धर्मपरिर्वतनले अफ्रिकालगायतका गरिब मुलुकमा

ल्याएको विनाश एवं वैज्ञानिकहंरूले बाइबललाई कसरी बुझ्े भन्ने बारेमा तथ्य पेश गरेका छन् । बाइबल र येशूलाई नमन गर्नेले जहाँ बाटो बिराएका छन् । मानवबाट निर्देशित अदालतमा कलियुगको प्रभाव पर्ने देखेर होला उनले परमात्माकै अदालतमा मुद्दा दर्ता गराएका छन् । परमेश्वरलाई कारवाही गर्नका लागि भनेका छैनन्, धर्मभिरूहरूलाई सुध्रिन परमावश्यक देखेका हुनाले त्यो फैसला उहाँबाट नै गराउन खोजेका छन् । रामचन्द्रजीले पुकार गरेका परमेश्वर अन्तरयामी छन् । परमेश्वरको निर्णय र आदेश मान्न ढकालजी तयार देखिन्छन् ।

पृथ्वीनारायण शाहपूर्व र त्यसपछि पनि ढकालवंशजहरूले प्रत्यक्ष वा परोक्षरूपमा नेपाल राष्ट्रको श्रीवृद्धिमा टेवा दिएका छन् । विशेषतः ज्योतिष, तन्त्र र साधना नै ढकालहरूको मूल गोडेटो देखिन्छ । रामचन्द्रजीले यीभन्दा भिन्न संस्कारलाई अनुभव गरी अध्ययन गरेका कारण यो ग्रन्थ पठनीय, संग्रहणीय र मननीय बनेको छ । मेरा मित्रलाई मूलघरमा बसेर, मूलबाटो हिँड्दै अघि बढ्ने प्रेरणा परमेश्वरले दिऊन् । उनको परिकृष्त सोच, गम्भीर अध्ययन, निष्पक्ष चिन्तन र आधुनिक विचारले राष्ट्रलाई टेवा दिन सकोस् भन्ने कामना गर्दछु । सम्पादनका क्रममा भएका भाषागत त्रुटिलाई मैले लिइन भने मित्रवर ढकाललाई फेरि अदालतमा जानुपर्ने परिस्थिति आउन सक्छ । खोजकर्तालाई समय हुँदैन त्यसैले त्यो दुःख उहाँलाई दिन चाहन्न । विषयगत सम्पादनको जिम्मा उहाँलाई नदिँदा म नै अदालत जानुपर्ने हुनाले अतिक्रम गरिनँ । यस नाद पुत्रले उहाँलाई अझ ऊर्जा देओस् । धर्मका आडमा चलेका गलत गतिविधि नियन्त्रण गर्न परमेश्वरले आदलतबाट फैसला गरिदिएमा मेरा मित्रमाथि न्याय भएको सम्झने थिएँ । उहाँलाई न्याय हुने पक्षमा म विश्वस्थ छु । उहाँका लेखनी, उहाँका चिन्तनलाई नमन गर्दै उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।

# मेरो भन्नु

विद्यालयमा पढाउँदै जाँदा पाठ्यक्रममा समावेश गरिएका ईश्वर सम्बद्ध धारणा आफैँमा बाभिएको देखेँ । ईश्वरीय अस्तित्वको बोध गर्न विद्यालयको समयपश्चात् मेरो गन्तव्य मस्जिद, चर्च र मन्दिर बन्न पुग्यो । एउटा विषयमा ईश्वरीय अस्तित्व स्वीकारेर पढाउनुपर्ने अर्को विषयमा पाष्टर, लामा, मौलाना र गुरुहरु भेट्न पुगेँ । ईश्वर छ वा छैन भनेर पत्ता लगाउन जब म चर्च, मन्दिर, मस्जिद र गुम्बाभित्र पस्थेँ तब मेरा मन प्रफुल्ल र आनन्दित हुन्थ्यो । त्यहाँ आउने साधकहरु देखेर अचम्मको तरंग पैदा हुन्थ्यो । उनीहरूको परमेश्वरप्रतिको साधना तपस्या देखेर अनौंठो लाग्दथ्यो । त्यहाँ ठूलो भीड देखिन्थ्यो । छिटो जान र चाँडै पुग्न आफ्नै आफ्नै शैली अपनाएका हुन्थे । कोही क्रुसको अगाडि बसेर थपडी मार्दै, कोही आमेन भनेर चिच्याउँदै, कोही शंख घण्ट बजाउँदै, कोही नाङ्गो शरीर लडीबुडी गर्दै, कोही ध्यानमग्न हुँदै, कोही घोप्टो परेर ठूला-ठूला स्वरले कोलाहल छोड्दै, कोही कपाल त कोही जुँगा मण्डन गरेर, कोही पहेंलो त कोही सेता काला वस्त्र पहिरेर, कोही नाँच्दै, हाँस्दै त कोही काला बुर्काले मुख छोपेर परमेश्वरकहाँ पुगेको देख्दा आश्चार्य लाग्दथ्यो । पुर्खाले मनलाई नम्र बनाएर जीवनलाई शून्यताको बोध गरेर जीवन व्यतित गरे । सत्य र असत्यको भेदलाई छुट्याउँदै, केलाउँदै, असत्यसँग मुकाबिला गर्दै सत्य जोगाउन ईश्वरको अदालतसमक्ष पुगेका थिए । त्यही कथा त्यही दुर्दशा फेरी दोहोरिएको देखेर मेरो लेखनीलाई घच्घचाइरह्यो, तानिरह्यो अनि म परमेश्वरको अदालतमा वेद, बाइबल र कुरान बोकेर लागेँ । म चर्च मस्जिद, मन्दिरभित्रका छलकपट र झुटको विरोधी भएछु । सबैको अदालत एकै छ जुन सर्वोच्च हो सबै त्यही पुग्छन् । आफ्नो गवाही अनि मूल्याङ्कन दिन र गराउन खोज्छन् । यो अदालत सदा खुल्ला रहन्छ । यसको कुनै साँध, सिमाना, भित्तो, पर्खाल छैन । जहाँ प्रधानन्यायाधीश परमेश्वर एकमात्र छन् । यहाँ घुसपैठ चल्दैन,

निर्दोष पशुपंक्षीको भोकपछिको भोजनमा कोही लोभिदैनन् । ठूला ठूला स्वरले गीत गाउँदै गितार बजाएर सुनाउँदैमा कोही मख्खिदैन । घोप्टो परेर चिच्याउँदैमा कोही पग्लनेवाला छैन । उनी त उसैलाई न्याय दिन आतुर छन् । सबैभन्दा पहिले उनीद्वारा कोरिएका प्रेम, समर्पण, मेलमिलाप, शान्ति, अहिंसा र प्रशंसाको पुरानो पवित्र मार्ग हुँदै आउँछन् ।

पछिल्लो समयमा धर्मशास्त्र बोकेर दशांशको निम्ति परमेश्वरलाई बेच्नेहरू, एउटा सम्प्रदाय (जात) ले अर्को सम्प्रदाय (जात) लाई सैतान र झुटा भन्नेहरू, चर्चमा पसेर नारीका अस्मिता लुट्नेहरू, धर्मका नाममा राजनीति गर्नेहरूप्रति यस किताबमार्फत मैले निर्मम प्रहार गरेको छु । को हिन्दू, को ख्रीष्टियन, को मुस्लिम निःसन्देह भुलेको छु । यो पुस्तक अध्ययनपछि तपाईले गर्नु भएको आभास, अनुभूति मै हूँ । गन्ध र दुर्गन्ध मै हूँ । तपाई जे भन्दै हुनुहुन्छ विल्कुल ठीक भन्दै हुनुहुन्छ । सबै कुरा स्वीकार्ने आँट मसँग छ । यो गर्व होइन गौरव हो, अहम् होइन स्वाभिमान हो । यसका विषयवस्तु अत्यधिक र शास्त्रसंमत छ भन्ने बुझियोस् । पुस्तकले सत्यतालाई रोजेको छ, परमेश्वरलाई अंगालेको छ । नयाँ मार्गलाई सफा, स्वच्छ बनाउने झिनो प्रयास गरेको छ ।

मलाई आध्यात्मिक महासागरमा गोताखोर बनाउने मेरा आदरणीय गुरुदेव संस्कृतिविद् हरिप्रसाद सोडारीले अथक प्रयास गर्नु भएको छ । उहाँले यस पुस्तकको सम्पादनको साथै लेखन यात्राको मार्गमा अघि बढ्न दिनुभएको प्रेरणाप्रति नमन गर्दछु ।

पुस्तक लेखनलाई सहज बनाउन अमूल्य समय र आशीर्वाद दिनुहुने गलेश्वर आश्रम देवघाट तनहूँका अनन्त श्रीविभूषित महामण्डलेश्वर स्वामी आत्मानन्द गिरि, हरिहर सन्यास आश्रम देवघाटधाम तनहूँका पीठाधीश एवं नेपाल सन्त समाजका अध्यक्ष स्वामी ज्ञानानन्द सरस्वती, महेश सन्यास आश्रम देवघाट तनहूँ नेपालका अध्यक्ष १००८ स्वामी रमणानन्द गिरिज्यूहरूप्रति अत्यन्तै ऋणी भएको छु ।

परमेश्वरको अदालतमा वेद र बाइबललाई असाध्यै माया गरी सल्लाह, सुझाव दिनुहुने गुरूवर नेपाल संस्कृत विश्वविद्यालय दाङका उपकुलपति प्रा.डा. यादव लामिछाने, त्रिभूवन विश्वविद्यालयको इतिहास विभागका प्रा.डा. राजकुमार पोखेल, प्रा.डा नारायणप्रसाद गौतम, प्रा.डा.

श्रीरामप्रसाद उपाध्याय, नेपाल संस्कृति विश्वविद्यालयका प्रा.डा गुरुप्रसाद सुवेदी र नेपालका वरिष्ठ पत्रकार राजेन्द्र बानियाज्यूहरूको चरणकमलमा कृतज्ञता गर्न पाउनु मेरो लागि सौभाग्य हो । राजनीतिक विश्लेषक प्रा.डा. सुरेन्द्र के.सी. गुरुवरले स्वास्थ्य र व्यस्तताले साथ नदिंदा पनि चेलोको उत्साहलाई वर्द्धन गराउँदै दिनुभएको आशीर्वादले ऋणी भएको छु ।

पाण्डुलिपि अध्ययनपश्चात् तार्किक सल्लाह सुझाव एवम् समर्थन गर्नुहुने हिन्दू जागरण केन्द्र नेपालका अध्यक्ष रामकृष्ण उपाध्याय, धार्मिक विश्लेषक मोहन लामा रुम्बा, वाचन सम्राट पं. भीमकान्त पन्थी, वाचन प्रवीण पं. दीनबन्धु पोखेल, विश्व हिन्दू महासंघ नेपालका वरिष्ठ उपाध्यक्ष एवं प्रवक्ता भरत पौडेल, बौद्ध जागरण केन्द्र नेपालका संस्थापक तथा सल्लाहकार सूर्य लोप्चन तामाङ्ग, हिन्दू युवा संयोजन नेपालका संयोजक अभिषेक जोशी, स्कोन नेपालका कृपालु गौरसुन्दर दास, आध्यात्मिक लेखक नारायण विन्दु अधिकारीज्यूले यस कृतिलाई अत्यन्तै माया गरेर अदालतको साक्षीको रूपमा उभिदिनुभएकोमा उहाँहरूप्रति विशेष ऋणी छु ।

नेपाल संस्कृति विश्वविद्यालय दाङका पूर्व उपकुलपति प्रा.डा. कुलप्रसाद कोइराला, नि. ब. कार्यकारी उपकुलपति प्रा.डा रमेश ढकाल, त्रिभुवन विश्वविद्यालय कीर्तिपुरका विभागीय प्रमुख शंकर थापा, त्रिचन्द्र कलेज काठमाडौँका प्रोफेसर गोविन्द उपाध्याय, शहीद स्मृति बहुमुखी क्याम्पसका सह-प्राध्यापक लक्ष्मण अर्याल, शहीद स्मृति बहुमुखी क्याम्पसका पूर्वसहायक क्याम्पस प्रमुख आनन्द लामिछाने, अविरल डि.सी., प्रेस संगठन नेपालका केन्द्रीय सदस्य शिशिर सिंखडा तथा न्यू २४ टेलिभिजन सुदूरपञ्चिमका ब्यूरो प्रमुख दीपक नेपालज्यूहरूले यस कृतिलाई आद्यपान्त हेरेर दिनुभएको सल्लाहले म ऋणी भएको छु ।

यस पुस्तकमा उल्लेख भएका कतिपय विचारहरूप्रति फरक मत राख्दै पुस्तक लेखनमा प्रत्यक्ष एवम् अप्रत्यक्ष रूपमा सहयोग एवम् शुभेच्छा प्रकट गर्नुहुने प्रगतिशिल बाइबल शिक्षक सुकदेव गिरि, खीष्टियन महासंघका अध्यक्ष सी.बी गहतराज, नेपाल जागृति चर्चका पाष्टर भरत गिरि, नेपाल खीष्टीयन समाजका महासचिव डिल्लीराम पौडेल, राष्ट्रिय मण्डली संगति नेपालका पूर्व महासचिव सिमोन पाण्डे, खिष्टियन जगतका ख्याती प्राप्त मानव अधिकारवादी नेता डा. के.वि. रोकाहा, खिष्टियन पत्रकार दिनेश श्रेष्ठप्रति आभारी छु ।

प्रस्तुत पुस्तक तयार गर्ने क्रममा धेरै विद्वान्हरु एवम् अग्रजहरूका प्रकाशित ग्रन्थ पत्रपत्रिका तथा आधिकारिक इन्टरनेट साइटमा उल्लेख गरिएका आलेखहरूको सहयोग लिइएको छ । सबैप्रति कृतज्ञता ज्ञापन गर्दछु । पुस्तकको लागि सल्लाह र सुझाव दिनुहुने आदरणीय व्यक्तित्व प्रेम रिमाल, टीका चापागाइँ, महेश्वर लामिछाने, ऋषि दुवाडी 'आचार्य', गणेश ढकाल र प्रकाश अधिकारीप्रति आभार प्रकट गर्दछु ।

यो मेरो परिश्रमलाई पुस्तकको रूपमा प्रकाशन गर्नका लागि अग्रसरता देखाउनुहुने स्रष्टा सूर्य बी. सी. र बि. एन. पुस्तक संसारलाई मुरीमुरी धन्यवाद दिन चाहन्छु ।

पुस्तक लेख्दै गर्दा पुस्तककै माध्यमबाट माफी माग्दछु । भूल सुधारको अपेक्षा गर्दै सल्लाह सुझावको समेत आशा राख्दछु । प्रथम प्रकाशनमा भएका कमी-कमजोरी आगामी प्रकाशनमा सुधार्ने वाचा गर्दछु । यो कुनै धर्म सम्प्रदायप्रतिको वितृष्णा, विरोध र आवेग होइन केवल विकृतिको पर्दाफासमात्रै हो । यदि पुस्तकको मान्यताभन्दा विपरीत बुझाईले कहीँ कसैमा भ्रम, शङ्का उब्जिए लेखकको 'हूँकार' सम्झिदिन अनुरोध गर्दछु । मुद्दा दायरा गर्नेछु परमेश्वरको अदालतमा, "तिम्रा होश, चेत, सबै इन्द्रिय खुल्नेछन् त्यहाँ पुगेपश्चात् अनि सत्य र असत्य दुबैको समाप्ति हुनेछन् ।" आज पनि हतार छ म लागैँ । उतैतर्फ सबै सम्प्रदायको विसङ्गति बोकेर परमेश्वरको अदालततर्फ आउनुहोस् सँगै जाऔँ ।

**रामचन्द्र ढकाल**

## विषयसूचि

# इसाई र इस्लामको बीज

वर्तमान विश्व भूगोलको नक्शामा धर्मको विस्तारगत रूपरेखा केलाउने हो भने हामीलाई तीन धर्मिक सम्प्रदायको अधिवर्चस्व प्राप्त हुन्छ- सनातन, खीष्टियन तथा ईस्लामधर्म । यद्यपि सेमेटिक धाराभन्दा आफूलाई पृथक् बताउने अरू पनि धेरै धार्मिक समुदायहरु विद्यमान छन् । खीष्टियन तथा इस्लामधर्मले पछिल्लो समयमा साम - दाम - दण्ड - भेद आदि सबै रीतिबाट आफूलाई अग्रस्थानमा उभ्याएको छ । मूलतः साझा आदमकै वंशवृक्षमा उनिएका यी दुई धार्मिक समूह आफ्नो साझा पिता अब्राहामसम्मको इतिवृत्तमा एक छन् । अब्राहामपछि उनका दुई छोरा - इसहाक र इस्माइलबाट क्रमशः यहुदीकुल र अरबकुलको विरासत पाएर त्यसैबाट नश्लीय आधारमा इसाईधर्मका संस्थापक र इस्लामधर्म संस्थापक पृथक् पृथक् धर्मको स्थापना गरेको ऐतिहासिक प्रमाण भेटिन्छ ।

साझा पुर्ख्यौली संस्कृति र इतिहास भएका इसाईमत र इस्लाम सम्प्रदायमा नश्लीय - विश्वासगत तथा शास्त्रीय आधारमा नितान्त भिन्न प्रतीत हुन्छन् । खीष्टियन सम्प्रदायमा बाइबल प्रामाणिक धर्मशास्त्र हो भने इस्लाम सम्प्रदायमा कुरआन प्रामाणिक धर्मशास्त्र हो । दुवै धर्मशास्त्रहरूको वस्तुपरक अध्ययन गर्दा यी सम्प्रदायका बीच परस्पर आध्यात्मिक मतभेद र सैद्धान्तिक विरोधको अनुभूति हुन्छ । हुन त, "मुण्डे मुण्डे मतिर्भिन्ना"को सिद्धान्त सर्वव्यापी छ । हामी यहाँ मूलतः निम्न आधारमा खीष्टियनर इस्लामी सम्प्रदायमा विद्यमान नश्लीय, विश्वासगत तथा शास्त्रीय आधारमा यी सम्प्रदायहरूको विद्यमान परस्पर विरोधको यस आलेखमा संक्षिप्त चर्चा गर्ने छौं । विचार गर्नुपर्ने विषय के छ भने अध्येतावर्गहरूमा खीष्टियन तथा इस्लाम सम्प्रदायको आध्यात्मिक क्षेत्रको परिज्ञान हुन आवश्यक छ ।

# हिन्दूधर्मका शास्त्रहरू

ऋषिमुनिहरूले साधना गर्दा प्राप्त गरेका अपरिवर्तनशील ज्ञानराशि संकलित पुस्तकलाई शास्त्र भनिन्छ । संसारमा एउटामात्र शास्त्र छ-वेद । वेद कुनै व्यक्तिविशेषको रचना होइन । ऋषिमुनि वा महापुरूषद्वारा लिखित विचार र विज्ञानको दस्तावेजलाई ग्रन्थ भनिन्छ । उदाहरणका लागि पुराण, महाभारत, रामायण, कुरान, बाइबल सबै ग्रन्थ हुन् किनकि यी सबै व्यक्तिविशेषबाट तयार भएका रचना हुन् । संसारमा धेरै धार्मिक मतसम्प्रदायहरु विद्यमान छन् । प्रायः जुन धर्मसम्प्रदायहरूले आफ्नो धार्मिक विधानलाई ग्रन्थरूप दस्तावेजमा सुरक्षित, संगृहीत गरेका हुन्छन् तिनको अध्यात्मिक खाँबो अधिक बलियो हुन्छ । हिन्दूधर्मको परिप्रेक्ष्यमा हेर्दा धर्मचिन्तकहरूले परापूर्वकालदेखि तात्कालिक विद्यमान संस्कृतिगत मान्यतालाई ग्रन्थका रूपमा संकलन गरेका छन् । वेदशास्त्र यस धर्मका प्राचीन ग्रन्थरत्न हुन् । वेदहरूमा ऋग्वेदको स्थान सांस्कृतिक, धार्मिक तथा ऐतिहासिक रूपमा अधिक महत्वपूर्ण रहेको छ । वेदपछि तदनुकूल ब्राह्मणग्रन्थ तथा श्रौतसूत्र, गृह्यसूत्र, कल्पसूत्रादि रचनामा तयार गरिएको छ । समाज गतिशील छ । समाजका सबै सामाजिक संस्थाहरूमा कुनै न कुनै रूपले गतिशीलतालाई प्राप्त हुन्छन् । प्रायः धर्मले गतिशीलतालाई रूचाउँदैन तथा स्थिरतालाई अधिक महत्व दिन्छ । यसै कारण संसारमा विद्यमान धेरै धर्महरूले अहिले प्राचीन मान्यता, सामाजिक आचरण तथा संस्कृतिलाई काखी च्यापेको देखिन्छ । हिन्दूधर्मभित्रको दर्शन, विज्ञान र ज्ञानले यसका जीवनलाई तदनुकूल बनाएका छन् । हिन्दूग्रन्थहरूले समाज, संस्कृति र संस्कारलाई युगानुकूल रूपान्तरण गरेका छन् ।

ऋग्वैदिक कालमा विद्यमान यज्ञ संस्कृतिमा व्यापक परिवर्तन आउँदै गयो । वर्तमान समयमा विद्यमान उपासना, भक्तिपरम्परा त वैदिक सनातन धर्मका लागि सर्वथा नौलो आचरण होइन । जे होस्, वर्तमान

हिन्दूधर्मका अनुयायीका लागि ग्रन्थहरूको आकर ज्ञान एवं अनुभवको अत्यन्त समृद्ध तथा भीमकाय रहेको छ । मूलतः वेद, उपनिषद् आदि शास्त्र र पुराण, रामायण, महाभारतजस्ता ग्रन्थको मात्र खाँचो रहन्छ यसको सेरोफेरोमा रहेर अदालतसमक्ष आफ्ना गवाहीअगाडि बढाउँछौं । अस्तु -

वेदहरूलाई श्रुति पनि भनिन्छ, जसको प्रवाह श्रुतिपरम्परामा संञ्चारित छ । त्यस्तै आदिकालमा मन्दमतिका, वेदपाठका लागि अनधिकारी एवं स्त्रीजातिका लागि वेदहरूको अर्थस्मरण हेतु पुराण ग्रन्थको रचना भएको मानिन्छ । मत्स्यपुराणमा पुराणको लक्षण बताइन्छ -

सर्गश्च प्रतिसर्गश्च वंशो मन्वन्तराणि ।
वंशानुचरितं चेति पुराणं पञ्चलक्षणम् ॥

मत्स्यपुराण (५३/६४)

अर्थात्, 'सर्ग (सृष्टि), प्रतिसर्ग (प्रलय), वशंवर्णन, मन्वन्तरहरूको उल्लेख तथा कथाहरू - पुराणका पाँच लक्षण हुन् ।' पुराणहरूको उपयोगितालाई हेरेर महाभारतमा आउँछ- इतिहासपुराणाभ्यां वेदं समुपबृंहयेत् ।
अर्थात्, 'इतिहास र पुराणद्वारा वेदार्थको प्रकाश हुन्छ ।' पुराणहरूमा स्पष्ट रूपमा एकांगी विषयको वर्णन प्राप्त हुँदैन । धेरै देवीदेवताहरूको उल्लेख, अवतारवादको विषय, ईश्वरको साकार-निराकार विषय, भक्तिमार्गको विषय, भूगोल र तात्कालिक शासन प्रणालीका विषयहरु पुराणहरूमा रहेको देखिन्छ । पद्मपुराणले पुराणशास्त्रहरूलाई सात्विक, राजसिक र तामसिक गरेर तीन प्रकारले विभाजन गरेको छ -

वैष्णवं नारदीयं च तथा भागवतं शुभम् ।
गारूडं च तथा पाद्मं वाराहं शुभदर्शने ॥

अर्थात् - "विष्णु, नारद, भागवत, गरूड, वराह तथा पद्मपुराणहरु दर्शनमा शुभ पुराण (सात्विक ) हुन्" ।

ब्रह्माण्डं ब्रह्मवैवर्त मार्कण्डेयं तथैव च ।
भविष्यं वामनं ब्राह्मं राजरानि निबोधत ॥

अर्थात्, "ब्रह्माण्ड, ब्रह्मवैवर्त, मार्कण्डेय, भविष्य, वामन तथा ब्रह्मपुराण राजसिक पुराण हुन् ।"

मात्स्यं कौर्मं तथा लैंगं शैवं स्कान्दं तथैव च ।
आग्नेयं च षडेतानि तामसानि निबोधत ॥

अर्थात्- "मत्स्य, कूर्म, लिंग, शिव, स्कन्द तथा अग्नि पुराण तामसिक पुराण हुन् ।"

पुराण शास्त्रहरूलाई लिएर धेरै धर्मचिन्तकहरूमा धेरै प्रकारका धारणा रहेका छन् । हामीले अधिकांश घरमा श्रीमद्भागवद् महापुराणको महिमा गाइएको सुन्छौं । मूलतः यसको भाषा र विषयगठनलाई हेर्दा धेरैले यसलाई संस्कृत साहित्यको धेरैपछिको उपज पनि मान्छन् । पुराणहरूको वर्णनीय विषय फरक फरक भए पनि सबैले नैतिक सदाचार र आध्यात्मिक जीवनको महत्वलाई प्रकाशित गरेका छन् । वेदका मन्त्र/ऋचाहरूको उपयोग विवाह, व्रतबन्ध आदिमा प्रयुक्त हुन्छन् भने पुराणका प्रसंग आदि भक्तिको अर्थविस्तार तथा केही अंशमा कृत्याकृत्यको मीमांसातर्फ प्रेरित छन् । पुराणहरूको विषयवस्तु फरक भए पनि वेदमा भेद छैन । वेदको सुगन्धमा रहेर तयार गरिएका सबै ग्रन्थहरु यसको फेदमा शरणागत छन् भनेर परमेश्वरको अदालता आफ्नो गवाइ पेश गर्ने अनुमति चाहन्छु ।

# सर्पको पकडमा वेद कि बाइबल ?

हिन्दूग्रन्थहरूमा नाग र सर्पको राम्रो व्याख्या पाइन्छन् । नागमा विष हुँदैन तर सर्पमा विष हुन्छ । नाग १ जातीको रूपमा पनि देखाइएको छ । विभिन्न लोकमा नाग र सर्प रहेको देखिन्छ । हिन्दूधर्म एवम् परम्परामा सर्पलाई इर्ष्यायुक्त जीवको रूपमा उल्लेख गरिएको छ । विष्णु, शिव, कृष्ण र बुद्धको वरिपरि सर्प भएको चित्र र प्रसङ्ग आउँछन् । बृन्दावन निवासी कृष्णले सर्पसँग खेलेको नाचेको चित्र र प्रसङ्ग गहिरिएर अध्ययन गर्दा सर्पलाई आफ्नो अधीनमा राखेको देखिन्छ । वास्तवमा कलिया भन्ने सर्पको आतङ्कलाई हटाउनको लागि कृष्णले उसलाई यमुनाबाट लखेट्न चाहन्थे । त्यसै क्रममा कृष्ण र कलीयाबीचमा लामो समयसम्म द्वन्द हुन्छ । अन्तमा उसलाई यमुनाको नदीबाट बाहिर निकालिन्छ ।

सृष्टिसँगै नागको सम्बन्ध जोडिएको छ । यिनीहरूले ब्राह्मण्डको रक्षा जीवको सुरक्षा गरेका छन् । त्यस्तै विष्णु शेषनागमाथि सुतेको, शिवजीले सर्पको माला लगाएको, बुद्धलाई कोब्रा सर्पले सुरक्षा दिएको चित्र, प्रसङ्गहरु देख्न र सुन्न पाइन्छ । यी प्रसङ्गको गहिराईमा पुगेर विश्लेषण गर्दा दुष्ट स्वभाव भएका सर्पहरूलाई परमेश्वरको शक्तिको प्रभावले दुष्टता र धुर्ततालाई सत्यतामा परिणत गराइदिएको देखिन्छ ।

संसारिक जीवनलाई हेर्दा सर्प खतरनाक विषालु प्राणी भएतापनि सर्पमा भएका विषलाई सदुपयोग गर्न सके मानवजातिलाई फाइदा हुने देखिन्छ । सर्पले इकोस्टिममा ठूलो गुण लगाएको कारण यसको विनाश रोक्न हाम्रा आदरणीय ऋषिमुनिहरूले सर्पको पुजा गर्ने प्रचलन हिन्दू

पर्धैंरामा तिथि र मितिमा विशेष नागलाई पुजा गरी केही अर्पण गरेको देखिन्छ । पछिल्लो समयमा सर्पको विनाश रोक्न सर्पको पुजा (संरक्षण) गर्ने कार्य वैज्ञानिकहरूले समेत प्रशंसा गरेको पाइन्छ ।

अर्कोतिर पवित्र बाइबलमा भनिएको शैतानरूपी सर्प-अजिङ्गर परमेश्वरको प्रधान स्वर्गदुत प्रिय लुसिफर सदैव परमेश्वरसँग बस्दै गर्दा पनि परमेश्वरको राज्यबाट पतन भएर संसारलाई बहकाउने शैतान बनेको भनी बाइबल गवाही दिन्छ । यसरी परमेश्वरका दुईवटा पवित्र मानिने शास्त्रमा एउटामा ईर्ष्याको कारण सर्प बनेकाहरूलाई परमेश्वरले बशमा राखी उद्धार गरेको र अर्कोमा परमेश्वरको साथमा रहेको चम्किलो तारा लुसिफर सर्प बनेको देख्दा सर्पको बशमा बाइबल हो कि वेद भनी परमेश्वरको अदालतमा मुद्दा दायर गरेको छु ।

# मनुको राज्यव्यवस्था विभेदकारी थियो त ?

हिन्दू धर्मग्रन्थ मनुस्मृतिमा नारी र शुद्रको स्थितिलाई तल्लो स्तरमा राखेर वर्णन गरिएको मन्त्रहरु कतै भेटिँदैन तर संशोधित मनुस्मृतिभित्र नारी र शुद्रलाई निन्दा गरिएको छ । संशोधित मनुस्मृतिका थुप्रै श्लोकहरुमा धार्मिक रुपमा नै नारी र शुद्रलाई दास बनाइएको छ । पुरुष समकक्ष नारीलाई स्थान दिइएको छैन । मनुको राज्यव्यवस्थामा नारी र शुद्रहरुमाथि अन्याय अत्याचार भएको देखिँदैन । मनुस्मृतिमा मात्र नभई वेद मन्त्र र गीताका श्लोकहरुमा पनि विभेद गरेको भेटिँदैन ।

- "रुचन्नो धेही ब्राह्मणेषु रुचं राजसु नस्कृधी । रुचं विश्येषु शुद्रेषु मयि धेही रुचा रुचम् ।"यजुर्वेद, १८ । ४८

अर्थात्, हे ईश्वर ! हामी ब्राह्मण, क्षत्रीय, वैश्य र शुद्रमा तेजस्विता प्रदान गर्नुहोस् ।

- "प्रियं मा दर्भ कृणु ब्रह्मराजन्याभ्यां शूद्राय चार्याय च ।"अथर्ववेद, १९ । ३२ । ८

"हे ईश्वर ! मलाई ब्राह्मण, क्षत्रीय, वैश्य र शूद्र सबैको प्रिय बनाउनुहोस् ।"

- "मित्रसय मा चक्षुषा सर्वाणि भुतानि समीक्षन्ताम् ।"-यजुर्वेद, ३६ । १८

अर्थात् "हे देव ! म सबै प्राणीहरूलाई मित्रका रुपमा देखूँ ।"

- "न कि देवा इनीमसी न क्या योपयामसी । मन्त्र श्रुत्यं च रामसी ।"सामवेद २ । ७ । २ (पूर्वार्चिक)

"हे देव ! वेदमन्त्रको निर्देशानुसार आचरण गर्नेवाला हामी याजक न कुनै धर्मविरुद्ध कार्य गर्छौं र न कसैलाई हानी नै पुऱ्याउँछौं ।

● "समानी प्रपा सह वोऽन्नमागः समाने योक्त्रे सहा वो युनज्मि ।
सम्यञ्चोऽग्निं सपर्यतारा नाभिवाभित : ।।"अथर्ववेद, ३ । ३० । ६
अर्थात्, "हे समानताको कामना गर्ने मानिसहरू हो ! तिमीहरूको पानी खाने ठाउँ एउटै होस् र अन्नको भाग सँगै होस् । तिमीहरूलाई हामी एउटै प्रेमपाशमा आबद्ध गराउँछौं । जसरी पाङ्ग्राका आराहरू धुरामा आश्रित भएका हुन्छन् उसै गरी तिमीहरू पनि एउटै खाले फलको कामना गरेर प्रकाशस्वरुप परमात्मा (अग्निवेद) को उपासना गर ।"

● "सङ्गच्छध्वं संवदध्वं सं वा. मनांसी जानतम्।
देवा भागं यथा पुर्वे सञ्जानाना उपासते ।।"-ऋग्वेद, १० । १९१ । २
"हे मानिसहरू हो ! आपसमा मिलेर हिँड; आपसमा मिलेरै बोलचाल गर; मनको कुरो आपसमा मिलेर आदानप्रादान गर र नयाँ कुरो सिक । उहिलेका सज्जनले आपसमा मिलेर यज्ञको उपासना आदिका काम गरेझैं तिमीहर पनि एकमत होओ ।"

● "समानो मन्त्रः समितिः समानी समानं मनः सहा चित्तमेषाम् ।"ऋग्वेद, १० । १९१ । ३
"हे मनुष्य हो ! तिमीहरू सबैको प्रार्थना एकै होओस् । आपसी आत्मीयता एकै होओस् । मन्त्रविचार एकै होओस् ।"

● "समानी व आकुतिः समाना हृदयाने वः ।
समानमस्तु वो मनो यथा वः सुसहासती ।।"-ऋग्वेद, १० । १९१ । ४
"हे मनुष्य हो ' तिमीहरूको हृदय एकै होओस्; तिमीहरूको मन एकै होओस् र संकल्प एकै होओस् । त्यसैबात सङ्गठित भए तिमीहरू आ-आफ्ना सबै काम पुरा गर्न सिक ।"

● "विद्याविनयसम्पन्ने ब्राह्मणे गवि हस्तिनि ।
शुनि चैव श्वपाके च पण्डिताः समदर्शिन ।।"- गीता, ५ । १८
"ज्ञानीहरूले (सच्चा ब्रह्मण) विद्या र विनम्रतायुक्त ब्राह्मण, गाई, हात्ती र कुकुर, चाण्डाल, सबैमा समान दृष्टि राख्छन् ।
यदि कसैले समान दृष्टि राख्दैन भने त्यो ब्राह्मण हुन सक्दैन ।

● "सर्वभुतस्यमात्मानं सर्वभुतानि चत्मनि ।
ईक्षते योगयुक्तात्मा सर्वत्र समदर्शनः ।।"- गीता, ६ । २९

"जसको आत्मा योगले युक्त भएको छ उसले सबै जीवहरूमा म -ईश्वरलाई र म-ईश्वरमा नै सबै जीवहरूलाई देख्छ र सबैलाई समान भावले हेर्दछ ।

- "आत्मौपम्येन सर्वत्र समं पश्यति योऽर्जुन ।

सुखं वा यदि वा दुःख स योगी परमो मतः ॥"- गीता ६ । ३२

"हे अर्जुन ! जसले आफुसँग तुलना गर्दै सबैलाई बराबर देख्दै अरूको सुख-दुःखमा समान भएर अनुभव गर्दछ ऊ नै पूर्ण योगी हो।"

- "चातुर्वण्यं मया सृष्टं गुणकर्मविभागशः ।"-गीता, ४ । १३

"मैले नै मानव समाजलाई प्रकृतिका तीन गुण (सत्वः रजः र तम) तथा कर्मअनुसार चार वर्ण विभाजन गरेको छु ।

- "ममैवांशो जीवलोको जीवभुतः सनातन ।"- गीता, १५ । ७

"संसारका सबै प्राणीहरु मेरै नै अंश हुन् ।"

वेद र गीता आदि शास्त्रमा शुरुदेखि अन्तसम्म अध्ययन गर्दा वर्णाश्रम धर्मले परिपुर्ण भईकन सबै वर्णको सम्मान गरेको पाइन्छ । वैदिक सनातनकालमा कुनै जातभात नै थिएन । हाम्रा प्राचीन महर्षिहरु कपिल, वाल्मीकि, विश्वामित्र, वशिष्ठ, जैमिनि, व्यास आदिद्वारा सङ्कलित पवित्र शास्त्रमा जातीय भेदभाव र छुवाछुतको दुर्गन्ध थिएन । महाभारतका पात्रहरु अर्जुन, युधिष्ठिर, कर्ण, दुर्योधन, व्यास आदिको पनि कुनै थर थिएन । महाभारतकालमा पनि जातीय छुवाछुतको प्रचलन थिएन । मानिसले गर्ने कर्मको आधारमा केवल वर्णको मात्र व्यवस्था थियो । वर्णको आधारमा छुवाछुत उच र निचको विभेद थिएन ।

रामायण अध्ययन गर्दा त्रेतायुगमा स्वयम् भगवान् रामले शूद्रकुलमा उत्पन्न भएकी शबरीले दिएको जुठो बयर खानुले छुवाछुत र जातीय भेदभाव नभएको प्रष्ट देखिन्छ ।

छुवाछुतलाई पहिलोपटक कानुनी मान्यता प्रदान गर्ने शासकहरु दक्षिण एसियाका हिन्दू वर्णाश्रम मान्ने शासकहरु नभई बेलायती उपनिवेशी गोराहरूको सरकार थियो । सन् १८५० देखि सन् १९२० सम्म बेलायती उपनिवेशी शासकहरूले राज्यका तर्फबाट कानुन बनाई दलित जातका मानिसलाई सरकारका माथिल्ला पदमा नियुक्ति गर्न प्रतिबन्ध लगाए । फ्रेन्क डी. जार्टले आफ्नो पुस्तकमा (सन् २००० मा प्रकाशित) यसबारेमा विस्तृत उल्लेख गरेका छन् । **कास्ट अफ माइन्ड** नामको आफ्नो

पुस्तकमा निकोलस डर्कले भनेका छन्-"उपनिवेश शासन शुरु हुनुपूर्व जातव्यवस्था केवल कामसँग सम्बन्धित थियो तर उपनिवेशी शासकले शुद्रहरूलाई दलित नामकरण गर्दै शुद्रहरूलाई कानुनद्वारा सामाजिक बहिष्कारमा पुऱ्याए । उपनिवेशी शासकहरु समाजमा रहेको परम्परागत विभाजनलाई गहिरो बनाई, विभाजनको रणनीतिलाई संस्थागत गर्न चाहन्थे । यसो नगरी उपनिवेशको संस्थापन गर्न गाह्रो हुन्छ भन्ने उनीहरूले राम्ररी बुझेका थिए । (निःसङ्कोच अभिव्यक्ति, पेज ३९, -प्रा. डा. युवाराज सङ्ग्रौला)

प्रसिद्ध लेखक एवम् संस्कृतविद् हरिप्रसाद सोडारीले आफ्नो पुस्तक धर्मभित्रको विज्ञान पृष्ठ नं. ९६ मार्फत छुवाछुत हिन्दूधर्ममा भित्रिएको आयातीत कुप्रथा हुन वैदिक शास्त्रले मानिसलाई जन्म र जातको आधारमा छुवाछुत गरेको पाइँदैन भनी शास्त्रीय गवाही पेश गरेका छन् ।

पुर्वीय जगत्का प्रसिद्ध दार्शनिक स्वामी प्रपन्नाचार्यले बहुचर्चित पुस्तक 'वेदमा के छ ?' मार्फत वेद नै हिन्दूहरूको प्रमाणिक ग्रन्थ र ईश्वरको श्रुति भएको बताएका छन् साथै वेदमा वर्ण व्यवस्था भएता पनि जातीय छुवाछुत नभएको स्पष्ट पारिएको छ ।

वैदिक कालका नारी शुद्रको तात्कालिक स्थिति कस्तो थियो वेद मन्त्र (ऋचा) हरु जस्ताको तस्तै अध्ययन गरौं ।

१. ऋग्वेद, १० औं मण्डलको ८५ औं सुक्तका ४७ मन्त्रका द्रष्टा ब्रह्मवादिनी ऋषिका **सुर्या** हुन् जो नारी नै हुन् ।

२. ऋग्वेद प्रथम मण्डलको १२६ सुक्तका ७ वटा मन्त्रका द्रष्टा ब्रह्मवादिनी ऋषिका **स्वनय रोमशा** हुन् जो एक नारी नै हुन् ।

३. ऋग्वेद आठौँ मण्डलको प्रथम सुक्तका ३४ मन्त्रका द्रष्टा ऋषिका **शश्वती** नारी नै हुन् ।

४. ऋग्वेद दशौं मण्डलको १२५ सुक्तका ८ वटा मन्त्र देवी सुक्तको नामले प्रसिद्ध छन् जसको द्रष्टा ऋषिका **वागाम्भृणी** हुन् ।

५. ऋग्वेद आठौँ मण्डल ९१ औं सुक्तका ७ वटा मन्त्रका द्रष्टा ब्रह्मवादिनी ऋषिका **अपाला आत्रेयी** नारी नै हुन् ।

६. "शिवा नारीयमस्तमागन्निमं धाता लोकमस्यै दिदेश ।

तामर्यमा भगो अश्विनोभा प्रजापतिः प्रजया वर्धयन्तु ।।"अर्थववेद, १४ । २ । १३

अर्थात्, "यी मुलकारिणी स्त्री पतिगृहमा पुगेकी छिन् । विधाताले उनका लागि यही स्थान तोकेका छन् । दुवै अश्विनीकुमार, अर्यमादेव, भगदेव तथा प्रजापति यी सबै देवगण यी बधुलाई श्रेष्ठ सन्ततिबाट समृद्ध गराऊन् ।"

माथि उल्लिखित पवित्र वेदका मन्त्रहरूलाई अध्ययन गर्दा स्त्रीजातिलाई मुलकारिणी भनेर सम्बोधन गरिएको छ साथै उनीको सुख समृद्धिको प्रार्थना गरिएको छ ।

७. "प्रति तिष्ठ विराडसि विष्णुरिवेह सरस्वति ।

सिनीवाली प्र जायतां भगस्य सुमतावसत् ।।" अर्थववेद, १४ । २ । १५

"हे सरस्वतीस्वरूपा स्त्री तिमी पतिगृहमा गौरवलाई प्राप्त गर; तिमी घरकी साम्राज्ञी (शासन-सञ्चालिका) हौँ । तिम्रा पति विष्णुदेवसमान छन् र तिमी लक्ष्मीस्वरूपा छौ । हे अन्नवति देवी ! तिमीमाथि भगदेवको महान् अनुकम्पमा रहोस् र तिमीलाई श्रेष्ठ सन्तति प्राप्त होऊन् ।

८. "साम्राज्ञयेधि श्वशुरेषु सम्राज्ञ्युत देवृषु ।

ननान्दुः साम्राज्ञ्येधि सम्राज्ञ्युत श्वश्र्वाः ।। अथर्ववेद, १४ । १ । ४४

"हे वधु (बुहारी) ! तिमी सासु, ससुरा, नन्द र देवरपत्नीको सम्मान गर्ने स्वामिनी बनेकी छौँ ।

९. "इमा नारी विधवाः सुपत्नीराञ्जनेन सर्पिषा सं स्पृशन्ताम् ।

अनश्रवो अनमीवाः सुरत्ना आ रोहन्तु जनयो योनिमग्रे ।।"अथर्ववेद, १२ । २ । ३१

"यी नारीहरु असल पत्नी होऊन्ः सधैँ सधवा रहुन्ः आँखामा गाजलजस्तो श्रंगार र आँतमा घिउजस्तो तेजवर्धक तत्वले युक्त होऊन् । यिनीहरु रोगरहित र अलस्यरहित मनका भएर श्रेष्ठ रत्नजस्ता उत्तम सन्तान जन्माउने होऊन्ः अगाडि बढून् र उन्नति गरून ।"

वेद र मनुस्मृतिलाई गहिरिएर नियाल्दा धुर्त-कपटी स्वभावका मानिसहरूले मनुस्मृति आफु अनुकूल प्रक्षेपण गरेका थिए भन्ने देखिन्छ । यसै भनाईलाई प्रष्ट गर्ने केही खोज तथा अनुसन्धानात्मक लेख र रिपोर्ट यसरी बाहिर आउन थालेको छ ।

प्रसिद्ध वैदिक ज्ञानी डा. सुरेन्द्र कुमारले आफ्नो लामो अध्ययन र गहन अनुसन्धान, परीक्षण र मूल्याङ्कन गरी मनुस्मृतिको २६८५ मध्य १४७१ श्लोकलाई पछि थपिएको भनी बताएका छन् । त्यसो त कलिकालमा ऋषि पराशको स्मृति बढी सत्यपरक मानिन्छ "कलौ पाराशस्मृति ।"

त्यस्तै किरातीकुलका प्रसिद्ध लेखक शम्शेरबहादुर आलेमगरले 'मगर जातिको इतिहास र संस्कृति' नामक पुस्तक (२०७५) मार्फत मनुस्मृतिमा जातीय छुवाछुत र भेदभाव नभएको उल्लेख गर्नुभएको छ ।

चर्चित लेखकद्वय सुरेन्द्र गौतम र नवराज पनेरुद्वारा लिखित पुस्तक 'विज्ञानको नजरमा वेद र बाइबल' को अध्याय ६ मा मनुस्मृति धुर्त व्यक्तिद्वारा पछिल्लो समयमा आफु अनुकुल प्रक्षेपण गरेको तथ्य उजागरण गरेका छन् ।

विश्वविख्यात सन्त रामपालले 'गहरी नजर गीतामे' नामक पुस्तकमार्फत जातीय व्यवस्था र नारीमाथिको कठोर दण्ड व्यवस्था कालको चलाखी पुर्ण खेल हो भनी शास्त्रीय गवाही पेश गरेका छन् ।

त्यस्तै मनुस्मृतिमा मनु स्वयम्ले 'नास्तिकको वेदनिन्दक' २/११ अर्थात् नास्तिक त्यो हो जसले वेदको निन्दा गर्छ वा वेद विरुद्ध बोल्छ भनी लेखिएको छ ।

# किन भन्छ पवित्र शास्त्रले घुम्टो ठीक ?

कुरआनमा सूरह निसामा भनिएको छ : "र अल्लाहमा ईमान भएका नारीहरूलाई भनिदेऊ कि तिनीहरु आफ्नो दृष्टि तल पारी राखून् र आफ्ना अस्मिताको रक्षा गरून् । तिनीहरूको आफ्नो श्रृङ्गार तथा आभूषणहरूको प्रदर्शन नगरून् । यसमा कुनै आपत्ति छैन जो सामान्य रूपमा देखिन्छ र तिनीहरूलाई आवश्यक छ कि आफ्ना पछ्यौरा (सल) ले आफ्ना वक्ष छोपिराखून् आफ्ना पति, बुबा तथा छोराहरूको अतिरिक्त कसैको लागि आफ्ना श्रृङ्गार प्रकट नगरून् ।"कुरआन २४:३१

विवाहित महिला अथवा महिलाहरूले सन्तान, पति वा महिलाहरूको अतिरिक्त अरूको अगाडि जाँदा अनुहार छोप्ने प्रचलनलाई घुम्टो प्रथा भनिन्छ । महिलाहरूको रूप रङ्गलाई हेरेर भइरहेका दुर्व्यवहार र यौनजन्य दुर्व्यवहार कम गर्न चलाइएको घुम्टो प्रथा आजको विश्व स्थितिलाई हेर्दा शतप्रतिशत गलत मान्न सकिँदैन । नारीहरूलाई सामाजिक पुतली र रखौटीको स्थान राखी गरिएका सुन्दरी प्रतियोगीता अमानवीय कार्य हुन् । नारीहरूलाई शरीर व्यापार तथा कामेच्छुकहरूको हातको खेलौना बन्न रोक लगाउन घुम्टो प्रथा महत्वपूर्ण हुने देखिन्छ । अमेरिकालाई संसारको महिलाको स्वतन्त्रता दिने राष्ट्रहरूमध्येको एक राष्ट्र मानिन्छ । FBI को १९९० को रिपोर्ट अनुसार १,०२,५५५ बलात्कारका घटना भए, त्यसमध्ये १६% प्रकाशनमा आए । U.S.of Justice का अनुसाए सन् १९९६ मा ९,९०,३३२ बलात्कारका घटना भए ।

त्यस दृश्यलाई कल्पना गर्नुहोस् यदि अमेरिकामा सबै नारीलाई घुम्टो प्रथा लगाएको भए गिद्धेनजर भएका पुरुषको स्त्रीमाथि दृष्टि पर्दैनथ्यो र कुविचार मस्तिष्कमा फस्टाउँदैन थियो । ऋग्वेदकालीन समयमा जस्तो नारीको उच्च सम्मान हुने हो भने घुम्टो प्रथा आवश्यक देखिँदैन । महिलाहरूलाई यात्रा, भीडभाड, घरबाहिर तथा पुरुषअगाडि जाँदा प्रयोग गरिने घुम्टो शिक्षा र अवसर प्राप्तिको बाधक नहुने बरु सहयोग हुने देखिन्छ । शुरूका दिनहरूमा सुरक्षाको रूपमा ओढाइएका घुम्टो विस्तारै इमान्दारहरूका लागि मात्र सावित भयो । जसरी घरको सुरक्षाको लागि ताला, चाँबी प्रयोग गरे जस्तै महिलाको शारीरिक सुरक्षाको लागि घुम्टो प्रथा पूर्णतः गलत प्रथा मान्न सकिँदैन । शिक्षा, विभिन्न अवसरहरूमा महिलालाई पूर्णत सामेल गराउँदै यसको प्रयोग गर्नु आजको आवश्यकता देखिन्छ भनी सम्मानित अदालतमा घुम्टोप्रथाबारे आफ्नो गवाही पेश गरेको छु ।

# महिनावारी बार्न आवश्यक छ ?

झट्ट हेर्दा केही धार्मिक कृत्यहरू अव्यावहारिक र अवैज्ञानिकजस्ता लाग्छन् । यसले जीवन र धर्ममा पुऱ्याएका योगदान आफैँमा सत्य छ । महिनाका एकपटक महिलाहरू उमेर पुगेपछि महिनावारी हुन्छन् । त्यतिबेला उचित खाना र आरामको आवश्यकता पर्दछ । शारीरिक रूपमा पुरुषभन्दा महिलाहरू कमजोर हुन्छन् । उनीहरूलाई संरक्षण गर्नु धर्मको काम, जिम्मेवारी, दायित्व दिएको छ । धर्मले समाज, संस्कृति, संस्कार र व्यवहारलाई सर्वोत्कृष्ट बनाउनु महत्वपूर्ण योगदान दिएको छ । खानपान, व्यवहारमा ध्यान दिनुको साथै महिलालाई स्वतन्त्रता दिनुपर्दछ । यसका लागि महिनावारी बार्न आवश्यक देखिन्छ[१] ।

गर्भवती र महिनावारी हुँदा महिलालाई विशेष ख्याल राख्नुपर्ने हुन्छ । होहल्ला तथा वातावरण प्रदुषण भएका ठाउँहरूमा गर्भवती र महिनावारी भएका महिलालाई नराख्नु राम्रो मानिन्छ । महिनावारी हुँदा महिलालाई शारीरिक आराम, प्रशस्त पौष्टिक आहार आवश्यक पर्दछ । धन्वतरिले भन्नुभएको छ :

मासिनोपचितं काले धमनीभ्या तदार्तवम् ।
ईषा कृष्णं विगन्ध च वायुर्योनिमुखं नयेत् ॥

अर्थात् महिलाहरूको शरीरमा फोहोर रगत एक महिनासम्म जम्मा भइरहन्छ । कालो रङ्गको रगत धमनीबाट बाहिर निस्कन्छन् जसलाई रजस्वला भनिन्छ । यसले महिलाहरूलाई स्वस्थ र निरोगी रहन मद्दत पुऱ्याउँछ । सामान्यतया महिनावारी भएको चार दिनसम्म महिलाहरूलाई रक्तस्राव हुने हुँदा महिला कमजोर हुन्छ यसकारण छुन र काम गर्न हुँदैन भनिएको हो । घरपरिवारमा काम भ्याइनभ्याई हुन्छ । महिलालाई शरीरको ख्याल गर्न भन्दा कामतिर ध्यान जान्छ जसले गर्दा अनेक समस्या सिर्जना हुनसक्छ । यसको समाधानको लागि छुन हुँदैन भनिएको हो । महिलालाई

शारीरिक र मानसिक रूपमा प्रबल बनाउन स्वास्थ्यमा छिट्टै सुधार ल्याउन यो आवश्यक देखिन्छ । कोलाहलपूर्ण वातावरणबाट केही टाढा घरको एकान्त कोठा जहाँ महिलालाई कुनै प्रकारका कष्टपूर्ण बसाई नहोस्, त्यस्तो बसाई छाउपडी (गुफा) हो । महिनावारीको रगत कुकुर, स्यालले खायो भने विषक्त रगतमा भएका नकारात्मक ऊर्जाले तिनीहरूमा शारीरिक गडबडी हुने वा मर्न सक्छ । नछुने हुँदा शारीरिक सम्पर्क भएमा यौनजन्य रोग लाग्न सक्ने हुन्छ । महिलाहरूमा शारीरिक र मानसिक प्रभावसमेत पर्न सक्छ । यसकारण रजस्वला भएको बेलामा ३ रातसम्म पतिलाई मुख नदेखाउनु, सँगै नसुत्नु, नुहाएर शुद्ध भएपछि पतिसँग बोल्नु भनी पुर्खाहरूले नियम बनाएका थिए । यस अवधिमा महिलालाई तन्दुरूस्त बनाउन पौष्टिक तत्वयुक्त भोजन र आराम दिने परम्परा विस्तारै अँध्यारो र कष्टपूर्ण एकान्त ठाउँमा अपराधीहरूलाई राखे जस्तै राख्ने कुप्रथामा बदलियो । विधर्मीहरूले आफ्नो स्वार्थका लागि वैदिकशास्त्रको मूलमर्म र परम्परा विपरीत मनोमानी नियम चलाउँदै गए । यही गलत प्रक्रिया नेपालका सुदूर र मध्यपश्चिमका ग्रामीण क्षेत्रमा यद्यापि प्रचलनमा छ । विधर्मीहरूले आफ्नो स्वार्थको निम्ति वैदिकशास्त्र विपरीत मनोमानी व्याख्या गरेको कारण परमेश्वरको अदालतमा वैदिकमर्म विपरीत मनोमानी नियम चलाउने तप्कालाई परमेश्वरको अदालतबाट कारबाही होस् भनी प्रमाण पेश गरेको छु ।

# वेदका रचनाकार ऋषि कि ईश्वर ?

वेदमा धेरै मन्त्रहरु छन् जुन धेरै स्थानमा फरकफरक सन्दर्भमा आएका छन् । केही मन्त्र ऋग्वेदमा, सामवेदमा, अथर्ववेदमा छ तर प्रत्येक वेदको मन्त्रका द्रष्टा ऋषि भने फरकफरक छन् । यो रहस्यलाई गहिरिएर अनुसन्धान गर्ने हो भने ऋषिहरूलाई मन्त्रको निर्माता मान्न सकिँदैन । यदि ऋषिहरूलाई मन्त्रको निर्माता मान्ने हो भने सबै स्थानमा एकै ऋषिको नाम आउनुपर्ने देखिन्छ । एउटै मन्त्रको ऋग्वेदको ऋषिको नाम एउटा छ भने त्यही मन्त्रको अथर्ववेदको ऋषिको नाम फरक छ । यसको अर्थ ऋषिहरु वेदमन्त्रका द्रष्टा (देख्ने व्यक्ति) थिए; कर्ता (निर्माता) थिएनन् भने सिद्ध हुन्छ । अव हेरौँ वेदका मन्त्रहरु:

• ऋग्वेद, १/२३/१६-१८ र अथर्ववेद, १ /४/१-३

अम्बयो यन्त्यध्वभिर्जामयो अध्वरीयताम् । पृञ्चतीर्मधुना पयः ॥
अमुर्या उप सूर्ये याभिर्वा सूर्यः सह । ता नो हिन्वन्त्वध्वरम् ॥
अपो देवीरुप ह्वये यत्र गावः पिबन्ति नः सिन्धुभ्यः कर्त्वं हविः ॥

ऋग्वेदको यस मन्त्रका द्रष्टा मेधातिथि, काण्व ऋषि हुन् भने अथर्व वेदको त्यही मन्त्रका द्रष्टा ऋषिको नाम **सिन्धुद्वीप** हो । यदि त्यो मन्त्र ऋषि आफैँले बनाएका भए एउटै मन्त्रमा दुईवटा ऋषिको नाम किन ? यसबाट सिद्ध हुन्छ कि ती ऋषिहरु वेदमन्त्रका द्रष्टा थिए; निर्माता थिएनन् तसर्थ वेद श्रुति परम्पराबाट अगाडि बढेको देखिन्छ ।

• ऋग्वेद, १/१३/९ तथा ऋग्वेद, ५/५/८

"इडा सरस्वती मही तिस्रो देवीर्मयोभुवः । बर्हिः सीदन्त्वस्रिधः ॥"

• त्यस्तै ऋग्वेद १ । १३ । ९ ऋषिको नाम मेधातिथि काण्व हुन् भने ५ । ५ । ८ मा रहेको ठीक त्यही मन्त्रका द्रष्टा ऋषिको नाम बसुश्रुत आत्रेय हुन् । यदि त्यो मन्त्र ऋषि आफैँले बनाएको हो भने एउटै मन्त्रमा दुईवटा ऋषिको नाम आउने थिएन । त्यसैले ऋषि वेद मन्त्रका रचनाकार होइन भनी परमेश्वरको अदालतमा ऋग्वेद, १/२३/१६-१८ र अथर्ववेद, १ /४/१-३ र ऋग्वेद, १/१३/९ तथा ऋग्वेद, ५/५/८ पेश गरेको छु । मन्त्र देख्नेहरूलाई मात्र ऋषि भनिन्छ । गायत्री मन्त्रका ऋषि विश्वामित्र हुन् । उनले नेपालको दोलखाजिल्ला स्थित गौरीशंकरहिमालमा तपस्या गरेर यो मन्त्र पाएका हुन् । यसैले वेद ऋषिमुनिको रचना होइन ईश्वरको वरदान हो ।

# सतीप्रथा

सती प्रथा हिन्दूधर्म र वैदिक दर्शन विपरीत छ । जीवनसाथी (पति वा पत्नी) एकअर्काको आधा अङ्ग मानिन्छ । दुईमध्ये एक मरेपछि आधा अङ्गमात्र जीवित रहनु व्यर्थ छ भन्ने नैराश्यमूलक सामाजिक आस्थाको विकास भएकोले सतीप्रथा प्रचलनमा आएको देखिन्छ । राजखानदान प्रचलित यो प्रथा धेरैपछाडि सर्वसाधारणको बीचमा देखा पऱ्यो । मध्यकालिन भारतमा विशेष गरी मुगलको मारकाट अनैतिक दुर्व्यवहारबाट बच्न राजपूत नारीहरूले आफ्ना योद्धा, दिवंगत पतिको चितामा हामफाल्ने प्रथा व्यापक भएपछि हिन्दू समाजमा यसले जरो हाल्यो । मृत्युपश्चात् शोक सन्तप्त परिवारलाई सान्त्वना दिने हिसावले सती प्रथाको गुणगान गाइएको कथा पाइन्छ ।

पृथ्वीनारायण शाहका सल्लाहकार कुलानन्द ढकालले सतीप्रथा वेद विरोधी प्रथा भएको स्पष्ट बुझेको कारण पृथ्वीनारायण शाहकी सौतानी आमा कौशल्यावती सती जानबाट रोक्न सफल भएका थिए । त्यस्तै वेदज्ञाता श्रीदेव र मानदेवको कारण मानदेवको आमा सती जान रोकिएको सुन्न पाइन्छ । अब हेरौँ वेदमन्त्र

- "उदीर्ष्व नार्यभि जीवलोकं गतासुमेतमुप शेष एहि ।
हस्तग्राभस्य दिधिषोस्तवेदं पत्युर्जनित्वमभि सं बभूथ ॥"अथर्ववेद, १८ । ३ । २

"हे नारी ! तिमी मृतक पतिको नजिकै सुतिराखेकीछ्यौ; यो राम्रो होइन । यिनलाई छाडेर तिमी संसारमा अगाडि तर्फ आऊ । यहाँ तिमीलाई पाणीग्रहण गरी पत्नी बनाउनेका तिम्रा पुत्र-पुत्रादि जो स्वजन छन् उनीहरूकै साथमा बसी संसारमा क्रियाशील बन ।" यस मन्त्रले कुनै पनि नारी आफ्ना मरेका पतिको नजिक सुत्नु वा अर्को चित्तामा सँगै जल्ने

अनुमति दिएको छैन । उल्टो त्यसरी जल्नुलाई निन्दनीय र घृणित कार्य भएको प्रष्ट रूपमा व्याख्या गरेको छ । यस्तो कार्यलाई छोडेर परिवार,घर र आफ्नो संसारतिर (जीवनतिर) फर्क भनिएको छ ।

• "अपश्यं युवतिं नीयमांनां जीवां मृतेभ्यः परिणीयमानाम् ।"अथववेद १८ । ३ । ३ ।

"मृतक पुरूषको पछिपछि श्मशानभूमिमा जाँदै गरेकी तरूणी स्त्रीलाई उनका बन्धुहरूले पुनः घरतिर फर्काइ लैजाँदै गरेको हामीले देखेका छौँ ।

वैदिककालमा सतीप्रथा छँदै थिएन । यो त धेरैपछि मध्यकालमा चलेका कुप्रथा हुन् । यहाँ मन्त्रद्रष्टा ऋषिहरूले प्रष्टरूपमा भनेका छन् कि आफ्नो श्रीमान् मर्दा पीडाले छटपटाएर रूँदै पछिपछि मशानघाट गएका विधवा स्त्रीहरू त्यही चितामा नजलीकन पुनः आफ्ना घरतिर फर्केर आउँदै गरेको आफूले देखेको कुरा प्रस्तुत गरेका छन् ।

वेद मन्त्रलाई गहिरिएर अध्ययन गर्दा वेदविरूद्ध चल्ने व्यक्तिहरूले सतीप्रथाको शुरूवात गरिदिएको बुझिन्छ अतः अथर्ववेद (१८ । ३ । २) र (१८ । ३ । ३ ) वचन विपरीत सतीप्रथाको गुणगान गाइएको कथा र कहानी लेखेर प्रस्तुत गर्नेहरूलाई परमेश्वरको अदालतमा पेश गरेकोछु ।

# इस्लामी आध्यात्मिक चिन्तन

इस्लामी अध्यात्मको सूत्रपात यद्यपि हजरत महम्मदबाट हुन्छ तथापि इस्लामीहरू बाइबल वर्णित प्रथम पुरूष आदमलाई पहिलो नबीका रूपमा लिन्छन् । सृष्टिको आदिलाई लिंदा कुरआनका धेरै अंश बाइबलसँग मेल खान्छन् । अल्लाहको फरिश्ता (देवदूत) को रूपमा रहेको इब्लीसले उनको आज्ञा नमान्दा शैतान बनेर मनुष्यलाई सत्यमार्गबाट भ्रमित गरेको विश्वास इस्लामी अध्यात्मको रहेको छ । बाइबलझैँ आदम र हव्वाले शैतानको कुरा सुनेर पापमा फसी जन्नत (बगैचा/स्वर्ग) निष्कासित भए । बाइबलझैँ यस घटनाबाट आदमका सन्तान पापी भएको अथवा मनुष्यसदृश मुक्तिदातामाथिको विश्वासले उक्त पापबाट मुक्ति हुने सिद्धान्तको कुरआनले विरोध गरेको देखिन्छ ।

कुरआनमा मूलतः चार रसूल (सन्देष्टा) को नामका साथ वर्णन छ जसमाथि फरिश्ता (देवदूत) को माध्यमबाट अल्लाह (ईश्वर ) ले तौहिद (एकेश्वर)तथा धार्मिक व्यवस्थाको विवरण पुस्तकको माध्यमबाट अवतरण गराएका थिए । त्यसअन्तर्गत मोशामाथि तौरातका पुस्तक (पुरानो करारका प्रथम पाँच पुस्तक ), दाऊदमाथि जबूरको पुस्तक (पुरानो करारअन्तर्गत भजनसंग्रह ), येशूमाथि इञ्जील (नयाँ करारका चार सुसमाचार) तथा अन्तिम रसूल महम्मद जसमाथि कुरआनको अवतरण भएको मानिन्छ । यस अतिरिक्त पृथ्वीमा भिन्नभिन्न जनसमुदायका लागि भिन्नभिन्न समयमा ईश्वरीय ज्ञानको अवतरण भएको विषय कुरआनमा उल्लेख छ । मुसलमानहरू महम्मदअघिका सन्देष्टाहरूको सन्देश मान्छेहरूले परिवर्तन गराएकाले अन्तिम पुस्तक (कुरआन)को आवश्यकता परेको मान्दछन् । इस्लामका धार्मिक विश्वास निम्न पाँच स्तम्भमा अडिएको छ -

- अल्लाहबाहेक अरू उपास्य छैनन् र हजरत महम्मद अन्तिम सन्देष्टा हुन् ।

• इस्लामी पात्रोअनुसार रमजानको पवित्र महिनामा व्रत बस्नुपर्छ ।
• जीवनमा एकपल्ट मक्काको पवित्र स्थलको संग-ए-अस्वदको दर्शनको लागि हजयात्रा गर्नुपर्छ ।
• आफ्नो आमदानीको निश्चित अनुपात जकात (दान) दिनुपर्छ ।
• दिनमा पाँचपटक नमाज पढ्नुपर्छ ।

कुरआनमा वर्णित एकेश्वरवादको मनन र हजरत महम्मदको सुन्नत (जीवनशैली) को अवलम्बनबाट मृत्युपछिको जीवनमा मोक्षप्राप्ति हुनेबारे इस्लामको आस्था रहेको छ ।

बाइबल र कुरआन वर्तमान समयमा खीष्टियन र इस्लामधर्मका आधार हुन् जसको सम्यक् अध्ययनबाट दुवै धर्मको परिधि जान्न सकिन्छ । दुवै धर्म र संस्कृतिको एकै माऊ यहुदी परम्परा रहे पनि समय, परिस्थिति र परिवेशले परस्पर केही नितान्त भिन्न सिद्धान्त रहेका छन् । जस्तै -

• कुरआनले अशरीर प्रायः एकेश्वरलाई उपासनीय मान्दछ । बाइबलले एकेश्वरवादको पगरी गुँथे र पिता, पुत्र र पवित्र आत्माको सिद्धान्तअघि सार्छ जसलाई कुरआनले केही अंशमा विरोध गर्छ ।
• कुरआनले सन्देष्टाहरूलाई एकेश्वरवाद तथा धार्मिक व्यवस्थाको सन्देश सञ्चार गराउने साधारण मनुष्यको रूपमा लिएको छ बाइबलले तिनै सन्देष्टामध्येका एक येशू खीष्टलाई परमेश्वर मानेको छ ।
• बाइबलले येशू खीष्टलाई शूलीमा टाँगिएर मारिएको तर मृत्युपछि पुनर्जीवित भएको मान्छ । कुरआनले यस विषयमा येशूलाई मरेझैं देखाइएको मान्दछ ।
• बाइबलको सिद्धान्तअनुसार पापको मुक्ति येशूको पवित्र रगतबाट सम्भव छ र येशूमाथिको विश्वासले मनुष्यलाई मुक्ति दिन्छ । कुरआनअनुसार एकेश्वरमाथिको विश्वास र महम्मदलाई अन्तिम पैगम्बर मान्नुका साथसाथै कुरआन वर्णित धार्मिक जीवनबाट मनुष्यले मुक्ति पाउन सक्छ ।

खीष्टियन सम्प्रदाय तथा इस्लामी सम्प्रदाय दुवैको आ-आफ्नो आध्यात्मिक विश्वास छन् । खीष्टीयनहरूको विश्वास छ येशूमा परमेश्वरको छाप छ - "नष्ट हुने भोजनको निम्ति परिश्रम नगर तर अनन्त जीवनसम्म रहने भोजनको निम्ति परिश्रम गर, जो मानिसको पुत्रले तिमीहरूलाई दिनेछ । किनभने परमेश्वर पिताले उस (येशू) माथि आफ्नो छाप लगाउनुभएको छ ।" (पवित्र बाइबल, युहन्ना-६/२७)

यसलाई Divine Seal मान्न सकिन्छ जुन येशूमाथि परमेश्वरले लगाएको कुरा बाइबलमा लेखिएको छ । यसलाई परमेश्वरको स्वीकृतिको रूपमा कतिपय बाइबलविद्हरूले व्याख्या गरेका छन् ।

कुरआनमा एउटा आयात आउँछ - मा कान मुहम्मदुन् अबा अहादिम्मिर्रिजालिकुम् व लाकिर्रसूल अल्लाहि व खातमन्नबियीन् व कानल्लाहु बिकुल्लि शैयिन् आलीमन् । ( ३३/४०) अर्थात् "महम्मद तिमीहरूमध्ये कसैका पिता होइनन् तर अल्लाहका रसूल हुन् र सबै नबीहरूमा अन्तिम हुनुहुन्छ तथा अल्लाह सबै चिजलाई जान्नेवाला हुनुहुन्छ ।"

यस आयातमा कुरआनले महम्मदलाई अन्तिम रसूल अर्थात्, महम्मदपछि कुनै रसूल नजन्मने कुरालाई प्रस्तुत गरेको छ । कुरआनले अतीतमा भिन्नभिन्न समुदायका लागि भिन्न सन्देष्टा ईश्वरले पठाएको कुरा जाहेर गरेर पनि महम्मदलाई अन्तिम सन्देष्टाको रूपमा पठाएको कुराबाट वर्तमान इस्लाममा महम्मदको स्थान उच्च रहेको जान्न सकिन्छ ।

वर्तमान खीष्टियनहरूमा येशू खीष्टबाट आत्मप्रेरक नयाँ करार स्थापना भएर येशूको स्थान माथिल्लो देखिएझैँ वर्तमान मुसलमानहरूमा सबै नबीहरूप्रति श्रद्धाभाव देखाएर धर्मको व्यवस्था, व्यवहार, रीतिरिवाजका लागि महम्मदको स्थान माथिल्लो देखिन्छ ।

इस्लामका पाँच आधार स्तम्भमा पहिलो स्तम्भमा पनि "अल्लाह बाहेक अरू कुनै ईश्वर छैनन् र महम्मद अल्लाहका पैगम्बर हुन्" भन्ने महावाक्यबाट अल्लाहको ईश्वरत्व तथा महम्मदको सन्देष्टा रूपको गुण प्रत्येक मुसलमानका लागि स्मरणीय रहेको कुरा बुझिन्छ । यस महावाक्यलाई कलिमा-ए-शहादत (गवाही वाक्य ) भनिन्छ जसको उच्चारणबाट मान्छे मुसलमान हुने कुरा विश्वास गरिन्छ ।

मूलतः अब्राहामकी पत्नी साराबाट वैधानिक पुत्र इसहाक नै परमेश्वरबाट अब्राहामलाई वाचा गरिएको पुत्र बाइबलले मान्दछ भने हागारबाट काजो कि मिश्र दासी थिइन्, इस्माएललाई शारीरिक साधारण साधारण पुत्र मानिएको छ ।

तिनै इस्माएललाई कुरआनले एक नवीका रूपमा मानेको छ जसको वंश परम्परामा महम्मद साहबको जन्म हुन्छ । बाइबलमा त उत्पत्तिको १७ /१९-२१ मा परमेश्वरले इसहाकसँग र उसका वंशजलाई बाँध्ने गरी करार

स्थापना गर्ने कुरा भनेर इस्माएललाई त्यसबाट अलग्गाएको देखिन्छ । मूलतः बाइबलमा अब्राहामसँग गरिएको करारका तीन आयाम उल्लेख्य छन् -

- जमीनको वचन
- एक विस्तृत वंशवृक्षको वचन
- आगामी पुस्तासँग पनि करारबद्धताको वचन

अब्राहामको प्रसंगमा परमेश्वरले इस्माएललाई केवल एक विस्तृत वंशवृक्षको वचन दिएका छन् तर बाँकीका दुई वचन दिएका छैनन् । सम्भवतः बाइबलले यहूदी अगमवक्ताहरूको मार्ग खुलाउन यो पद राखेको हुनुपर्छ जसबाट परमेश्वरको करारको पक्षले केवल दाऊद - सोलोमन - येशूलाई मात्र सम्मिलित गर्न सकोस् । तथापि ६६ पुस्तकको बाइबलमा आज अनगिन्ति सम्प्रदाय खडा छन् भने ११४ अध्यायको कुरआनमा माझले ७३ सम्प्रदाय खडा भएका छन् । साझा रूपमा यी पुस्तकको अध्ययनबाट उक पुस्तक (बाइबल)ले येशूमाथि अधिक प्रकाश पारेको र अर्को पुस्तक (कुरआन) ले महम्मदमाथि अधिक बल दिएको छ ।

खीष्टियन सम्प्रदायमा त्रिएक परमेश्वरको अवधारणा विलक्षणको छ । पिता-पुत्र र पवित्र आत्मारूप परमेश्वरको सत्ता स्वीकार्ने इसाईविद्वान्हरू यस प्रक्रियाको उपमा सूर्यसँग दिन्छन् । सूर्य पिता, सूर्यको किरण पुत्र र त्यसको ताप पवित्र आत्मा । यी तीन एक भएर भिन्नभिन्न भएर पनि एक रहेको मान्यता खीष्टियन विद्वान्हरूको छ ।

कुरआनले यस खीष्टियन सिद्धान्तको शब्दशः विरोध गरेको देख्न सकिन्छ । सर्वप्रथम त कुरआनले कुनै पनि रूपले एक ईश्वरबाहेक अर्को ईश्वरको सत्ताको विरोध गर्दछ । अल्लाहसँग अर्को कसैलाई मिलाउनु (शरीक ) गर्नु शिर्क (पाप) मानिन्छ । सम्भवतः कुरआनको रचनाकालमा नै येशूको उपासनामा तात्कालिक जनसमुदायले परमेश्वरको त्रिएक स्वरूपको कल्पना गरिसकेको भान हुन्छ । कुरआनको एक स्थलमा भन्छ कि - लकद् कफरल्लजीना कालू इन्नल्लाह हुवल्मसीहुब्नु मर्यम ........। -(सुरतुल माइदात्,७२ )
अर्थात् - ती जन काफिर हुन् जसले भने कि मरियमको छोरो येशू अल्लाह हुन् ।

यस आयातले स्पष्टतः येशूमाथि ईश्वरत्वको आरोपलाई झुटो ठहराएको छ र पापले युक्त बताएको छ ।

त्यस्तै, लकद् कफरल्लजीना कालू इन्नल्लाह सालिसु सलासतीन् .........। -(सुरतुल् माइदात,७३ )

अर्थात् "ती जन काफिर हुन् जसले भने अल्लाहका तीन स्वरूपमा तेस्रो हुन् ।"

यहाँ विचारणीय कुरा के छ भने, वर्तमान समयमा जसरी इसाई सम्प्रदायका धेरै गुट बनेका छन्, त्यस्तै सम्भवतः महम्मदको कालखण्डमा धेरै गुट थिए होलान् जसमध्ये कसैले येशूलाई ईश्वर मान्थे भने कसैले ईश्वरको तीन स्वरूप र तेस्रो स्वरूप ईश्वर मान्थे होलान् ।

कुरआनका रचनाकारले त येशूको बारेमा भ्रान्ति निराकरण गर्न यतिसम्म प्रस्तुत गरेका छन् -

व इज् कालल्लाहु या इसाब्न मर्यम अ अन्त कुल्त लिन्नासित्तखिजूनी व उम्मिया इलाहैनि मिन् दूनिल्लाहि काल सुब्हानक मा यकूनु ली अन् अकूल मा लैस ली बिहक्कीन् इन् कुन्तु कुल्तुहू फकद् अलिम्तहू तअ्-लमु मा फी नफ्सी व ला अअ्-लमु मा फी नफ्सीक इन्नक अन्त अल्लामुल् गुयूब । -(सुरतुल् माइदात, ११६)

अर्थात् "त्यो बेला जब अल्लाहले भन्दछन् कि येशू मरियमका छोरा, के तिमीले ती मान्छेलाई यो भनेका थियौ कि मलाई र मेरी आमालाई अल्लाहबाहेक उपासनीय बनाउनु भनेर ?"

येशूले भन्नेछन् "म त तपाई पवित्र सम्झन्छु, मलाई यो कसरी शोभा दिन्छ म यस्तो कुरा भन्थे जसको मलाई अधिकार छैन । यदि मैले यस्तो भनेको भए तपाईलाई यसको ज्ञान त हुने थियो किनकि तपाई मेरो मनको कुरा सबै जान्नुहुन्छ । मैले बरू तपाईको मनको सबैको कुरा जान्दैनन्, तपाईमात्र सबै परोक्षहरूका जानकार हुनुहुन्छ ।"

बाइबलले त्रिएक परमेश्वरबारे स्थल-स्थलमा गवाही दिन्छ । इस्लाममा तौहिद (वाहिद अर्थात् एक ) को विषय रहेको छ भने बाइबल इस्लामी अगमवक्ताहरूमाथि विश्वास गर्दैन । उसका अनुसार अब्राहामसँगको वाचा परमेश्वरले येशूमाथि पुरा गरेका छन् न कि इस्माएलतर्फका महम्मदबाट । यसरी ख्रीष्टियनहरू त्रिएक (Trinity) को अवधारणा सत्य मानेर येशूलाई पापहरण हेतु मसीह र साक्षात् परमेश्वर मान्छन् ।

कुरआनको लागि यो एक पाप हो भने बाइबलअनुसार येशूलाई मुक्तिदाता नमान्नु अनन्त जीवनको व्यवधान हो ।

कुरआनमा र बाइबलमा ऐतिहासिक विषयहरूको वर्णन भएको छ, तिनमा प्रशस्त भिन्नता स्पष्ट देखिन्छ । ग्रन्थकायवृद्धिको भयले यहाँ येशूको पुनरूत्थानको विषयलाई लिइन्छ ।

येशू खीष्टको बारेमा बाइबलले परमेश्वरको पुत्र, परमेश्वर, मुक्तिदाता, पापमोचक आदि विविध विशेषण दिएको छ भने कुरआनमा उनलाई एक पैगम्बर, अल्लाहको कलाम जस्ता विशेषण दिइएको छ । बाइबलझैं कुरआनले येशूलाई कुमारीबाट जन्मिएको मान्दछ जो आफैंमा एक प्रकृतिविरूद्धको विषय हो । अल्लाह अर्थात् ईश्वरले "यस्तो होस्" भन्नासाथ परमेश्वरको कलाम अर्थात् शब्दबाट जन्मिएकाले, येशूलाई कलिमतुल्लाह भनिन्छ । बाइबलको युहन्नाको सुसमाचार नामक पुस्तकको प्रथम अध्यायमा येशूलाई शब्दको रूपमा लिइएको छ ।

बाइबलले येशूलाई रोगीहरूलाई चंगाइ दिन, शारीरिक तथा आत्मिक मृत्युको शिकार बनेका लागि पुनर्जीवित पार्न आएको तथा धेरै तिलस्मी शक्ति धारण गरेका पिता परमेश्वरको मानवीय स्वरूप भनी मानेको छ । वर्तमान खीष्टियनहरूले त्यही रूपमा स्वीकार गर्दछन् । कुरआनले येशूलाई केही अंशमा त्यही रूपमा स्वीकार गर्छ । येशूलाई त्यस्ता अलौकिक कार्य गर्नको लागि परमेश्वरको सहाय भएको कुरालाई प्रष्ट पारिएको छ । यस अर्थमा स्वतः कुरआनका येशूमा ईश्वरत्वको आरोप पर्ने स्थल देखिँदैन । बाइबलमा येशूको मृत्युलाई लिएर चारैवटा सुसमाचारमा उल्लेख गरिएको छ । येशूको मृत्यु एक साधारण रूप मासुको मरणको रूपमा देखाइएको छ । क्रूशमा टाँगिएर रोई, कराई, क्रन्दन गरेर येशूको मृत्यु भएको छ तर पुनः येशूको पुनरूत्थान भएर स्वर्गमा विराजित भएको कुरा बाइबलले प्रस्तुत गर्दछ । त्यही अर्कोतिर कुरआनमा यो पक्षमा अलिक अस्पष्ट तरिकाले येशूको मृत्युलाई देखाइएको छ । कुरआनको सुरतुल निसाको आयात संख्या १५७ यहाँ दर्शनीय छ "व कौलिहिम् इन्ना कतल्नल्मसीह यीशवन मर्यम रसूलल्लाहि व मा कतलूहु व मा सलबूहु व लाकिन् शुब्बि ह लहुम् ..............।"

अर्थात् "र उनीहरू भन्छन् कि हामीले मरियमका पुत्र, अल्लाहका रसूल येशूलाई मार्यौं तर तिनीहरूले न त येशूलाई मारे, न त उनलाई शुलीमा टाँगे बरू उनीहरूलाई त्यस्तो देखाइएको मात्र हो ......।"

यस आयातलाई लिएर इस्लामी धर्मशास्त्रीहरूको विचार के रहेको छ भने "येशूझैं लाग्ने कुनै युवकलाई यहुदीहरूले क्रूशमा टाँगेका थिए तथा त्यस समयमा येशू स्वर्गमा अल्लाहद्वारा जीवितै उठाइएको थिए ता कि अन्तका दिनमा फेरि उनी आउन सकून् ।"

अहमदी सम्प्रदायका मुसलमानहरूले आफ्ना सम्प्रदायका अगुवा मिर्जा गुलाम अहमद कादियानीलाई येशूको अवतरणको रूपमा मान्छन् । उनीहरूको विचार छ कि येशू भारतको कश्मीरमा आएर बसे तथा त्यहाँ उनको चिहान पनि छ । त्यसपछि उनी इमाम मेहदी बनेर येशूको रूपमा अवतरण लिएका हुन् ।

यस प्रकारले कुरआनमा येशूको मृत्यु भएको कुरालाई इस्लानी धर्मशास्त्रीहरू मान्दैनन् । उनीहरूको मान्यता छ कि येशू क्रुसमा मारिएका नै थिएनन् बरू जीवितै स्वर्गमा उठाइएका थिए । केही इसाई धर्मशास्त्रीहरू निम्न आयातको प्रमाण लिएर यो मान्छन् कि येशूको मृत्यु क्रूसमा भएको थियो र उनको पुनरूत्थान पनि भएको थियो -

व सलामुन् अलैहिम् यौम वुलिद व यौम यमूतु व यौम युब्असु हय्या ।( सुरतुल् मरियम,१५)

अर्थात्, "(येशूमाथि) शान्ति थियो, जुन दिन उनले जन्म लिए र जुन दिन उनी मर्नेछन् र उनीमाथि शान्ति हुनेछ जुन दिन उनी जिन्दा गरेर उठाइनेछन् ।"

यस स्थलले येशूको मृत्यु र त्यसपछिको पुनरूत्थानलाई संकेत गर्न खोजेझैं लाग्छ, जसलाई इस्लामी धर्मशास्त्रीहरू स्पष्टसँग निषेध गर्छन् । यस आयातलाई लिएर उनीहरूको मन्तव्य छ कि यहाँ जन्म लिने क्रियालाई लिएर जुन क्रियाको प्रयोग गरिएको छ त्यो भूतकाल हो । पछिको मर्ने र उठाइने बारे प्रयुक्त क्रिया भविष्यतकाल जनाउने क्रिया हुन् ।

यस आधारमा इस्लामी धर्मशास्त्रीहरू यस आयातको अर्थ लगाउँछन् कि जीवित स्वर्ग उठाइसकेपछि त्यहाँबाट धर्तीमा अवतरण लिएपछि जब येशूको मृत्यु हुन्छ, मृत्युपछि न्यायको दिन (Day of Judgment) मा जब येशू उठाइनेछन् तब उनीमाथि शान्ति हुनेछ ।

पुरानो करारमा मोशासँग स्थापित खतनाको करार, खानपान भक्ष्याभक्ष्यको करार आदि भिन्न भिन्न व्यवस्था आज मुसलमानहरूमा पालन गरिएको देखिन्छ । खीष्टियन सम्प्रदायमा त्यो करारको अक्षरशः पालना भएको देखिंदैन । खतनाको करारलाई लिएर वर्तमान खीष्टियनहरूले यसलाई आत्मपरकरूपमा आध्यात्मिक परिवर्तनसँग दाँजेर पुरानो व्यवस्था रद्द गरिदिन्छन् । मुसलमान समुदायमा अर्को विश्वास के देखिन्छ भने, प्रारम्भिक समयलाई लिएर तौरात, जबुर इञ्जिलको अवतरण भएको थियो । अब कुरआनको अवतरणपछि न्यायको दिनमा धर्मी तुल्याउनको लागि एकेश्वर र महम्मदको गवाही आवश्यक छ ।

सत्य के हो ? यो अनिर्वचनीय प्रायः प्रतीत हुन्छ । खीष्टियन र इस्लाम आफू यस सत्यमा आफूभित्रै विवादरूपमा छन् जसकारण आफूभित्रै भिन्न भिन्न सम्प्रदायहरूको गुट बनेको छ । महम्मद साहबले आफ्ना अन्तिम दिनमा भन्नुभएको थियो कि इस्लाम ७३ सम्प्रदायमा विभाजित हुनेछ तर एउटै सम्प्रदायले जन्नत अर्थात् स्वर्ग पाउनेछ । यसरी परमेश्वरको अदालतमा कुन सम्प्रदायले आफ्नो धार्मिकताको गवाही दिन सक्ला ? जुन पुस्तकको रक्षाको जिम्मा ईश्वरले लिनुभएको छ, त्यसको मार्ग स्वर्ग हेतु प्रशस्त रहला ? जुन पुस्तकको वचन रोटी मानिएको छ र जसको ग्रहणले अनन्त जीवनको मार्ग प्रशस्त गरिएको छ, त्यसले परमेश्वरको अदालतमा सत्य ठहरिएला ?

# ख्रीष्टियन आध्यात्मिक चिन्तन

ख्रीष्टियन सम्प्रदाय "येशूख्रीष्ट"को नामबाट चलेको हो । वस्तुतः यस सम्प्रदायमा अदनको बगैंचाका आदम तथा हव्वालाई सृष्टिका पहिलो मनुष्यको रूपमा लिइन्छ । यहोवाको आदेश नमान्दा परमेश्वरले दिएको आज्ञा नमान्ने शैतानरूपी सर्पको प्रेरणाले हव्वाबाट पापले परमेश्वरको सृष्टिमा प्रवेश गरेको बताइन्छ । आदम - हव्वाको सन्तानवृक्षमा त्यही पाप सञ्चारित भएर सबै मनुष्य जन्मैबाट पापी भएको तथ्यलाई जीवनमा पापबाट मुक्ति पाउनुलाई परम लक्ष्य मानिन्छ इसाई अध्यात्ममा । आदमको वंशावलीमा पापको संचार योसेफसम्म आइपुग्छ । पापबाट पृथक् राख्न, पवित्र आत्माबाट मरीयमलाई गर्भवती बनाएर निष्पाप येशू ख्रीष्टको जन्म भएको विश्वास गरिन्छ । तदनुरूप बाइबलको उत्पत्तिको पुस्तामा आउँछ - तेरो (शैतानरूपी सर्प ) र स्त्री ( हव्वा)को बीचमा, "तेरो सन्तान र स्त्रीको सन्तानको बीचमा म दुश्मनी हालिदिनेछु । त्यसले तेरो शिर कुच्च्याउनेछ र तैले त्यसको कुर्कुच्चो डस्नेछस् । "

यस बाइबलको वचनले पहिलो शैतानरूपी सर्प प्रेरित (पाप ) बाट मुक्ति दिलाउन स्त्रीको सन्तानले जन्म लिने भनेर यशू ख्रीष्टको अगमवाणी दिएको व्याख्या बाइबलविद् गर्दछन् । प्राचीन यहुदीहरूमा पापको प्रयाश्चित्तको लागि जनावरको रगत बगाउने एक प्रकारको विधान यहुदीहरूका तौरातका पुस्तक (पुरानो करारका पाँच पुस्तक ) मा भेटिन्छ । त्यही अनुरूप नयाँ करारको यूहन्नाको पुस्तकबाट येशूख्रीष्टलाई एउटा निर्दोष - निष्पाप थुमाको रूपमा लिइएको छ जसको रगतमा पापको प्रयश्चित हुने नवविश्वासलाई अगाडि राखिएको छ । जसले वर्तमान इसाई अध्यात्मको आधार बनाएको छ । रगत बगाएर मृत्यु प्राप्त येशूको पुनरूत्थानबाट येशू ख्रीष्टमा अनन्त जीवन रहेको विश्वास रहेको छ, जुन अनन्त जीवन अदनको बगैंचामा परमेश्वरको आज्ञा मान्दा आदम र हव्वाले पाएका थिए । यस प्रकारको आध्यात्मिक धारणा ख्रीष्टियन धर्मको इसाईधर्ममा विभिन्न पक्षहरूलाई खोजकले केलाउँदै परमेश्वरको अदालतमा पेश गरेको छ ।

# नेपालमा खीष्टियन मण्डलीको इतिहास

बाइबल वास्तवमा ६६ पुस्तक (खण्ड)को सङ्गालो हो भनेर प्रोटेष्टेड मण्डलीसहितले विश्वास गरे पनि रोमन क्याथोलिक मण्डलीले ७३ खण्ड, लुथरन एङ्लिकनको गुड न्यूज बाइबलमा ८१ खण्ड, ग्रीक र अर्थोडक्स चर्चका बाइबलहरूमा ७५/७८ खण्ड, सिरिया मण्डलीमा २२ (न्यू टेस्टामेन्ट) खण्डहरू भएका बाइबललाई आधिकारिक हो भनी सोच्दछन् । यो पुस्तक १६०० वर्षको अवधिमा ४० जना मानिसहरूले लेखे । यी पुस्तकहरू धेरैजसो हिब्रुमा र केही भाग अरबीमा लेखेको थियो । यसकारण आज यसलाई हिब्रु धर्मशास्त्रको पुरानो करार भनिन्छ । बाँकी पुस्तकहरू ग्रीकभाषामा लेखिएको थियो, जसलाई आज युनानी धर्मशास्त्र वा नयाँकरार भनिन्छ । बाइबलमा परमेश्वरले आफूलाई बेजोडको नाम दिनु भएको छ 'यहोबा' । बाइबलमा लेखिएको मौलिक भाषाहरूमा यो ईश्वरीय नाउँ लगभग ७,००० पटक प्रयोग गरिएको छ । यहोबाको अर्थ जस्तो रूपमा चाह्यो उस्तै बन्नुहुन्छ, गराउनुहुन्छ, निरञ्जन निराकारको रूपमा हुनुहुन्छ ।

पुरानो करारले येशूभन्दा अगाडिको यहुदीको बारेमा चर्चा गर्दछ भने नयाँ करारले येशूपछिको मात्र चर्चा गर्दछ । येशू खीष्टियन धर्मका प्रवर्तक हुन् । उनको जन्म ईसापूर्व ४ मा जेरूसेलमनजिकै वेथलेहमा भएको थियो । यिनका पिताको नाम जेसफ तथा आमाको नाम मेरियम थियो । यिनी यहुदीवंशका थिए । यिनको समयमा रोमन साम्राज्यको फैलावटले यहुदीहरूलाई नियन्त्रण गरिरहेको थियो । धार्मिक स्वतन्त्रताको पक्षमा रहेका एक जना उपदेशकलाई रोमन साम्राज्यका अधिकारले शुलीमा चढाएर मारेको घटनाले जिससलाई गहिरो प्रभाव पारेको थियो।

येशू मरियमको कोखबाट जन्मिएर १२ वर्षको उमेरसम्म आमाबाबुसँगै रहे । १२ वर्षको उमेरमा उनी निस्तारचाडको बेला यरूशेलम मन्दिरमा

आमाबाबुसँगै जाँदा तीन दिन छलिएर मन्दिरभित्रै बस्न पुगे । (पवित्र बाइबल-२०६९, लुका २:४२)

येशू मन्दिरभित्रका पाष्टरहरूको व्यवहार र गिर्जाघर भित्रको क्रियाकलापबाट अति असन्तुष्ट देखिए । उनले आमाबाबुबाट यहोबाप्रतिको निष्ठा, आदर, समर्पण तथा विश्वासबाट थुप्रै शिक्षा पाएका थिए । ती परमेश्वरप्रति गर्नपर्ने कार्य मन्दिरभित्रका पाष्टर धर्मगुरूहरूबाट नपाएपछि येशूले तिनीहरूलाई प्रश्न गर्नभयो । सुन्नेहरू सबै उहाँका स्मरणशक्ति र उहाँका उत्तरहरूमा छक्क परे । (पवित्र बाइबल-२०६९, लुका २:४१-४७)

यसरी मन्दिरको शिक्षकको स्वभाव र व्यापारदेखि येशूमा वैराग्य पलायो । उनी घर छोडी यहोबा परमेश्वरको खोजीमा १८ वर्ष भारतखण्डको जम्बुद्वीपमा बिताए । डा. नेटोविच र उनका खोज टोलीले ४० वर्षको खोज र अनुसन्धानबाट तिब्बतको हिमोस बौद्ध लामाहरूको गुम्बा पुगी सत्यतथ्य सार्वजनिक गरिसकेका छन् । त्यहाँका लामाहरूबाट ताडपत्र, भोजपत्रमा लेखिएको सामग्री तथा स्वयम् येशूखीष्टद्वारा लिखित प्रकरण पनि प्राप्त भए । यसरी येशू १२ वर्षको उमेरदेखि ३० वर्षको उमेरसम्म १८ वर्षको अवधि बौद्धविहार, बौद्धशिक्षा र वाराणसी क्षेत्रमा घुमी ब्राह्मणहरूसँग वैदिक धर्मको शिक्षा लिएको पाइन्छ । उक्त यथार्थ सत्यलाई झुटो बनाउन कयौं खीष्टियन पादरीहरू नलागेका होइन । येशूको हस्तलिपि देखेपछि उनीहरूका लागि अन्ततः मौन रहनुको अर्को विकल्प रहेन । वैदिक मन्त्र र बौद्ध शिक्षामा निपूण भएका खीष्ट ३० वर्षको उमेरमा भारतखण्डको जम्बुद्वीपबाट गालिल हुँदै यहुन्नाकहाँ तिनीद्वारा बप्तिस्मा लिन यर्दनमा आउनुभयो । जुन कुरा मत्ती ३ (१३) मा प्रष्टसँग बताइएको छ । मत्ति ४:२ मा उहाँ चालीस दिन चालीस रात उपबास बस्नु भएको बताइएको छ ।

वैदिक ज्ञान र बौद्ध शिक्षामार्फत उहाँले ध्यानमा प्रवेश गरी दियावलसलाई जित्नुभयो र यहोबाको सेवा कार्यमा लाग्नुभयो । उपदेशका क्रममा तात्कालिक धर्मगुरुहरूले येशूलाई धर्मविरोधी भएको आरोप लगाई क्रुसमा झुण्डाई मारे । येशूको मृत्युपश्चात् यो धर्मको विस्तार भएको पाइन्छ । हाल यो धर्म विश्वभरि सबैभन्दा बढी फैलिएको धर्म हो । यस धर्ममा थुप्रै सम्प्रदाय, पन्थ र धर्मसंस्थाहरू छन् । यी सम्प्रदायभित्र रोमन क्याथोलिक, आर्थोडक्स, रसियन आर्थोडक्स, एडलिंकन चर्च, प्रोटेस्टेण्ट

चर्च, पेन्टिकोस्टल चर्च, यहोबाको साक्षी, परमेश्वरको मण्डली आदि साम्प्रदायिक चर्चहरू छन् ।

डा. थोमस ह्वाङ आफ्नो पुस्तक खीष्टियन ईश्वर शास्त्रका महत्वपूर्ण शिक्षा भाग १, पृ १३ मार्फत यस्तो लेख्छन्, "यो संसारमा भएका प्रोटेस्टेण्ट सम्प्रदायहरू देखेर अचम्म लाग्न सक्छ किनकि यहाँ २२,००० सम्प्रदायहरू छन् । २२००० त प्रोटेस्टेण्टहरूको मात्र संख्या हो तर अरू समूह र सम्प्रदायहरू यस संसारमा खीष्टियनहरूको नामले चिनिन्छन् ।"

यति धेरै खिष्टियन सम्प्रदायहरू जसले एउटै बाइबल बोक्छन् । सबैले पुकार गर्ने एउटै परमेश्वर पुत्र येशू हुन् । अब यिनीहरूबीचको सम्बन्ध कस्तो छ जान्नका लागि शे.तेकाराबद्वारा लिखित धर्मको इतिहास पृष्ठ नं. ३०७ पल्टाउँदा, "पहिलेदेखि यी सबै खीष्टियन सम्प्रदायबीच प्रायशः शत्रुता देखिने गर्दछ ।"

यसैको कारण यिनीहरू यहुदीमा भन्दा अन्य जातिहरूबीच फैलिएको देखिन्छ । "खीष्टियनमण्डलीमा बढी विश्वासीहरू यहुदीभन्दा अन्य जातिहरू हुन थाले ।"(खीष्टियन मण्डलीको इतिहास-२०६०, पृ. ४८, दिलबहादुर तमाङ)

नेपालमा कसरी मण्डलीको शुरूवात भयो भन्ने ठोस ऐतिहासिक प्रमाण पाइँदैन । तथापि हिन्दू-बौद्धधर्मको तपस्थल नेपालमा वि.सं. २००७ पूर्व खीष्टियन बसोबास गर्दै आएको इतिहास भेटिँदैन । त्यसपूर्व नेपालमा आउने खीष्टियनहरू धर्मप्रचारका लागि आएको इतिहास पढ्न पाइन्छ । १६ औँ शताब्दीमा ग्रोवर र डोरवील नाम दुई जना खीष्टियन पाष्टरहरू चीन, ल्हासा हुँदै नेपालमा आइपुगेका थिए । उनीहरूले प्रताप मल्ललाई दुरविन उपहार दिएको कुरा सुन्न पाइन्छ । मल्लकालमा नेपाल भित्रिएका पाष्टरहरू लामो समयमा अडिन सकेनन् भनी बालचन्द्र शर्माले 'नेपालको ऐतिहासिक रुपरेखा'मा उल्लेख गरेका छन् ।

यसैताका पादरी जुशेप्पे फेलिचे दा मोररोको पत्र (काठमाडौँ, जुलाई, २९, १७७०) प्रकाशित भइसकेको छ । उनले उक्त पत्रमा "यी नेवारहरू जो आफूलाई नेपाली भन्छन्, यिनीहरूले धर्मको कुनै भेउ पाउन सकेका छैनन् । यिनीहरूले मेरा उपस्थितिमा यिनीहरूको धर्मग्रन्थ जसलाई शाशान (शास्त्रअनुसार गर्नु) भनिन्छ, त्यसको (यिनीहरूको देउताले प्रयोग

गर्ने भाषा) दुई हरफ पनि उच्चारण गरेका छैनन् । न त यिनीहरूले प्रभू मान्ने आफ्ना देवता हुन् कि राक्षस, त्यसको बारेमा केही बताउँछन् । अझ एकपटक त मैले वादविवादको क्रममा यी पुरोहितको अगाडि उनीहरूको भ्रमपूर्ण देउताहरूको धेरैपटक खिल्ली उडाउँदा समेत यिनले मप्रतिको सद्भाव कायमै राखे । अर्कोपटक त तिमीहरूको देउता डेभिडको जस्ता टाउको भएका राक्षसहरू हुन् भन्न पनि चुकिन ।"

यस प्रकार नेपाली स्थानीय धर्म, संस्कृतिप्रति घृणा फैलाउने काम तात्कालिक समयदेखि गरेको पाइन्छ । (बाइबल र माओवाद-२०७३, पृ. २१-२३) ।

तात्कालिक समयमा नेपाल भित्रिएका पादरीहरूले हिन्दू, बौद्धधर्मावलम्बीहरूले मान्ने देवीदेवताहरूलाई राक्षसको संज्ञा दिई घृणा फैलाउने मात्र नगरी नेपाल संस्कृति, सभ्यता, कलाको उच्च विकासमाथि निर्मम प्रहार गरेको देखिन्छ भन्ने कुरा सिल्भा लेभीको लेखले पुष्टि गर्दछ । सिल्भा लेभी लेख्छन्- पादरी पुरातात्विक चिजहरूमा चाख राख्ने खालका थिएनन् । दुश्मनसँग मेलमिलाप गर्ने खालका पनि होइनन् । कप्तान रोजले यिनबारेको एउटा भयानक कुरा बताएका छन्- "मैले भर्खर नेपालबाट धपाइएका केही इटालेली पादरीहरू भेटेको थिएँ । केही सूचना पाउने आशाले म हर्षित थिएँ तर निराश हुनुपऱ्यो । उनीहरूमध्ये सबभन्दा बुद्धिमानी देखिने प्रमुखलाई मैले उनी बसेको ठाउँभन्दा नजिकैको एउटा स्थानबारे जानकारी माग्दा दिन सकेनन् । त्यो पनि त्यस देशमा १२ वर्ष बसिसकेपछि । उनले मलाई आफ्नो फूर्ति र बहादुरी देखाउन आफूहरूले नेपालमा तीन हजार हस्तलिपिहरू जलाएको कुरा बताए । भाग्यवश क्यापुचियनहरू नेपालमा धेरै बस्न नपाएकाले तिनीहरूले धेरै सामग्री बिगार्न पाएनन् ।" (नेपाल हिन्दूराज्यको इतिहास, पृ. ७४, लेभी सिल्भा)

सन् १४५२ पोप्ले राजा निकोलसलाई गैह्र खीष्टीयन देशलाई चर्चको मातहतमा ल्याउने आदेश दिएपछि विश्वभरिका खीष्टीयन अभियानअघि बढ्यो । "डक्ट्रिन अफ खीष्टीयन डिस्कभरी" नामले चिनिने तत्कालीन समयको अन्तर्राष्ट्रिय कानुनले प्रभूले दिएको यस पृथ्वी खीष्टीयनहरूको निम्ति मात्र हो । गैह्र खीष्टीयनहरू मुक्त हुनुपर्छ । डक्ट्रिन अफ खीष्टीयन डिस्कभरी बोकेर आएकाहरूले १० देखि ५० प्रतिशत कर लगाए । सिमाना

जोडिएको बंगालमा भकारीमा धान संकलन गरेर राख्न दिइएन । खाद्यान्नको सट्टा अफिम लगाउन बाध्य पारियो । यिनै खीष्टीयनहरूको कारण सालाखाला १ करोड मानिस मरे । उता अमेरिका छिरेका खीष्टीयनहरूले गैह्र खीष्टीयनलाई भोकचलन गर्न नपाउने कानुनी हबला दिएर राष्ट्रपति एण्डेउ ज्याक्सनले इन्डियन रिभुवल एक्ट जारी गरे । त्यहाँ हजारौं वर्षदेखि बसी आएका गैह्र खीष्टीयनलाई मिसिसिपी नदी पारी खेदियो । कैयौंलाई मारियो । महिलाहरूलाई बच्चा पाउन नमिल्ने बाँझो बनायो । हालको अमेरिकामा मात्र १ करोड ८० लाख गैह्र खीष्टीयन मारिए । (अनेकौं दृष्टिमा राष्ट्र निर्मिता पृ.नं. ८९४-८९५, २०७६,सुशिल गौतम )

यी सबै बुझेका पृथ्वीनारायण शाहले पादरीहरूलाई देश निकाला गरी देशको सभ्यता, कला, संस्कृतिको उच्च सम्मान गरेको देखिन्छ । नेपाल वि.सं. २००८ (सन् १९५१) देखि चर्चको प्रचारप्रसार कार्य प्रारम्भ भयो । वि.सं. २०१७ (सन् १९६०) सम्म २५ जनालाई धर्मान्तरण गरिएको थियो । त्यसको १५ वर्ष पछि वि.सं. २०४२ (सन् १९८५) मा त्यो संख्या २५०० पुगेको थियो । (नेपालमा इसाईको चलखेल-२०७२, पृ.११३, डा. शास्त्रदत्त पन्त)

नेपालमा इसाई धर्मान्तरणको सन्दर्भमा वि.सं. २००७ देखि वि.सं. २०१७ र त्यसपछि वि.सं. २०४६ सालसम्म पनि नेपालमा नगन्य मात्रामा गिर्जाघर (चर्च) र इसाई थिए । नेपालमा बहुदलीय व्यवस्था पुनर्स्थापनापछि इसाईको संख्या ह्वात्तै बढेको पाइन्छ । वि. सं. २०४६ सालसम्म आइपुग्दा नेपालमा यो संख्या २ हजार ७ सय ९९ पुगेको देखिन्छ जबकि वि. सं. २०१९ सालसम्म नेपालमा २ वटामात्र चर्च रहेको पाइन्छ । इसाईले उपलब्धि हासिल गरेको निश्चित प्रमाण भनेकै यस धर्मका अनुयायीहरूको वृद्धि नै हो । वि.सं.२००७ सम्म आइपुग्दा नेपालभरिमा ५० भन्दा कम मानिस यस धर्मका अनुयायी भएको कुरा अनौपचारिक रूपमा अनुमान गरिएको पाइन्छ । वि.सं.२०४६ सम्म आइपुग्दा २५ हजारदेखि ३५ हजारसम्मको अनुमान गरिएको थियो । अहिले वि.सं. २०७० सालसम्म आइपुग्दा इसाईधर्म मान्नेहरूको संख्या २५ लाख पुगेको दाबी गरिएको छ । यो प्रक्रिया तीव्र रूपमा अगाडि बढिरहेको छ । (बाइबल र माओवाद-२०७३, पृ. ३७, अर्जुन झवाली/पेशल निरौला)

"नेशनल चर्चेज फेलोसिफ (एनसीएफ) का मनोज प्रधानले प्रत्येक वर्ष बाह्र प्रतिशतले नेपालमा चर्चको संख्या थपिएको दावी गरेका छन् । वि.सं. २०४९ देखि वि.सं.२०५२ बीचको कालखण्डमा एक्काईस प्रतिशतले चर्चहरू वृद्धि भए । राजधानीभित्र ललितपुर र राजधानीबाहिर मकवानपुरलाई इसाईहरू आफ्नो उदाहरणीय क्षेत्र मान्छन्, जहाँ वि.सं. २०६५ सालमै इसाईको संख्या ह्वात्तै बढेको थियो । त्यतिबेला ललितपुरमा १ सय ३८ चर्च र २७ हजार ८६ जना इसाई थिए भने मकवानपुरमा १ सय ३६ चर्च र २४ हजार ८ सय ३१ जना इसाई धर्मावलम्बी थिए । इसाईहरूका अनुसार वि. सं. २०६५ सालपछिको अवस्थामा चर्च र इसाईहरूको संख्या झन् बढेको छ ।"(नेपालमा राजतन्त्र कि गणतन्त्र- २०६८, युवराज गौतम) ।

वि. सं.२००७ पछि पोखराको रामघाट चर्च र काठमाडौँको पुतलीसडक चर्च निर्माणसँगै नेपाली खीष्टियन इतिहास औपचारिक रूपमा सुरु हुन पुग्यो ।

नेपालको सन्दर्भमा एउटै वाइबल बोकेर हिड्ने खीष्टियनभित्र अन्य राष्ट्रहरूमा जस्तै थुप्रै सम्प्रदाय निस्किएका छन् । तीमध्ये केही दार्शनिक पक्षलाई लिएर, केही धार्मिक पक्षलाई लिएर केही नैतिक कट्टरतालाई लिएर विभाजित भएको पाइन्छ । यिनीहरूले मान्ने एउटै यहोबा हो भन्ने तथ्य सबैले बुझेको पाइन्छ । तापनि यिनीहरूबीच फुट आउनुको गहिराईमा पुगेर हेर्दा त्यहाँ उठ्ने दशांश, भेटी कार्ड, मुठीदानजस्ता आर्थिक सम्पत्तिहरूको प्रयोग कसले गर्ने भन्ने विवाद नै हो, कुनै धार्मिक मतभेद होइन । यसरी आर्थिक सम्पत्तिको लागि पाष्टरहरूले एउटै बाइबलको वचन र शब्दलाई तोडमोड गरेको देख्न सकिन्छ । थुप्रै मण्डलीहरूमध्ये नेपालमा रहेका केही मण्डलीहरू यसप्रकारका छन्- योहोबाको साक्षी, मर्मोनवादी, ऐक्य ईश्वरशास्त्र, नवयुग अभियान, खीष्टियन साइन्स, सच्चाई धर्म, पिता परमेश्वर, परमेश्वरको मण्डली रोमन क्याथोलिक, त्रिएक आदि । यी मण्डली एकले अर्कोलाई झुटो सैतान भन्ने गरे पनि एउटै बाइबल बोकेर एउटै यहोबाको प्रार्थना गरेको देख्दा सबैलाई आश्चर्य लाग्छ । दशांशको लागि यति तल झरेर आफ्नोबाहेक अरु मण्डलीलाई झुटो भन्नु चाहिँ साच्चै धर्म सम्प्रदाय भन्न पनि लाजमर्दो हुँदोरहेछ ।

ई.सं. १९८६ अक्टोबर २७ तारिख इटालीको एसिफि शहरमा १० धर्मका अगुवाहरूद्वारा गरिएको शान्तिको लागि विश्व प्रार्थना दिवस र येशूको अनुग्रहको कारण नेपालमा भएका खीष्टियनहरूले पनि धार्मिक सहिष्णुता र एउटै परमेश्वरलाई स्वीकार गर्न थालेका छन् । NCCN / SAEPP द्वारा संयुक्तरूपमा १५-१९ अक्टोबर २००४, काठमाडौँमा आयोजित बहुधार्मिक सहकार्य र साम्प्रदायिक सौहार्दता विषयक कार्यशालामा दक्षिण एसियाका ५ राष्ट्र नेपाल, भारत, पाकिस्तान, बङ्गलादेश, श्रीलङ्काका हिन्दू, क्रिश्चियन, मुस्लिम र बुद्धिष्ट समुदायका सहभागीता थियो । (नेपाल राष्ट्रिय मण्डली परिषद्को संक्षिप्त परिचय तथा अवधारणा-२०६५, पृ.१६) यही अभियान सफल बनाउन खीष्टियन पाष्टर के.बि.सहितका देशभक्त खीष्टियनहरू अघि बढ्नु नेपालको लागि आसाको सन्देश देखिन्छ ।

# के चीन खीष्टियन विरोधी हो त ?

पछिल्लो समयमा चीन सरकार खीष्टियन विरोधी भएको खीष्टियन मण्डलीहरूले आरोप लगाउँदै आएका छन् । यो आरोप र चिनियाँ गतिविधिको गहिराईमा पुगेर सोधखोज अनुसन्धान गर्ने क्रममा बहुचर्चित लेखक शमसेरबहादुर आलेमगरद्वारा लिखित 'मगर जातिको इतिहास र संस्कृति' नामक पुस्तकमा लेखिएको चीन र इसाईको इतिहासलाई परमेश्वरको अदालतमा प्रमाणको रूपमा पेश गर्न जरूर देखिन्छ । चीन सरकारले सन् १९५० को दशकमा सम्पूर्ण खीष्टियन मण्डलीहरू सरकारको अधीनमा नै सञ्चालन गर्ने निर्णय गऱ्यो । यो क्रियाकलापप्रति खीष्टियनहरू रूष्ट भएपछि चीन सरकारले सम्पूर्ण खीष्टियनधर्म प्रचारमा रोक लगायो ।

सन् १९६६ देखि सन् १९७६ को सांस्कृतिक क्रान्तिको बेला भने यो व्यवस्था अझ बढी मजबुत हुन पुग्यो । यस समयमा घरेलु मण्डलीको जन्म भएको थियो । सन् १९७८ मा पुनः सरकारले सम्पूर्ण घरेलु मण्डलीहरूलाई हस्तक्षेप गरी आफ्नै आदेशमा चलाउने भयो । रोमन क्याथोलिक मिसिनरीहरूले चीनमा १५ औं शताब्दीदेखि सु-समाचार सुनाउने काम गरेको थियो । उनीहरूले बौद्धधर्ममाथि वारम्वार सु-समाचार प्रचार गरेको कारण १९ औं शताब्दीको शुरूतिर चीनमा केवल २ लाख ५० हजार खीष्टियनहरू भएकामा सन् १९०० सम्ममा ७ लाख ५० हजार खीष्टियनहरू भए भने १२ वर्षपछि १९१२ मा तीस लाख पुग्यो । खीष्टियन मण्डलीमा आइरहेको सुधार र खीष्टियन प्रभावबाट पश्चिमी देशहरूमा निर्मित स्कुलहरू पश्चिमी सोचको शिक्षाप्रणाली अपनाएको कारण समस्या बढ्न गयो । सन् १९४९ मा साम्यवादीहरूका सरकारका कारण खीष्टियनहरूले धर्म प्रचार गर्न नसक्ने अवस्थामा पुगे । रोमन क्याथोलिक मण्डली चीनको साम्यवादी सोच विरोधी थियो ।

सन् १९९१ मा रूस टुक्रिएपछि चीनको काँधमा साम्यवादी राष्ट्रको गहन जिम्मेवारी आयो । फलस्वरूप पश्चिमी पादरीहरूले चीनबाट दशांश उठाएर चेन सिस्टममार्फत विदेश लैजान कुटिल जाल बन्द गर्न पोप र पाष्टर खडा गर्ने निर्देशन दिए । ती आदेशलाई नटेरी चिनियाँ पैसा चेन सिष्टममार्फत विदेश लगेको बुझेपछि चीन सरकारले चर्चमाथि नै प्रतिबन्ध लगायो ।

यतिबेला चर्चहरूमार्फत पश्चिमी देशहरूमा चीन विरोधी गतिविधि बढेको भन्दै चर्चहरू भत्काउन शुरु गरिएको चिनियाँ संचार माध्यमहरूले बताइएका छन् । सी जिनपिङ राष्ट्रपति भएपछि अवैध गतिविधि गर्दै आएका चर्चहरू भत्काउने वा बन्द गराउने नीति लिएका थिए । उनले पश्चिमी देशहरूले चर्चमार्फत चिनियाँ सस्कृतिमाथि हमला गर्न लागेको भन्दै चर्च बन्द गर्ने नीति लिएको बताइएको छ ।
जस्तो चीन धर्म परिवर्तन विरूद्ध नीतिगतरूपमा अगाडि बढ्दै चर्चहरू भत्काइरहेको छ । (बाइबल र माओवाद-२०७४ पृ. २७२, अर्जुन ज्ञवाली, पेशल निरौला)

चीनको साङसी प्रान्तको द गोल्डन ल्याम्परका चर्च सशस्त्र प्रहरीले भत्काइदिएको छ । द न्यूयोर्क टाइम्सको अनलाइन संस्करणअनुसार एसोसियट प्रेसले सशस्त्र प्रहरीले विस्फोटक पदार्थ प्रयोग गरेर चर्च भत्काइदिएको छ । समाचारअनुसार साङसीमा आधा दर्जन चर्च भत्काइसकेको छ । (7th march 2018 Nepal Chautari Online.com, Kathmandudaily.com)

चीनको राजधानी बेइजिङ्गसमेत अनेक सहरमा चिनियाँ अधिकारीहरूले बाइबल जलाएका, होली क्रस भाँचेका र चर्चहरू बन्द गराइएको छ । (२६ भाद्र २०५७ लोकान्तर समाचार) ।
(Luksa Milelionis 10 stept 2018 Foxneus.com) ।

यस्तै अर्को रहस्यबारे सौरभ शाह लेख्छन्, 'गेस्पेल अफ द गड जमाथन लिन्डेले लेख्दासम्ममा भेटिकन हिमालयको उत्तरी र दक्षिण ढालका सन्दर्भमा दुई निर्क्यौलमा पुगेको थियो । इसाईधर्म विस्तारका निम्ति दुई तत्व ठूला बाधक छन् । पहिलो ब्राह्मण जसलाई तोड्न

संस्कृतलाई पहिला नष्ट गर्नुपर्छ तिब्बत जसलाई तोड्न चीनबाट अलग गर्नुपर्छ (असहमति-२०७१ पृ.नं ७२) ।

यी तथ्यसँग निकट भएका अर्को पुस्तक 'नेपालमा इसाईको चलखेल' मार्फत डा.शास्त्रदत्त पन्त भन्छन्, "तिब्बतलाई चीनबाट छुट्याउन अनि चिनियाँ अर्थतन्त्र टाट पल्टाउन पश्चिमी पादरीहरू इसाईमार्फत निरन्तर लागि रहेका छन् ।"

इसाईहरू किन चीनविरूद्ध छन् त भनी मैले सोधखोज गर्दा चिनियाँ सभ्यता प्राचीन भएको, चिनियाँबौद्ध तथा सनातन धर्मले विश्व हाँक्ने डर भएको बुझियो । चिनियाँ सभ्यताको प्राचीनतासँग इसाई डराएको प्रष्ट भयो । यही प्राचीनताको बारेमा डा. प्रपन्नाचार्य 'वेदमा के छ?' मार्फत यसो भन्दछन्, "चीनको सभ्यता पनि प्राचीन सभ्यतामध्ये एक मानिन्छ । चीनको चार हजार वर्ष पुरानो लिखित इतिहास रहेको पाइन्छ । त्यस्तै चीनमा सत्र लाख वर्षअघिदेखि मानिसहरू बसोबास गरेको विश्वास गर्दछन् । त्यहाँ युयान प्रान्तमा प्वानमओ मानिस, लान्टटोन काउन्टीमा लान्थेन मानिस र वर्तमान पेइचिङको दक्षिण-पश्चिम चखोओत्येनमा पेइचिङ मानवका अवशेषहरू पाइएका छन् । विश्वको पुरानो साहित्यमा हिब्रु, ल्याटिन चीनी आदिसँग धेरै दिनसम्म विवाद भएपछि चिनियाँहरूको ग्रन्थ प्राचीन हो भन्ने कुरा प्रष्ट भयो । ती शुकिङ्ग ग्रन्थको काल ईशा ग्रन्थहरूको कालभन्दा पूर्व भएको पाइन्छ ।"(वेदमा के छ ? पेज नं. १२६)

शेतोकराव भन्दछन् "तीमध्ये सबैभन्दा महत्वपूर्ण पितृपूजा थियो । सबै परिवारको आफ्नै मन्दिर वा पूजाकोठी हुन्थ्यो । त्यहाँ वर्षमा निश्चित समयमा परिवारसित सम्बन्धित अनुष्ठान सम्पन्न गर्ने गरिन्थ्यो । हरेक कुल वा गोत्रको आफ्नो आदिपूर्वजको सम्मानमा निर्मित मन्दिर हुन्थ्यो । उक्त मन्दिरमा पूजा र अन्य अनुष्ठान परिवारको मूलीको अथवा कूलको जेठो व्यक्तिद्वारा सम्पन्न गर्ने गरिन्थ्यो । प्राचीनकालमा मृतकहरूका समाधिको नजिक सानो मन्दिर बनाउने गरिन्थ्यो ।" (धर्मको इतिहास पृ.१३८ शे.तोकारेव) ।

यही प्राचीन इतिहास बोकेको वर्तमान चीनको विश्व मानचित्रमा कस्तो अवस्था छ सोबारे प्रसिद्ध विद्वान् प्रा. डा. राजेश गौतम, प्रा. डा.

देवीप्रसाद शर्मा कँडेल र प्रा. खेमराज पोखरेल आफ्नो पुस्तकमार्फत यसरी उल्लेख गरेका छन् "चीन पृथ्वीको उत्तरी गोलार्द्धमा पर्दछ र यो देश एसियाको मानचित्रमा सुदूरपूर्वमा अवस्थित छ । यो देश १८.३०° अक्षांशदेखि लिएर ५३° अक्षांश, ७४.५०° देखि १६.५०° पूर्व देशान्तरसम्म फैलिएको छ । यसको उत्तर पश्चिमको सीमा रूस, मंगोलिया र अफगानिस्तनसँग जोडिन पुगेको छ । उत्तरपूर्वमा कोरिया, दक्षिणमा लाओस, भियतनाम, नेपाल, भारत, बर्मा तथा दक्षिण पश्चिममा काराकोरम र हिमालय श्रृङ्खला पर्दछ ।" (सुदुरपूर्व चीन र जापानको इतिहास-२०७०पृ. १खेमराज पोखरेल) ।

"यसको जनसंख्या एक अरब बीस करोडभन्दा माथि पुगिसकेको छ । क्षेत्रफलको हिसाबले चीन विश्वको तेस्रो ठूलो मुलुक हो र जनसंख्याको हिसाबले पहिला ठूलो देश हो । चिनियाँ सभ्यताको इतिहास धेरै पुरानो छ । अति प्रचीन समयमा चीनको ह्वाङ्हो र याङ्सिक्याङ्ग नदीहरूको किनारमा मानिसहरूको बस्ती थियो ।"(आधुनिक चीन र जापानको इतिहास-२०५८, पृ.१,डा. देवीप्रसाद शर्मा कँडेल) ।

सन् १९४९ मा शुरु भएको साम्यवादले १९७६ सम्मै खीष्टियनलाई विदेशी इशारामा चल्न दिएनन् । यस्तो क्रियाकलापअगाडि बढाएको चीनको सभ्यता र आदिम संस्कृति कस्तो थियो भन्ने बारे हेरौँ । "२०० वर्षअगाडि मिसिनरीहरू चीनमा गए र हाल त्यहाँ ८ प्रतिशत मानिसहरू खीष्टियन भएका छन् ।"(खीष्टियनईश्वर शास्त्रको महत्वपूर्ण शिक्षाहरू-२००५ ई.स., पृ. १९४ डा. थोमस ह्वाङ) ।

राष्ट्रपति विद्यादेवी भण्डारीले नेपाल भ्रमणमा रहेका चिनियाँ राष्ट्रपति सि जिन पिङको सम्मानमा सोल्टी होटलमा २०७६/०६/२५ मा आयोजना गरेको रात्रीभोज कार्यक्रममा सम्बोधन गर्दै सि जिन पिङले नेपालको बौद्धधर्म अहिले चीनको स्थानीय धर्म बनेको छ भनी बताएका थिए । यी माथिका लेखहरूको गहिराईमा पुगेर हेर्दा चीन सरकारले देशलाई विखण्डन हुनबाट रोक्न, चिनियाँ संस्कृति, परम्परा, भाषा, धर्म मेटिँदा देशको अर्थतन्त्रमा समेत प्रभाव पर्ने देखेर खीष्टियन विरोधी नीति ल्याएको सत्य छर्लङ्ग हुन्छ । यी दुवै सत्यता चीन सरकारले बाहिर नल्याउनुचाहिँ विश्वमा धार्मिक युद्ध नहोस् भन्ने चाहेको देखिन्छ ।

# उत्तरकोरियाबाट किन भाग्दै छन् खीष्टियनहरू ?

उत्तरकोरिया खीष्टियनहरूको संख्या दिनानुदिन घट्दै गइरहेको छ । १०० वर्षअगाडिमात्र दक्षिणकोरियामा मिसिनरीहरू आएका थिए किनकि यो देश सुदूरपूर्वमा छ । कोरियाले निकै पछिमात्र सु-समाचार सुन्ने मौका पायो । (खीष्टियनईश्वर शास्त्रको महत्वपूर्ण शिक्षाहरू -२००५ ई.स., पृ. १९४डा. थोमस ह्वाङ)

उत्तरकोरियामा खीष्टियनको संख्या दिनादिन घट्दै गइरहेको छ । सन् १९५३ सम्म दुईवटा कोरियन मुलुकबीच युद्ध हुँदा करिब ३ लाखको संख्यामा रहेका खीष्टियनहरू ५० वर्षपछि जम्मा ४ लाखजस्तो मात्र छ । कुल संख्याको १.६९ प्रतिशतमात्र खीष्टियन भएको पाइन्छ । (खीष्टियनमण्डलीको इतिहास-२०६०, पृ २५३ दिलबहादुर तमाङ)

पहिले त उत्तर कोरियाको राजधानी प्योङयाङलाई पूर्व यरूशेलम भनी चिनिन्थ्यो । त्यहाँको सरकारले कोरियाली सम्पत्ति दशांशको नाममा विदेश गएको थाहा पाएपछि कडाई गरेको थियो । त्योभन्दा पहिले कोरियालीधर्ममा वैदिक धर्मको छाप परेको पाइन्छ, यसका बारेमा धार्मिक इतिहास अध्ययन गरौँ ।

कोरियालीहरूमा पितृपूजा प्रचलित छ र त्यसमा कन्फ्युसियस परम्पराको प्रबल प्रभाव छ । त्यसले कोरियामा समेत गहिरो जरा हालेको थियो । केही विद्वान्हरूले त कतिसम्म भन्दछन् भने कोरियामा पितृपूजाको शुरूवात कन्फ्युसियसपन्थीहरूले गरेका थिए । जे होस्, त्यो पूजाको रूप चिनियाँ रूपजस्तै छ । पुर्खाहरूका नामहरूसहित पार्टीहरू पारिवारिक मन्दिरमा राखिन्छन् । त्यस्ता पार्टीमा मानिसका तीन आत्माहरूमध्ये एउटा आत्माले

बास गर्दछ (दोस्रो आत्मा चिहानमा शवसँगै रहन्छ र तेस्रो आत्मा आत्माहरूको लोकमा जान्छ ) भन्ने मानिन्छ । निश्चित तिथिमितिमा पार्टीसमक्ष पूजा गरिन्छ, भेटी र दान-दक्षिणा दिने गरिन्छ । परिवारको मूलीको निर्देशनमा गरिने त्यो पूजामा परिवारका सबै सदस्यहरू र आफन्तहरूले भाग लिने गर्दछन् । (धर्मको इतिहास पृ. १५१,१५२, शेतोकारेव) ।

१० औं शताव्दीमा बौद्धधर्मलाई राजकीय धर्मसमेत घोषणा गरिएको थियो । त्यो युगमा सारा बौद्धगुम्बाहरू, मठहरू र विशाल मूर्तिहरूको निर्माण भएको थियो । पछि आएर तीमध्ये केही नष्ट गरिएको थियो । (धर्मको इतिहास, पृ. ५३ शे.तोकारेव) ।

उत्तर कोरियालाई मेट्न झुट्ठा गोस्पोलहरूद्वारा नियोजित प्रयास धेरै अघिदेखि भएको पाइयो । कोरियालीहरूका पितृपूजा आत्मासम्बन्धी धारणा र राजकीय सम्मान पाएको बौद्धधर्मलाई कमजोर बनाउन थुप्रै षड्यन्त्र भयो । त्यो षड्यन्त्रमा कोरिया पूरै फसे तापनि कोरियाली सरकारले सम्पत्ति दशांशको नाममा विदेश गएको थाहा पाएपछि खीष्टियन विरोधी देखियो । आफ्नो प्राचीन धर्म संस्कृति जोगाउन नसके कोरियालीहरूले देशको अर्थतन्त्र धार्मिक दशांशको नेटवर्क व्यवसायमार्फत बाहिर जान भने रोक लगाएको पाइयो ।

# ताइवानी खीष्टियनहरूले किन दिदैनन् दशांश ?

यहाँको मण्डलीको सबैभन्दा ठूलो समस्या पाष्टरहरूको अभाव हो । ताइवानीहरू भौतिक कर्ममा बढी आकर्षित हुन्छन् । यहाँका मानिसहरू आफ्ना आफ्ना व्यवसायहरूमा व्यस्त रहन्छन् । उनीहरू चर्चमा बिताउने समय आफ्नो परिवार, आफन्त, दीनदु:खीहरूको सहयोगमा जुट्ने गर्दछन् । उनीहरू चर्चमा मुस्किलले आराधना गर्न आउँछन् र चर्चमा पनि निस्क्रिय भई केही गर्न चाहँदैनन् । अझ पूर्ण समय काम गर्ने सेवक र सेविका पाउन त झन् मुस्किल छ । यस्तो हुनुको प्रमुख कारण यहाँका विश्वासीहरूले भेटीकार्ड र दशांश बुझाउँदैनन् । फलस्वरूप सेवाकाई गर्न आउने पाष्टरहरूको रोजीरोटी नहुने हुँदा यहाँका चर्चहरू शून्य जस्तै देखिन्छन् । (मगरजातिको इतिहास र संस्कृति २०७४, पृ. ४०, शम्सेरबहादुर आलेमगर) ।

ताइवानी मण्डलीको सबैभन्दा ठूलो समस्याको बारेमा बुझ्न पाष्टर दिलबहादुर तामाङ भन्छन् "मण्डलीमा विश्वासीहरूले भेटी, दशांस दिने क्रम घट्दै गएकोले पनि कोही पूर्णसमय सेवाका लागि आउन चाहँदैनन् । (खीष्टियनमण्डलीको इतिहास-२०६०, पृ. २३४, वीरबहादुर तामाङ) ।

ताइवानको पछिल्लो इतिहास हेर्दा ताइवानीहरू इसाई विरूद्ध लागेको बुझिन्छ । उनीहरूले यतिसम्म उग्ररूप देखाएकी पोपपाल द्वितीयलाई ताइवानमा प्रवेश निषेध गरेको थिए । (नेपालमा इसाईको चलखेल-२०७२, पृ.८६डा. शास्त्रदत्त पन्त ) ।

ताइवानीमा परेको बौद्धदर्शनको छापले इसाईहरूलाई ठूलो पीडा भएको थियो । उनीहरूको दशांशको व्यापारले ठाउँ पाएको थिएन । सोही कारण इसाईहरू पटकपटक ताइवानमा पुगे । एउटा लक्ष्य ताइवानमा उनीहरूले चर्च खडा गर्नु थियो जुन ताइवानीहरूले स्वीकारी रहेका थिएनन् । यहीकरण इसाईहरू पूर्णकालका लागि ताइवानमा टिक्न सकेनन् भन्ने खोजकको बुझाई हो ।

# श्रीलंका र डी.टी नाइल्स

श्रीलंका बौद्धधर्मले शोभायमान भएको प्राचीन सहर हो । यसको इतिहास २००० वर्षभन्दा पुरानो छ । अशोकको एक छोराले ई.पू. २५० वर्षअघि यहाँ पहिलो बिहार बनाएका थिए । त्यस समयदेखि यहाँका भिक्षुहरूले युयानी र चिनियाँ विद्वान्हरूको सल्लाह लिएर आफ्नो इतिहास शिक्षाप्रद र वैज्ञानिक ढंगमा लेखेका छन् । श्रीलंका एउटा छुट्टै संसार हो । (नेपाल, हिन्दू अधिराज्यको इतिहास-२०१३, पृ.४ सिल्भाँ लेभी ) ।

श्रीलंकामा सनातन हिन्दू, बुद्धिष्ट इतिहासको तुलनामा धेरैपछि मात्र सेन्ट थोमसका अनुयायीहरू प्रवेश गरेको बुझिन्छ । बौद्धधर्मको प्रभावले शान्त रहेको श्रीलंका इसाईको प्रवेशपश्चात् एकपछि अर्को घटना घट्दै अशान्त र गृहयुद्धमा फसेको देखिन्छ । (शम्शेरबहादुर आलेमगर, मगर जातिको इतिहास र संस्कृति) ।

श्रीलंकामा भएका खीष्टियनहरूमध्ये ९० प्रतिशत क्याथोलिक छन् । एकबखत सन्त थोमसका अनुयायी खीष्टियनहरू यहाँ थिए तर अहिले उनीहरू लोप भइसके । १६ औँ शताब्दीदेखि रोमन क्याथोलिक मिसिनरीहरूले दुःख गर्दै आएका भए पनि १७ औँ शताब्दीमा डच९म्गतअज०हरूका शासनकालमा रोमन क्याथोलिक पुरोहितहरू रहन दिइएन । त्यसैले धेरै खीष्टियनहरू इस्लाम र हिन्दूधर्ममा फर्के । कोही प्रोटेस्टेण्ट भए सन् १७९६ मा ब्रिटिशहरूले डचहरूलाई देश निकाला गरेपछि भने केही शान्ति भयो तर डचहरूको शासनकालको अन्तपछि पुनः धेरैजना रोमन क्याथोलिक पुरोहित नै बने । १८ औँ शताब्दीमा खीष्टियन समुदाय अल्पसंख्यक रही १९ औँ शताब्दीमा केही हदसम्म फस्टाई झण्डै ८ प्रतिशत भएको थियो । (खिष्टियन मण्डलीको इतिहास-२०६० पृ २११ दिलबहादुर तामाङ) ।

सन् १९५६ मा सिङ्हाला राष्ट्रिय भाषा घोषित भएपछि र सन् १९६० मा राष्ट्रिय शैक्षिक प्रणाली आएपछि भने खीष्टियन मिसिनरीहरूलाई धेरै

अप्ठ्यारो पर्न गयो । उनीहरूले संचालन गरेका मिसिनरी स्कुल बन्द हुन गए । श्रीलंकाको मेथोडिक्स चर्चले डिटि नाइल्सजस्ता विख्यात खीष्टियन अगुवा निर्माण गऱ्यो । दक्षिण एशियामै बहुचर्चित व्यक्तित्व र श्रीलंकाका सबैभन्दा प्रसिद्ध खीष्टियन व्यक्ति डिटि नाइल्सले (CDT Niles) ले एशियाको खीष्टियन क्षेत्रमा नै ठूलो योगदान पुऱ्याएका छन् ।

सन् १९८९ मा 'बर्लिन वाल' भत्कनेवित्तिकै केही नेपालीले टिप्पणी गरेका थिए, अबको युद्ध इस्लामविरूद्ध इसाई युद्ध हो । लाक्षणिक शुरूवात श्रीलङ्काबाट भई नै सकेको थियो । त्यो युद्ध सिंहाली र तामिलबीच थिएन, बौद्धधर्मावलम्बी र इसाईबीच थियो । त्यसैले त्यहाँ नर्वे मध्यस्थताका निम्ति आयो । ७९ प्रतिशतको हाराहारीमा 'इमान्जेलिकल लुथरन' जनसंख्या भएको नर्वे थियो । अन्ततः कोलम्बो सरकारले नर्वेलाई वार्ताबाट बर्खास्त गऱ्यो । डेनमार्कका विदेश मन्त्रीलाई भिसा दिएन । युनिसेफका प्रमुखलाई बर्खास्त गऱ्यो । स्मरण रहोस्, नेपालमा भने त्यही वर्गको पैसाको भकारी बोकेर संविधानसभा, सभासद्, शिक्षण तालिम र संविधान निर्माण सहकार्यमा पार्टीका ढोकाहरूमा धाइरहेको छ । नेपाल आएको ईयू ट्रोइकामा पनि स्वीस परराष्ट्र मन्त्रालयको प्रतिनिधित्व थियो, धर्मसापेक्ष उत्तर युरोप खुलेरै नेपाली समाजविरूद्ध लागेको छ (नेपालमा इसाईको चलखेल-२०७२, डा. शास्त्रदत्त पन्त) ।

पछिल्लो समयमा श्रीलंकाका जनता इसाई विरोधी भएको पाइन्छ । यहाँसम्म कि पोपपाल द्वितीय श्रीलंका जाँदा उग्र विरोध गरिएको थियो । त्यहाँ पोपले धर्मान्तरण गर्ने र तालिम दिई विद्रोहीलाई उक्साउने गरेको आरोपमा विरोध भएको थियो । (ऐ.ऐ.)

श्रीलङ्काको इतिहासलाई गहिरिएर अध्ययन गर्दा त्यहाँको धर्म संस्कृति परम्परा ध्वस्त बनाउन त्यसै ठाउँको जनतालाई झुट्टा गोस्पोलहरूद्वारा योजनाबद्ध ढंगबाट प्रयोग गरेको देखिन्छ । त्यसैको कारण श्रीलङ्का गृहयुद्धमा फसेको पुष्टि हुन्छ ।

# पाकिस्तानमा खीष्टियनवस्तीहरू नष्ट गरियो ?

सन् १९२३ मा स्थापना भएको पन्जाव खीष्टियन काउन्सिल नै अहिले नेशनल काउनसिल अफ चर्च अफ पाकिस्तान भएको छ । सन् १९५६ मा इस्लामलाई देशको राष्ट्रिय धर्मको रूपमा लिएको पाकिस्तानमा अहिले सबै धर्म मान्न पाउने स्वतन्त्रता यहाँको संविधानले दिए तापनि यहाँ मिसिनरीहरूले निकै दुःख पाएका छन् । सन् १९७० मा एङलिकनहरू मेथोडिस्टहरू लुथरनहरू र प्रेस्वेटेरियनहरू मिलेर चर्च अफ पाकिस्तान (Church of Pakistan) स्थापना गरे । (खिष्टियन मण्डलीको इतिहास-२०६०, पृ २१२, दिल बहादुर तामाङ) ।

पाकिस्तानमा खीष्टियनहरू खुलेर धर्मान्तरण गर्न सक्ने अवस्था छैन । साधारण ज्यामी काम गर्नेहरूमात्र खीष्टियनमा प्रवेश गर्ने गरेको पाइन्छ । अर्थात् तल्लो वर्ग र गरिबहरूलाई धनमोह देखाएर धर्मान्तरण गरिन्छ । ठूला पदहरू र उच्च दर्जाका काम गर्ने खीष्टियनहरू बन्न स्र्चाउँदैनन् । खीष्टियनहरूको आवाज अड्डा र अदालतमा आधामात्र सुनुवाई हुन्छ । पाकिस्तानमा सन् १८३३ देखि विभिन्न मिसिनरीहरूले आफ्नो तवरबाट सुसमाचार सुनाउँदै आएका छन् । यहाँ प्रेस्वेटेरियन, एङ्लिकन, मेथोडिस्टहरू र स्याल्भेसन् आर्मीजस्ता सम्प्रदायहरू एकदमै सक्रिय रूपमा लागि परेका छन् । सन् १९९१ देखियता धेरै खिष्टियनहरूसँग झपड हुन थालेको छ । अझ सन् १९९८ मा त ३०,००० को जनसङ्ख्य भएको खिष्टियनहरूको गाउँ नै नष्ट पारियो । उक्त गाउँ नष्ट पार्नको कारण सोधखोज गर्दा त्यस गाउँमा बस्ने खिष्टियनहरूले महोम्मद साहेबलाई व्याभिचारी ११ पत्नीका पति ६ वर्षको बालिका आयिसालाई शारीरिक पीडा दिएर सम्भोग गरेको अपराधी महम्मद अल्लाहको दूत हुनै

सक्दैनन् । महम्मदले मानिसलाई पशुसँग सम्भोग गर्न छुट दिएको आरोप लगाउनु थियो । (मगर जातीको इतिहास र संस्कृति-२०७५, शम्शेरबहादुर आले मगर) ।

पाकिस्तान सरकारले पाकिस्तानीहरूको राष्ट्रिय भावना एकआपसी एकता र मेलमिलाप खलबल गर्ने गरी धार्मिक सुसमाचार सुनाएको कारण सो हुन नदिनु हो भन्ने प्रष्ट हुन पुग्यो ।

# भुटानमा खीष्टियनको अवस्था नाजुक किन ?

भुटानमा खीष्टियनमण्डली अवस्था नाजुक छ । यहाँ ७२ प्रतिशत जनता बौद्धधर्मावलम्बी छन् भने २३ प्रतिशत हिन्दूहरू बसोबास गर्छन् । खीष्टियनहरू नगन्य छन् । कुनै पनि भेला चर्चमा हुने गर्दैन । सन् १९६५ सम्म त कुनै पनि मिसिनरी संघसंस्था भुटान प्रवेश गरेका थिएनन् । सन् १९६५ देखि सन् १९९० सम्म केही खीष्टियनमिसिनरीहरू लुकिछिपी भुटान पसेको पाइन्छ । भुटान खीष्टियनमिसिनरीहरूले त्यहाँको धार्मिक समन्वयमाथि धावा बोल्दै बुद्ध र शिवलाई सैतान भन्ने गरेका थिए । त्यहाँको सरकारले धार्मिक सद्भाव नखल्बलाउन खीष्टियन क्रियाकलापलाई निषेध गरिएको छ । सरकारी जागिर खाएका केही खीष्टियनहरूले सरकारी ऐन विपरीत धार्मिक खलबल पुऱ्याउन लागेको आरोपमा तिनीहरूलाई सचेत गरिएको थियो ।

भुटानीहरू राजाले प्रजातन्त्र सुरक्षित राख्न नसक्ने हो कि भनेर चिन्तित छन् । राजसंस्था अस्तित्वमा रहुञ्जेल भुटानीहरूलाई मेट्न मुस्किल हुने निष्कर्ष निकालेर बसिरहेका खीष्टियनहरू अहिले नयाँ रणनीति बनाएका छन् । उनीहरूले विदेशमा बसेका भुटानीहरूलाई धर्मान्तरण गरी उनीहरूमार्फत् भुटानको आर्थिक विपन्न वर्ग र समुदायमा प्रवेश गरिसकेका छन् । सुसमाचारको नाममा झुट्ठा गोस्पोलहरू भुटानी प्रजातान्त्रिक अधिकार धर्मको स्वतन्त्रताको अधिकार सुरक्षाका लागि भन्दै राजसंस्थाको अन्त्य गर्ने योजनाबद्ध लागि परेका छन् । राजतन्त्रले खीष्टियन धर्म प्रवेशमा रोक लगाएको छ । तसर्थ राजतन्त्र फ्याक्न सबै प्रकारका तरिका अपनाउन पादरीहरू सक्रिय छन् । झुट्ठा गोस्पोलले भुटानी राष्ट्रियता सिध्याउने कपटी उद्देश्यका साथ राजाविरुद्धको संघर्षमा सामेल भएका छन् । हाल विश्वको एकमात्र महायानी बौद्ध राष्ट्रको रूपमा भुटानको स्थापित पहिचान

छ । आफ्नो बेग्लै विशिष्टता स्थापित भएको यो देश हिन्दू, किराँत, बौद्धधर्मको साझा देश हो । यद्यपि भुटानभित्रको विविधता जोड्ने सबैभन्दा प्रभावकारी सूत्र पनि त्यहाँको राजसंस्था र बौद्धधर्म हो । त्यहाँको राजतन्त्र र बौद्धधर्मप्रतिको गौरव भाव सबै भौगोलिक क्षेत्रका बासिन्दाहरूमा मेलमिलापको आधार बनेको छ । भुटानको विश्व पहिचान र भुटानी राष्ट्रियताको बलियो आधार मेट्न यसैलाई बौद्धराज्यबाट धर्म निरपेक्षमा रूपान्तरण गरिनुपर्छ साथै राजतन्त्रबाट गणतन्त्र ल्याउनुपर्छ भन्ने इसाईहरूको गोप्य योजना छ । सोबारे भुटान चनाखो बन्नुपर्छ अन्यथा भुटान समस्या ग्रस्त बन्नेछ ।

# खीष्टियन धर्म र भारत

सूर्य सिद्धान्तअनुसार (म.श्लो. २४) ग्रह, नक्षत्र, पर्वत, औषधि, पशु, चराचुरूङ्गी आदि बनेर मानिसको विकासमा १,७०,६४,००० वर्ष मानिएको छ । यस रूपले मानिस सृष्टि संवत् अर्थात् ब्रह्मसंवत्सर १५,५५,२१,९७,२९,४९,९८२ वर्ष हुन्छ । ८,६९,००० वर्षपूर्वदेखि २१,६५,००० पूर्वको समयअवधिलाई वैदिक काल गणनाअनुसार त्रेतायुग भनिन्छ ।

"त्रेतायुगमा श्रीरामको शासनकाललाई रामराज्य भनिन्छ । रामराज्य कहिल्यै असफल भएन "(नेपालमा इसाईको चलखेल-२०७२, पु. १८४, डा. शास्त्रदत्त पन्त) ।

त्यस्तै प्रसिद्ध लेखक प्रा.डा. श्रीप्रसाद उपाध्यायका अनुसार भारतवर्षको इतिहास हजारौं वर्षको गौरवमय परम्पराको इतिहास हो । प्राचीनग्रन्थहरूमा भारतलाई नौ भागमा विभाजन गरेको पाइन्छ । यसै महाद्वीपमा अवस्थित भारतवर्षमा अनेकौं हिन्दू तथा मुसलमान शासकहरूले राज्य गरेका थिए । (ब्रिटिसकालीन भारतको इतिहास-२०५४, पृ.१-३, श्रीरामप्रसाद उपाध्याय) ।

प्राचीनकालदेखि नै युरोपियनहरूसँग भारतको व्यापारिक सम्बन्ध जोडिएको थियो । प्राचीन भारत धनधान्यले सम्पन्न थियो । युरोपेली बजारमा भारतीय भाँडाकुँडा, आभूषण र विशेष गरी गरममसलाको लोकप्रियता ज्यादै बढेको थियो । युरोपीयन व्यापारीहरूका लागि भारतीय मालसामान र भारतको कला कौशल, संस्कृति, समृद्धि आकर्षणको केन्द्रबिन्दु बनेको थियो, त्यसैले भारतवर्षलाई सुनौलो चराको नामले चिनिन्थ्यो । (आधुनिक भारतको इतिहास-२०५६, पृ.१,शैलेन्द्रकुमार मानन्धर)

पछिल्लो समयमा भारतमा अङ्ग्रेजहरूका कारण भारतीय वैदिक धर्म नै खतरामा परेको देखिन्छ । यसै भनाईलाई पुष्टि गर्दै प्रा. डा. श्रीरामप्रसाद उपाध्याय भन्छन् "अङ्ग्रेजहरूले भारतमा इसाईहरूको गतिविधिलाई बढाएका

थिए । इसाईधर्मको निम्ति विसप् र सहायक विसप्को व्यवस्था गरिएको थियो । वेलायतको संसदबाट स्वीकृत चार्ट र एक्टहरूमा इसाईधर्मको रक्षा गर्ने कुरा उल्लेख गरिएको हुन्थ्यो । इसाईधर्मको प्रचार प्रसारका निम्ति मिसन स्कूलको स्थापना गरियो । (श्रीरामप्रसाद उपाध्याय, ब्रिटिसकालीन भारतको इतिहास, पृ.१२२ रत्न पुस्तक भण्डार २०५४) ।

भारतलाई आदिबासीको संग्राहलय भनिन्छ । आदिकालदेखि यहाँ विभिन्न जात, धर्म र समुदायका मानिसहरूले बसोबास गर्दै आएका छन् । ई.पू. १५०० वर्ष पहिलादेखि यहाँ अग्ला, गोरा, लामा नाक भएका मानिसहरू बसोबास गर्दै आएको थिए । (आधुनिक भारतको संक्षिप्त इतिहास-२०५४, पृ १ खेमराज पोखरेल) ।

बेलायतका मानिसहरूबाट भारतका मानिसहरूले ३०० वर्ष पहिला यो सु-समाचार सुनेको थिए । क्याथोलिकहरूसहित जम्मा ३ प्रतिशत मानिसहरू भारतमा खीष्टियन छन् । (खीष्टियनईश्वर शास्त्रको महत्वपूर्ण शिक्षाहरू-२०५४, पृ. १९४डा. थोमस ह्वाङ ।)

भारतका खीष्टियन इतिहास रोप जानुपूर्व शुरु भएको पाइन्छ । डा. स्वामी प्रपन्नाचार्यले आफ्नो पुस्तक वेदमा के छ ? को पृ. ५७ मा "इसा १२ देखि ३० वर्षसम्म भारत बसेको" तथ्य सार्वजनिक गरेका छन् ।

युरोपमा जानुभन्दा पहिला भारतमा मलावार क्षेत्रमा खीष्टियन धर्म फलेफूलेको थियो र सन् ६५ मा मालवारमा अनेक चर्चहरू बनेका थिए । भारतमा सन्त थोमस एपोसटलले खीष्टियनधर्म शुरुवात गरेका थिए । सन्त थोमसका अधिकांश शिक्षा हिन्दूधर्मको नजिक थियो । विश्वमा आज पनि सन्त थोमसलाई थोरै मानिसहरूले बुझेका छन् । थोमसद्वारा लिखित कृति 'गोस्पेलु को मूलप्रतिका पानाहरू हराएका थिए, पछि सन् १९४५ मा उक्त पानाहरू भेटिए । पुरातत्वविद्हरूले यो हिन्दू आदर्श तथा सिद्धान्तको नजिक भएको बताएका थिए । सन् १८९ मा दक्षिण भारतमा खीष्टियनको संख्या केही बढेर आयो । यो पनि भनिन्छ कि निकाइयाको महान् सम्मेलनमा भारतका एक पादरी सम्मिलित थिए । सन् १४९८ मा पुर्तुगाली वास्काडिगामा कालिकट आएपछि खीष्टियनहरू झनै बढी फैलिए । पछि महान् उपदेशक सन्त फ्रान्सिस जेवियर गोवामा आए । सन्

१५९९ सम्म भारतमा क्याथोलिक चर्चहरूभली-भाँती स्थापित भइसकेका थिए ।(हिन्दूधर्म के हो ? (२०६५, पृ. २५ ईडी. विश्वनाथन ) ।

त्यस्तै पछिल्लो समयमा वर्तमान भारतमा क्रिप्टो खीष्टीयन गतिविधिको कारण तनावग्रस्त बनेको छ । भारतको दलित जातिका तर्फबाट पहिलो राष्ट्रपति बन्न सफल केआर नारायणको मृत्यु भयो । उनको मृत्युपश्चात् राजघाटमा हिन्दूपरम्पराअनुसारको चिता बनाउन कर्मचारीहरू जुटे, जलाए ! तर, घर-परिवारबाट खबर आयो- 'उहाँ त क्रिश्चियन धर्मावलम्बी हो !'

यसपछि उनको खरानी क्रिश्चियनको कब्रस्तानमा लगी पुरेर अर्को चिता बनाइ गाडियो । सबै हिन्दू जिल्लाराम । अहिले पनि गुगलमा हेर्न, विकिपिडियामा केआर नारायणको धर्मको महलमा 'हिन्दू' नै लेखिएको छ । यसरी जीवनभर हिन्दूको आवरणमा बसे, मन्दिर-मन्दिर ढोग्दै हिँडे, दलितको कोटामा दुवै हातमा लड्डु खाँदै बसे, भित्र-भित्र उहिल्यैदेखि चालु भैसकेका रहेछन् ! प्रधानमन्त्री अटलविहारी बाजपेयीको कार्यकालमा राष्ट्रपति केआर नारायणन नै थिए । काशी हिन्दू विश्वविद्यालयमा नयाँ उपकुलपति चयन गर्नुपर्ने भएकोले चयन कार्यका लागि चारधामबाट सिफारिसमा परेका चार जना ब्यक्तिको नाम सिफारिस गर्‍यो, पहिलो, दोस्रो, तेस्रो, चौथो गरी जसमा चौथोमा नाम थियो वाइएस सिम्हाद्रीको ! यसभन्दा अगाडि काशी हिन्दू विश्वविद्यालयको इतिहासमा जसको नाम अगाडि सिफारिस गरेको हुन्छ प्राथमिकता तिनलाई दिएर उपकुलपति चयन हुँदै आइरहेकोमा राष्ट्रपति केआर नारायणले चौथो नम्बरमा भएको वायएस सिम्हाद्रीलाई नियुक्त गरे, जो क्रिप्टो क्रिश्चियन' थिए ।

केआर नारायणले चौथोमा नाम भएकोलाई किन पहिलोमा ल्याएर नियुक्त गरे होला भनेर त्यतिबेला नबुझेर बस्नेहरूले उनी मरेपछि पो बल्ल बुझे, कारण त यस्तो पो रहेछ भनेर । गौरी लंकेश देखाउने अनुहार पेशागत चर्चित बामपन्थी पत्रकार पुर्व जेएनयुमा छात्रा संघको अध्यक्ष । अहिले यिनले उत्पादन गरेका 'छाउरा'हरू छन् कन्हैया कुमार भन्नेहरू ! यिनले जीवनभर हिन्दूत्वको विरुद्धमा कलम चलाइरहिन् ! माता दुर्गालाई 'बेश्या' भन्नेदेखि 'दुर्गा देवी होइन हत्यारा हुन्, महिषासुर कर्णाटकको मैसुर निवासी नागरिक हुन्, त्यसैले महिषासुरलाई पुजेर मैसुर दिवस

मनाउनुपर्छ' भन्दै प्रत्येक वर्ष मैसुरमा महिषासुरलाई हाम्रो शहीद हो भन्दै माल्यार्पण गरेर कार्यक्रम गर्दै आइरहेकी थिइन् । धेरै हिन्दूले सोचे- यिनी कुनै धर्म नमान्ने बामपन्थी हुन् ! तसर्थ यी सबै उनको गतिविधिलाई अर्के एंगलबाट हेरेर चुपचापसँग बसे ! तर जब केही उग्र हिन्दू युवाहरूले यिनको 'बध' गरे, यिनको अन्तिम शवयात्रामा दशौँ हजार मान्छे जुटे, धेरैले सोचे हिन्दूको घाटमा लगेर जलाउँछ होला ! तर शव बोक्ने गाडी क्रिश्चियनको कब्रस्तानतर्फ लागेपछि पो बल्ल थाहा भयो यिनी त 'क्रिप्टोक्रिश्चियन' रहिछन् बामपन्थी त उनको अनुहार छोप्ने नकाव मात्रै रहेछ भनेर सर्वसाधारणले बुझे । नेपालका 'तोर्मे'हरूले पनि पछि पछी बुझ्दै जालान् ।

२ सेप्टेम्बर २००९ मा आन्ध्र प्रदेशको मुख्यमन्त्री वाइएस राजशेखर रेड्डी उडेको हेलिकप्टर केही क्षणमा नै नल्लामला जंगलमा हरायो । दुर्घटनामा परेको आशंकामा मुख्यमन्त्री सकुशल होस् भन्दै हिन्दूहरू मन्दिरमा पूजा गर्ने होम यज्ञ गर्ने गर्न थाले । केही दिनमा दुर्घटनामा परेको हेलिकप्टर त भेटियो तर सवार यात्रीहरू सबै मृत्यु भएको अवस्थामा । मुख्यमन्त्री वाइएस राजशेखर रेड्डीको शवलाई राजकीय सम्मानपश्चात् लगे पास्टरहरूले क्रिश्चियनको कब्रस्तानमा गाड्नलाई । त्यसपछि मात्रै बल्ल सर्वसाधारणले चाल पाए उनी त पहिलेदेखि नै क्रिश्चियन भैसकेको रहेछ भनेर । त्योभन्दा अगाडि हिन्दूको मठ-मन्दिरमा टीका लगाउँदै तिरूपती बालाजी पुगेर चन्दन घस्दै हिँड्थे । काङ्ग्रेसभित्र सोनिया गान्धीले कसरी उनको उचाई बढाउँदै मुख्यमन्त्रीसम्म पुर्‍याएको रहेछ भनेर पनि चाल पाए राजनीतिक वृत्तमा ।

अहिले उनको छोरा वाइएस रेड्डी मुख्यमन्त्री छन् । उनले चुनाव जित्नेबित्तिकै क्रिश्चियनलाई यरूसेलम जान ६० हजार दिने घोषणा गर्दै चर्चको पास्टरलाई मासिक ५००० दिने घोषणा पनि गरे । सायद धेरै हिन्दूलाई थाहा नहोला प्रसिद्ध तिरूपती बालाजीमन्दिरमा काम गर्ने ४० प्रतिशत कर्मचारी क्रिश्चियन छन् सरकारी नियुक्तिमा आएका । तर आन्ध्र प्रदेशमा ९० प्रतिशत हिन्दू जनता छन् भने क्रिश्चियन सिर्फ १.३८ प्रतिशत ! फेरि यस्तो कसरी भन्लान् ? हिन्दू न हो पिठ्युँमा मुसारेर छातीमा लात्तीले हान्यो भने पनि जेसुकै होस् ! भर्खरै मेरो पिठ्युँमा

मुसारेको त हो नि तिनले भनेर बस्ने जात न पन्यो !! किनकि यी क्रिश्चियन मुख्यमन्त्रीले बेलाबेलामा मन्दिर गएको, चन्दन घसेको पूजा गरेको तस्बिर समाचार पत्रमा छपाइ रहन्छन्, यहाँभन्दा बढी हिन्दूलाई के चाहियो ?

सुब्रमण्यम स्वामी भारतका चर्चित पुराना कांग्रेसी नेता हाल बीजेपीका हुन् । यिनले एउटा अन्तर्वार्तामा भनेका थिए । 'राजीव गान्धीले प्यालेस्टाइनका नेता यासर आरफतसँग भेटेर यहाँबाट गोप्य रूपमा सोनिया गान्धीमार्फत गएको पैसाको सदुपयोग के-कस्तो भएको छ भनेर सोधपुछ गर्न भनेर पठाएका रहेछन् । त्यहाँ गएर सोध्दा यासर आरफतले 'तपाईंको प्रधानमन्त्रीलाई भन्नुस् त्यहाँबाट आएको पैसा मकहाँ सिधै पठाउनु, किनकि भारतबाट आएको पैसा सोभै यहाँको क्रिश्चियन च्यारेटीमा जान्छ' भनेर जानकारी दिएछन् ।'

तामिलनाडुको काँचीशंकराचार्य पीठ भारतमा सबैभन्दा बढी समाजसेवामा सक्रिय छ । यो पिठले धर्म परिवर्तनको विरूद्धमा गाउँ-गाउँमा कार्यक्रम सञ्चालन गर्छ । दलितलाई हिन्दूसँग जोड्ने अभियानस्वरूप दलितहरू सबैलाई मन्दिरमा आउ ढोका खुला छ तपाईंहरू नआउने भए मन्दिर नै गाउँ-गाउँमा आउँछ भन्दै गरीब बस्ती-बस्तीमा स्वस्थ्य शिक्षा पुर्‍याएर धर्मान्तरणलाई रोक्ने काममा भारतमा काँची कामकोटी पीठका शंकराचार्य जयन्द्र सरस्वती जतिको सक्रियता कुनै हिन्दू संघ-संस्थाको छैन र थिएन पनि । अब सबैलाई थाहै छ 'दलित' भनेको क्रिश्चियनको आहार हो, त्यो आहारमा आँखा लगाएपछि त्यसको के हालत हुन्छ ? त्यही हुन्छ जुन नारायण पोखरेलको भएको नजीर हेर्न । तर त्यहाँ अलिकति फरक भयो । शंकराचार्य जयन्द्र सरस्वतीलाई ब्लु फिल्म हेरेको, बलात्कार हत्या गरेको आरोपमा गिरफ्तार गरियो त्यो पनि त्रिकालको पुजा गरिरहेको अवस्थामा । यसको पछाडि सिधै हात सोनिया गान्धीको थियो भनेर त लेखेन तर घुमाउरो रूपमा भर्खरै दिवंगत पूर्वराष्ट्रपति एवं कांग्रेसको दिग्गज नेता प्रणव मुखर्जीले लेखेको 'द कोएलिसन इयर्स' (The Coalition Years) पुस्तकमा ऊनी भन्छन्, 'म उक्त गिरफ्तारीप्रति अत्यन्त असहमत तथा असन्तुष्ट थिएँ, क्याबिनेट बैठकमा यस मामलालाई उठाएको पनि थिएँ । मैले सवाल गरेको थिएँ कि देशमा धर्मनिरपेक्षताको पहुँच केवल

हिन्दू सन्त-महात्माहरूसम्म नै सीमित छ ? के कुनै राज्यको पुलिसले कुनै मुस्लिम मौलवीलाई इदको अवसरमा गिरफ्तार गर्ने हिम्मत देखाउन सक्छ ?' । उनको यस लेखनीबाट प्रष्ट हुन्छ सोनियाको केन्द्र सरकार नै गिरगिरफ्तार गराउन सक्रिय भएको रहेछ !अरूणाचल प्रदेशमा सन् १९५१ मा एकजना पनि इसाई थिएनन्, तर २००१ मा त्यहाँ इसाई आवादी १८ प्रतिशत पुग्यो । २०११ को जनगणनाको परिणामअनुसार यतिबेला त्यहाँ इसाई उपस्थिति ३० प्रतिसतभन्दा ज्यादा देखिएको छ । अरूणाचलमा धर्मान्तरणको सिलसिला १९८४ मा राजीव गान्धी प्रधानमन्त्री बनेपछि नै शुरू भएको थियो । राजीव सरकारले सोनियाकै विशेष जोडमा अरूणाचलमा इसाई मिसनरीहरूलाई आफ्ना सेन्टर खोल्न स्वीकृति दिएको थियो त्यसपछि बहुसंख्यक बौद्ध रहेको अरूणाचल प्रदेशबाट बौद्ध अल्पमतमा आइसकेको छ खुसीको कुरा के भने अहिले मोदी सरकारले सबै धर्म परिवर्तन गराउने एनजीओलाई बन्द गराएर हिन्दू, बौद्ध संस्थालाई गाउँ( गाउँमा पठाएर आ-आफ्नो पुरानो धर्ममा फर्काउने अभियान चालु गरिरहेको छ । उता लेह लद्दाखमा रहेको बौद्ध बाहुल्य क्षेत्रलाई मुस्लिम बाहुल्य जिल्लामा गाभेर बौद्ध समुदायलाई आफ्नै भूमिमा अल्पसंख्यक पारेर इस्लामीकरण गर्दै आइरहेको थियो जुन अहिले अलग्गै केन्द्रशासित बौद्ध क्षेत्र बनाएर उनीहरूको धार्मिक साँस्कृतिक अस्तित्व जोगाउने काम भएको छ । '१७ डिसेम्बर २०१० मा विकिलिक्सले राहुल गान्धीले २० जुलाई २००९ मा भारतका लागि अमेरिकी राजदूत टिमोथी रोमरसँग गरेको एक वार्तालापको विवरण एक्सपोज गरिदिएको थियो । अमेरिकी राजदूतसँग राहुलले भनेका थिए । 'भारतविरोधी मुस्लिम आतङ्कवादी र वामपन्थी आतङ्कवादी भन्दा भारतको निम्ति हिन्दूहरू बढ्ता खतरा हुन् ।' (मोहन लामा रूम्बा, घटना र विचार साप्ताहिक, २०७७) ।

यी सम्पूर्ण इतिहासलाई गहिराईमा पुगेर अवलोकन गर्ने हो भने भारतीय भूमिको प्रयोग गरी खीष्टियनधर्मको विस्तार भएको देखिन्छ । यहाँबाट नेपाल तिब्बत हुँदै चीनसम्मको यात्रा खीष्टियनधर्मले तय गरेको पाइन्छ ।

# युरोपमा पादरीहरूबीच भेदभाव किन ?

फ्रान्सेली राज्यक्रान्ति हुनुअघि युरोपेली समाजमा विभिन्न धर्म मान्ने जनता थिए । धार्मिक दृष्टिबाट पश्चिमली युरोप र मध्ययुरोप विशेष गरी अव्यवस्थित थियो । उत्तरमा प्रोटेस्टेन्ट थिए भने दक्षिणमा रोमन क्याथोलिक थिए । स्विट्जरल्याण्ड र सेभायका जनता प्रोटेस्टेन्ट थिए । पोल्याण्डका जनता क्याथोलिक थिए । पूर्वीयुरोपका युनानी चर्चले रूस र बालकनराज्यहरूमा आफ्नो प्रभाव जमाएका थिए । यहुदीहरू युरोपभरि फैलिएका थिए । कतैकतै यहुदीसित राम्रै व्यवहार हुन्थ्यो तर यिनीहरूलाई प्रायः यातना नै दिइन्थ्यो । युरोप धार्मिक सङ्घर्षबाट अलग थिएन । विभिन्न धर्मका अनुयायी राष्ट्रभक्त हुन सक्दछन् भन्ने भावना त्यतिबेला जागृत हुन लागेको थियो । मान्छेमात्रको चिन्ता गर्नुपर्छ भन्ने भावना सिर्जना हुन थालेको थियो । वैज्ञानिक अनुसन्धानको लगनशीलताले पनि यो भावनालाई बल दियो । (मगर जातिको इतिहास र संस्कृति-२०७४, शम्शेरबहादुर आलेमगर) ।

युरोपको इतिहास बारेमा खीष्टियनमण्डलीको इतिहास हेर्दा १९३० को दशकमा मात्रै १ करोड २० लाख मानिसहरू मारिएको देखिन्छ । (मण्डलीको इतिहास- २०७५, पृ.२९२ दिलबहादुर तमाङ) ।

चर्चले फैलाएको अन्धविश्वास, छल, प्रपञ्च र अनैतिक जीवनका बारेमा त्यसले चरम भण्डाफोर गऱ्यो । विद्वान् वर्गले पादरीहरूको तहबाट हुने कुकार्यका बारेमा मात्र होइन, समग्र धर्म नै मानवजातीको उत्थान, प्रगति तथा जागृतिको बाधक रहेको स्पष्ट पारेपछि मानिसले यस विकृतिका विरूद्ध आन्दोलन छेड्नुपर्ने महशुस गरे । (विश्वको इतिहास, रूपरेखा २०५६, पृ. १३६ डा. सुरेन्द्र के.सी.) ।

रोमन क्याथोलिक चर्चहरूमाथि आक्रमण हुन्थ्यो । रोमन क्याथोलिक चर्चको शक्ति घटिरहेको थियो । सन् १७५९ मा जेसुइट्सहरूलाई पर्तुगलबाट निकालियो । सन् १७६४ मा जेसुइट्सहरूको मतको फ्रान्समा दमन गरियो । सन् १७६७ मा उनीहरूलाई स्पेन, सिसलीऔ परमाबाट निकालियो । सन् १७७३ मा पोपले जेसुइट्सहरूको मतलाई समाप्त गरिदिए । रूस र प्रसामा मात्रै यिनीहरूलाई शरण प्राप्त भएको थियो । ( युरोपको इतिहास, पृ. २९ प्रा. डा. मेदनीप्रसाद शर्मा/प्रा.डा. तीर्थप्रसाद मिश्र/प्रा.डा. रामप्रसाद उपाध्याय) ।

युरोपेली मुलुकहरूमा भएका चर्चका कार्यप्रति जनताको आस्था घटिरहेको थियो । चर्चका ठूला पादरी अनैतिक, भ्रष्टाचारी र व्यभिचारी थिए । ठूला पादरीको ईश्वरप्रति आस्था र धार्मिक कार्यकलापपट्टि रूचि थिएन । उनीहरू भोगविलासमा जीवन बिताइरहेका थिए । जनताबाट चर्चका नाममा उठाइएको धार्मिक कर (Tithe)ठूला पादरीहरू भोगविलासमा खर्च गर्थे । ठूला पादरीहरू धार्मिक क्रियाकलाप भन्दा षड्यन्त्र र भोगविलासमै बढ्ता लीन थिए ।

चर्चका धार्मिक कर्मकाण्ड गर्ने साना पादरी थिए । यिनीहरूको आर्थिक अवस्था दयनीय थियो । आफ्नो जीवन गुजारा गर्न यिनीहरूलाई हम्मे पर्दथ्यो । फलस्वरूपः ठूला पादरीहरूसित साना पादरी द्वेष गर्दथे ।

# अफ्रिकाको धार्मिक इतिहास

प्राचीन अफ्रिकाको धार्मिक अवस्था हेर्ने हो भने उनीहरूको आफ्नै धर्म, संस्कृति, परम्परा र सामाजिक ढाँचा देखिन्छ । उनीहरूको मन्दिरजस्तो कुनै ठाउँ हुँदैन तापनि उनीहरूलाई सत्य असत्यको बारेमा राम्रोसँग ज्ञान छ । उनीहरू अलौकिक शक्तिलाई मान्छन्, पुज्छन् । (दक्षिण अफ्रिकाको सत्याग्रहको इतिहास, पृ. ६,मधुसुदन पाण्डे) ।
सूर्य,चन्द्र, तारा, प्रकृति र अलौकिक सबैसँग प्रार्थना गर्ने गर्दथे । उनीहरूको विशेष अनुष्ठान हुने गर्दथ्यो । यस्तो अफ्रिकनहरूको आफ्नो पहिचानमाथि संकट कसले ? कहिले ? ल्यायो भन्ने कुरा हेरौँ ।

१७ औं देखि १९ औं शताब्दी डच-बोआर र ब्रिटिशको उपनिवेशवाद ती अधिकांश जङ्गलबासी जनजातिहरूको संहार र विनाशको कारण बनेको थियो, जो त्यतिबेलासम्म बचेखुचेको थियो । १९ औं शताब्दीसम्म उनीहरूको विशिष्ट सामाजिक ढाँचा (जसले अस्ट्रेलियाली जनजातिहरूको सामाजिक ढाँचाको स्मरण गराउँथ्यो) तथा संस्कृतिलाई करिब-करिब पूर्णरूपले विनष्ट गरिदिएको थियो । निग्रो जाति, जनजातिहरू स्वतन्त्र गोत्रमा विभक्त थिए । उनीहरूमा टोटेमवादमा निशान, जीवजन्तुहरूका नाममा राखिएका गोत्रहरूका नाम, पहाडी चट्टानहरूमा बनेका अर्द्धपशु र अर्द्धमानवका आकृतिहरू तथा त्यसप्रकारका जीव-जन्तुसित गाँसिएका मिथकहरू देख्न पाइन्छ, जो पहिले मानिस थिए वा अहिले मानिसमा रूपान्तरित भएका थिए । मरणोपरान्तको जीवनमा निग्रो जातिहरूले विश्वास गर्दथे तथा मृतकहरूसित ज्यादै भयभीत हुने गर्दथे । मृतकहरूलाई विशेष अनुष्ठानका साथ जमिनमा दफाउने गरिन्थ्यो । निग्रो जनजातिको धार्मिक विश्वासको विशेषता शिकारसित सम्बन्धित पूजा र अनुष्ठान हुन्छन् । शिकारमा सफलता प्राप्त गर्नका लागि उनीहरूले विभिन्न

प्राकृतिक घटनाक्रमहरू (सूर्य, चन्द्रमा, तारा) तथा अलौकिक चिजसित प्रार्थना गर्दथे । (धर्मको इतिहास सेतोकारेव ७२ शे. तोकारेब) ।

इसाईधर्मको घुसपैठको कारण अफ्रिकाको स्थानीय परम्परा र संस्थाहरूमाथि निर्मम प्रहारमात्र भएन ध्वस्त नै बनाइयो । यो अफ्रिकनहरूको लागि मात्र नभई विश्वको नै मानव जातिको लागि दुखद र निन्दनीय कार्य मानिन्छ । आज इसाईकरणले विश्वका सयभन्दा बढी सभ्यताको विनाश गराइसकेको छ । अफ्रिकामा मात्र ४२ वटा सभ्यताको विनाश गराइसकेको छ ।

अफ्रिकाको भित्री भागमा इसाईधर्मको घुसपैठ १९ औं शताव्दीको शुरूमा भएको थियो । मूल अफ्रिकी बासिन्दाहरूमा उसका प्रसारक केवल क्याथोलिक र प्रोटेस्ट्यान्ट संयन्त्रमात्र थिए । तिनले प्रायः उपनिवेशवादी विजेताहरूका लागि मार्ग खोलिदिने काम गर्दथे । इसाई संयन्त्रहरूले पहिले स्थानीय परम्पराहरू र प्रथाहरूलाई बदनाम गर्ने काम गरे । उनीहरूले "प्रकृति पूजासम्बन्धी" तथा "दानव" सम्बन्धी कर्मलाई झुट्टो बताएर विरोध गरेका थिए । अहिले पनि उनीहरूले इसाई धर्मलाई स्थानीय रीतिरिवाज अनुकूल बनाउने तथा ती बासिन्दाहरूका निम्ति स्वीकार्य बनाउने प्रयत्न गरिरहेका छन् । उनीहरू तीव्रताका साथ स्थानीय बासिन्दामध्ये पादरी र प्रचारकसमेत तयार गरिरहेका थिए ।

सन् १९३९ मा पहिलोपटक दुईजना अफ्रिकीहरूलाई क्याथोलिक बनाइएको थियो । सन् १९६० मा पोपद्वारा टान्जानियाको एक हब्सलाई कार्डिनल पद दिइएको थियो । ८० को दशकमा सहाराको दक्षिणमा अवस्थित अफ्रिकी देशहरूमा करिब ३ करोड इसाई, करिब ६ करोड मुसलमान र करिब १३ करोड प्रकृतिको पूजा गर्नेहरू अर्थात् पुराना जनजातीय मत मान्नेहरू रहने गर्दथे । इसाईहरूले क्विजिलीङपद्धति अपनाएर अफ्रिकन मुलुकको शान्ति भंग गरेको छ । उनीहरूलाई धर्मान्तर गराउन अत्याधिक सक्रिय रहे ।

अफ्रिकन आदिम सभ्यता र परम्परालाई इसाईहरूले यसरी उपहास र गिल्ला गरेको पाइन्छ । अफ्रिकामा धेरै शैतानिक आत्माहरू खेलाउने, विभिन्न प्रेतहरू पुज्ने आदि विकृति फैलिए तापनि यहाँका मण्डलीहरू

निकै गतिशील भएकाले अन्धकारका शक्तिहरूमाथि विजय बन्न सकेका छन्[६] ।

खीष्टियन मिशिनरीहरूले धर्मान्तर गराउँदै जाँदा आधुनिकता र क्रान्तिकारीको नाममा जनतालाई भैँडो बनाए । त्यसलाई स्वीकार गर्दै संघीय संरचनासहितको लोकतान्त्रिक गणतन्त्र राज्य स्थापना गराए । यसरी विकास गर्ने र आधुनिक गर्ने नाममा कंगो विश्वको सबैभन्दा गरीब मुलुक बनेको छ । वनजंगलमा समृद्ध मानिने कंगोमा युरेनियम हीरा, सुन, तामा, कोबाल्ट र तेलखानी रहेका छन् । प्राकृतिक स्रोत र साधन सम्पन्न कंगोमात्र होइन, धर्म, संस्कृति, परम्परामा समेत अग्रगामी थियो । इसाईको पछि लाग्नाले विदेशी धर्मसंस्कृति अपनाएर संसारका सबैभन्दा गरीब राष्ट्रहरूमध्येको एक हुन पुग्यो । इसाईहरूले स्थानीय परम्परा, धर्म, विकास सबैलाई चपाई कंकालमात्र रहेको वर्तमान अफ्रिकालाई हामी देख्न सक्छौँ । आफ्नो भाषालाई पन्छाउँदै अङ्ग्रेजी, फ्रेन्च र पोर्चुजलजस्ता भाषालाई सरकारी कामकाजका भाषा बनाएका छन् । आफ्नो भन्ने सबै मेटाएर विदेशी संस्कृति भित्र्याउँदा अहिले सर्वाधिक अशान्त, अस्थिर, गरीब मुलुकहरूको रूपमा अफ्रिकाका धेरै देशले पहिचान राखेको ऐतिहासिक प्रमाण उजागर हुन्छ ।

# जापानको धर्म

विश्वका अन्य मुलुकहरूमा जस्तै जापानको आफ्नै धर्म र संस्कृति रहेको छ । प्राचीनकालमा इजानगी नामको देवता र इजानमी देवताको संयोगबाट जापानको उत्पत्ति भएको थियो भन्ने विश्वास रहेको छ । इजानगी देवताले आफ्नो बायाँ आँखा धोइरहेको बेला सूर्य देवताको उत्पत्ति भयो[घ] ।जापानको परम्परागत धर्म सिन्तो हो । यस धर्मले प्रकृतिको पूजा र भूतप्रेतमा विश्वास राख्दछ । सिन्तोधर्मका अनुयायहीरुले सूर्य, चन्द्र, वृक्ष, नदी, ओडार, ढुङ्गा, मूर्ति आदि प्रकृतिको पूजा गर्दथे । उनीहरू प्रकृति पूजक हुन् ।

जापानका इतिहास हेर्दा स्थानीय सिन्टो धर्म र बौद्धधर्मको दुबै धर्मको समन्वयबाट नयाँ धर्म उत्पन्न हुनपुगेको छ । बौद्ध मूलका सम्प्रदायमा स्पष्टरूपले अभिदी, निचरन र सोका गम्काईले आफ्नो पृथकता र ज्यादै विशिष्ट हुने भावनालाई अहिलेसम्म त्याग्न सकेको छैन । सोका गम्काई निकै ठूलो सम्प्रदाय हो । त्यसले देशको राजनैतिक जीवनमा सक्रिय सकारात्मक हस्तक्षेप गर्ने गर्दछ । तर्कबुद्धिको हस्तक्षेपबिना पनि सत्यको ज्ञान र ध्यानको प्रभावमा विश्वास राख्ने बुद्धिजीवीहरूका केही समूहहरूलाई त्यसले विशेषरूपले आकृष्ट गर्दछ । जैन सम्प्रदायका अनुयायीहरूलाई जापानबाहिर पश्चिम युरोप र अमेरिकामा समेत देख्न सकिन्छ । पछिल्लो समयमा यो पवित्र दर्शन धरापमा परेको देखिन्छ । यसरी धरापमा पर्नुको कारण खोजी गर्दा धर्मको इतिहासमा यस्तो देखिन्छ ।

जापानी पुजारीहरूको विश्व उत्पत्तिसम्बन्धी सिद्धान्तअनुसार प्रारम्भमा केवल दुईथरी चीजमात्र थिए, आकाश र पृथ्वी । उनीहरू मिलेर पहिले तीनवटा देवताहरूलाई र पुनः अरु दुईवटा देवताहरूलाई जन्म दिएका थिए । पछि आएर एकपछि अर्को गर्दै अरु पाँच देवताका जोडीहरू पैदा भए । ती सबै देवता केवल अमूर्त अवधारणामात्र थिए पूजा उपासना गरिन्नथ्यो । इजानागी र इजानामीका जोडी हुन् । यिनलाई पति-पत्नी मानिन्छ । इजानागीलाई स्रष्टा वा विश्वकर्मा बताइन्छ । उनले नै पृथ्वी,

विशेषरूपले जापानी द्वीप रचना गरेको थिए । उसले आफ्नी पत्नीसँगै आकाशको पुलमा खडा भएर एउटा लामो भालाले समुद्र मन्थन गरेर ती द्वीपहरूको निर्माण गरेको थियो भनिन्छ । पछि अरू थोपाहरूबाट अरू द्वीपहरू बने । त्यसपछि इजानागीले आफ्नो बायाँ आँखाले सूर्य र सूर्यदेवी अमातेरासूलाई बनायो, जुन जापानीहरूको प्रमुख पुज्य मानिन्छ । जुन जापानी सम्राट्हरूको पूर्वजसमेत मानिन्छ । इजानागीले अरू देवताहरू चन्द्रमा, आँधीबेहरी, वायु आदिको रचना गरेको थियो । ती सबै कुराहरूपछि सोचिएका मिथक हुन् । जापानीहरूको प्राचीनतम धर्म इसापूर्व पहिलो शताव्दीमा देशको एकीकरणपूर्व पितृसत्तात्मक गोत्र, जनजातीय प्रथालाई प्रतिविम्बित गर्दथ्यो, जसमा लडाकू अभिजात समुदाय अस्तित्वमा आइसकेको थियो[३] ।

दोस्रो विश्वयुद्धमा जापानलाई हराउन पूरा शक्ति लगाए । ६ अगस्त सन् १९४५ मा जापानको हिरोसिमा सहरमाथि अमेरिकाले अणुबम खसाल्यो । एउटै बलमे हिरोसिमा ध्वस्त भयो । अमेरिकाले फेरि अर्को अणुबम ९ अगस्त सन् १९४५ जापानको नागासाकि सहरमा खसाल्यो । त्यो सहर पूर्ण नष्ट भयो । अन्तमा जापानले २ सेप्टेम्बर सन् १९४५ मा आत्मासमर्पण गऱ्यो । (आधुनिक युरोपको इतिहास२०५६, पृ. ३७७,शिवकुमार श्रेष्ठ) ।

सन् १९४५ सम्म त्यस्तो थियो । दोस्रो विश्वयुद्धमा जापानको पराजयपछि सरकारी धर्मको जग हल्लाइदिएको थियो । डिसेम्बर १९४५ मा उपनिवेशवादी अमेरिकी अधिकारहरूले सिन्टो धर्मलाई राज्यवाट अलग्याउने निर्देशन जारी गरेको थिए । जनवरी १, १९४६ का दिन सम्राट्ले अध्यादेश जारी गरी धर्म र राजकीय सिद्धान्तको भर्त्सना गरेका थिए । विशेष अध्यादेशद्वारा मिकादोको पूजासित सम्बन्धित सबै सार्वजनिक समारोह तथा स्कूलमा धार्मिक शिक्षामाथि रोक लगाइएको थियो । तत्पश्चात् दरवारी पूजा आराधनालाई मात्र पूर्ववत् रहन दिइएको पाइन्छ । यसो हुनुमा फिरिङ्गी धर्मगुरूहरूको हात रहेको देखिन्छ । राजनीतिक दबाबमा परेर होस् वा विकास गरिदिने बाहानमा होस् फिरिङ्गीहरूले अन्य देशको धर्म संस्कृतिमाथि नग्न रूपमा प्रहार गरेका छन् । यही शिकारमा जापान पनि परेको देखिन्छ ।

# विश्वका केही प्रसिद्ध सभ्यताहरू

**मिश्रको सभ्यता**

मिश्रको सभ्यता विश्वको पुरानो सभ्यतामध्ये एक मानिन्छ । मिश्र वेवीलोनियाको सभ्यतामा हिन्दू सभ्यताको प्रस्ट छाप परेको मानेका छन् (Nations of antiquity 11-12) । यो सभ्यतामध्ये अफ्रिकाबाट निस्केर उत्तरतर्फ बगेको निल नदीको किनारमा विकसित भएको थियो । निल नदीमा वर्षामा बाढी आउने भएकाले किनाराको भू-भाग मलिलो र उर्वर थियो । त्यहाँका जनताले खेतीपाती गरेर प्रशस्त अन्न उत्पादन गर्दथे । निल नदीको हावामा बास्प (पानी) पाइन्थ्यो । जसले गर्दा लिविया र साहारा मरुभूमिको नजिक भएर पनि आनन्द र जीवनयापन सहज थियो । त्यहाँका जनता विभिन्न कला, संस्कृतिमा समेत लाग्ने मौका पाउँथे । यी सम्पूर्ण कारणले गर्दा युयानी विद्वान् तथा इतिहासकार हिराडोटसले मिश्रलाई निल नदीको उपहार भनेका थिए । प्राचीन मिश्र सभ्यताको विशाल जग निर्माण भएको थियो । यस सभ्यताको विकासमा मिश्र राष्ट्र पहिलो भएको कारण प्रशासन, साहित्य र सामाजिक विकासको क्षेत्रमा अद्‌भूत प्रगति गरेको थियो ।

प्राचीनकालदेखि मिस्रमा नोमोका स्थानीय संरक्षक देवतालाई पूजाा गर्दथे । नोम प्राचीन जनजातिहरूका अवशेष थिए, जो इ.पू. चौथो शताब्दीको अन्तमा एक राजाको सत्ताअन्तर्गत एकताबद्ध हुनपुगेका थिए । नोमोका देवताहरूको पूजा दीर्घकालिक सिद्ध भएको थियो । अखिल मिश्रेली देवताहरूको पूजाको सँगसँगै मिलेर त्यो प्राचीन मिस्रेली इतिहासको ठीक अन्तसम्म रहेको थियो । ती नोमसम्बन्धी विश्वासमा केही तत्वहरू एकदमै पुराना थिए । हरेक नोमको एउटा पवित्र जीवजन्तु हुन्थ्यो । ती कुनै न कुनै रुपमा स्थानीय देवतासित सम्बन्धित हुन्थ्यो । देवतालाई प्रायः

उक्त जीव (भेडो, गाई, गिद्ध, आइबिस मयुर, गोही, बिरालो आदि) का रूपमा वा मानिस र पशुको संयुक्तरूपमा चित्रित गर्ने गरिन्थ्यो । हामीसमक्ष प्राचीन टोटेमवादका अवशेष हुन्छन् । स्थानीय संरक्षक देवताहरूको पूजामा पवित्र जीवजन्तुलाई मानवरूप दिने प्रक्रिया चलेको थियो । देवीलाई धेरै शिर भएकी भनेर चित्रित गर्ने गरिन्छ, त्यो देवीलाई बास्तेतसँग, जुन बाज होरूस देवतामा परिवर्तन भइसकेको हुन्छ । त्यसलाई बिरालोसँग रोथलाई आइबिसको टाउकोसँग, अनुविसलाई कुकुरको टाउकोसँग तथा हाथोरलाई गाईको टाउकोसँग देखाउनुले ती जीवमान आकृतिको विम्बहरूका पवित्र जीवहरूबाट उत्पत्ति भएको कुरालाई इङ्गित गर्दथ्यो । स्थानीय संरक्षक देवताहरूमा नारी देवताको सङ्ख्या निकै बढी भएको तथ्यप्रति ध्यान दिनुयोग्य छ । उदाहरणका लागि नेखेख्त, हाथोर, नेइतट, सेखमेत, नेफ्थिस आदि । त्यो प्राचीन मिस्रेलीहरूमा भएको मातृसत्ताको प्रबल अवशेषको प्रमाण हो ।

धेरैजसो देवी-देवताहरूको सम्बन्ध अन्तरिक्षीय घटनाक्रमसँग जोडिन्थ्यो । अन्तरिक्ष लक्षण त्यतिबेला पनि थिए जब ती स्थानीय जनजातीय देवता थिए । अधिकांश देवताहरूलाई कुनै न कुनै रूपबाट सूर्यसित जोडिन्थ्यो । त्यो श्रेणीमा हेलियोपोलिसको एटोम-रा, हियेराको नपोलिसको होरूस, कुसिरिसको ओसिरिस, थीब्जको आमोन, अविदोसको आहेर, फैयुमको सेबेक र हेर्मोतको मेन्ट त्यही श्रेणीमा पर्दथे । चन्द्रमासित सम्बन्धित देवताहरूमध्ये टोप, आइसिस र खोस पर्दथे । हाथोर र नुतलाई आकाशसित तथा मिन र गेबलाई पृथ्वीसित जोडिदिने गर्दथे ।

इ.पू. ३४०० मा मेनिज नाम गरेका राजाले मिश्रको एकीकरण गरेका थिए । उनले त्यहाँ मेम्फिसु नामको राजधानी बनाएका थिए । मिश्रको इतिहासमा ३००० देखि २५००० इ.पू. को समयलाई पिरामिडको युग भनिन्थ्यो । त्यहाँका राजालाई फराह भनिन्थ्यो । फराहको अर्थ ठूलो घर (दरबार) हुनेका ठूलो दरबारमा बस्ने राजा भन्ने बुझिन्थ्यो । मिश्रमा राजा वा ठूलो मान्छेको मृत्यु हुँदा ढुङ्गाको चौकोस परेको ठूलो पिरामिडभित्र राखिन्थ्यो । मिश्रमा यस्ता पिरामिडहरू धेरै बनेका थिए । तीमध्ये करिब एक लाख मानिसले २० वर्ष लगाएर बनाएका फराह चेओप्सका निम्ति बनेको गिर्जाको पिरामिड थियो । मिश्रको वास्तुकलाको अर्को उत्कृष्ट

नमूना कारनाक, आबु सिम्बेल, चोब्स र लाक्सारको मन्दिर हो । मिश्रको उत्कृष्ट मूर्तिकलामा स्फिनिक्सको मूर्ति विश्वकै उत्कृष्ट मूर्ति मानिन्छ ।

प्राचीन मिश्रको समाजलाई पाँच वर्गमा विभाजित गरेको पाइन्छ । पहिलो वर्गमा राजपरिवार, दोस्रो वर्गमा सामन्त, तेस्रो वर्गमा दासहरू पर्दथे । चौँथो र पाचौँ वर्गमा व्यापारी, कृषि तथा कालिगढहरू पर्दथे । मिश्रमा दासप्रथा धेरै भएको कारण उनीहरूको अवस्था निकै दयनीय थियो । प्राचीन मिश्रमा साहित्यको निकै राम्रो विकास भएको पाइन्छ । त्यसबेलाका उत्कृष्ट साहित्यिक रचनाहरूमा 'दौकाको पुस्तकु, 'किसानको अपिल', 'कफन ग्रन्थ', 'मृतकको पुस्तक' आदि पर्दछन् । मिश्रको उत्कृष्ट अभिलेखबाट इतिहास र भूगोलको तथ्याङ्क फेला परेको छ । मिश्रको सभ्यताले संसारलाई नरकटको कलम, पेरिसको कागज, मसी र मसीको भाँडो, अक्षर, गणित तथा पात्रोको ज्ञानसमेत गराइएको पाइन्छ ।

### मेसोपोटामियाको सभ्यता

युयानभन्दा अनेक ठाउँमा हजारौँ वर्षअगाडि सभ्यता शुरूवात भएको थियो । युयानी सभ्यताको चरम विकास भएको बेला अन्य संसार असभ्यताले गस्त भएको थियो । (राजनीतिक विचारधाराको इतिहास, २०५९, पृष्ठ नं १०-११, डा. गोपाल शिवाकोटी )

यो सभ्यता मेसोपोटामियाको युफेतस (Euphrates) र टिग्रस (Tigris)नदीको बीचमा भएको हुनाले प्राचीन युयानीहरूले यसको नाम मेसोपोटामिया भन्ने राखेका थिए । युयानीभाषामा मेसोपोटामियाको सभ्यता पूर्वी सिरियाको केही भाग र इराकको ठूलो क्षेत्रमा फैलिएको थियो । यो क्षेत्रमा दुई नदीले बगाएर ल्याएको मलिलो माटो भएको कारण उब्जाउ भूमि हुन पुग्यो । यसलाई पर्टाइल, क्रेसेन्ट वा अर्धचन्द्राकार उर्वरभूमि भनिन्थ्यो । मेसोपोटामियाको सभ्यतालाई कृषिकाल, पूर्वसुमेरियनकाल, सुमेरियनकाल, बेविलोनियनकाल र असिरियनकाल गरेर पाँच भागमा बाँडिएको छ । यस सभ्यताको शुरूको अवस्थालाई कृषिकाल भनिन्छ । यस समयमा बेबिलोनी छैठौँ राजा हम्बु राबको इतिहासलाई हेर्दा उनीहरूले हजारौँ वर्षअगाडि हिन्दू सभ्यतामा भएको विकास अनुशरण गर्न खोजेको देखिन्छ[८] ।

मेसोपोटामियाका सुमेरियनहरू इन्डोयुरोपियन जातिका मानिसहरू थिए । प्राचीनकालमा स-साना गोत्रीय र क्षेत्रीय समूहबाट गठन भएका थिए । केही उदाहरणबाट सामुदायिक (जनजातीय) संरक्षक देवताहरूका प्रतिविम्ब कसरी बनेका थिए भन्ने देखाउन सकिन्छ । लगश सहरमा संरक्षक देवता निङ्गिर्सु (गिर्सुको सर्वेसर्वा) लाई मान्ने गरिन्थ्यो । गिर्सू एउटा सानो बस्ती थियो, जुन लगसमा थियो । लगसमा सामेल भएको अर्को बस्तीको संरक्षिका बाऊ नामकी देवी थिई । जतिबेला उक्त दुई वस्तुहरूको एकीकरण भयो, त्यतिबेला ऊ निङ्गिर्सुकी पत्नी थिई । सुमेरीकाल (इ.पू. चौथो-तेस्रो सहस्राब्दी) मा त्यस्ता एकीकरण र संरक्षक देवताहरू विषयक धारणाहरूको संयोजनमार्फत सबै सुमेरीहरूद्वारा मान्य देवी-देवताहरूको उत्पत्ति भएको थियो । तिनीहरूमा प्रमुख देवता तीनवटा थिए, अनु, एआ र एनलील । ती त्रिमूर्तिको उद्‌भव स्पष्ट छैन । अनु (सुमेरी) शब्द अनको अर्थ आकाश हो । प्रारम्भमा सम्भवतः केवल आकाशको मात्र मानवीकरण हुने गर्दथ्यो । एनलीलको नामको व्युत्पत्ति विवादास्पद छ । केही विद्वान्हरूले भन्दछन् त्यो सुमेरी शब्द 'लिल' (वायु, श्वास, छाँया, प्रेतात्मा) बाट निक्लेको छ । पुरालेख एनलिललाई बाढीको राजा, वायुको पहाड, जमिनको राजा, इत्यादि विशेषण प्रयोग गरिएको छ । त्यो देवता पहाहरूसित चल्नु र त्यसले वर्षाद गराउनु, बादल (कहिलेकाही बाढीसमेत) ल्याउनु र वायुसित सम्बन्ध राख्नु धेरै सम्भव छ । एआको पूजा विशेष गरेर समुद्री किनारको नजिक रहने समुदायद्वारा गर्ने गरिन्थ्यो । त्यो सम्भवतः माछा मार्ने माझीहरूको संरक्षक देवता थिए । त्यसलाई अर्द्ध-मानिस र अर्द्ध-माछोको रूपमा चित्रित गर्ने गरिन्थ्यो । त्यसलाई सांस्कृतिक नायकसमेत मान्ने गरिन्थ्यो । मिथकहरूमा त्यसले अरु देवताहरूबाट मानिसको रक्षा गर्ने बताइएको छ । देवी-देवताहरूका मूर्तिहरू समेत प्रारम्भमा धेरैजसो मानव आकृतिका बनाउने गरिन्थ्यो । ( धर्मको इतिहास, पृष्ठ नं १९१, से. तोकारेव)

यिनीहरूले युफ्रेटस नदीको किनारमा जङ्गल र झाडी फाँडेर जौ र गहुँको खेती शुरु गरेका थिए । यिनीहरू गाई, गोरु र गधाजस्ता जनावरहरू पाल्ने गर्दथे । यिनीहरू अत्यन्त कुशल शिल्पकार, चित्रकार

पनि थिए । हाम्रा घडीमा प्रयोग गरिने समयको सुइको विभाजन यिनैले गरेका थिए । त्यस्तै जिगुरात यिनैले बनाएका थिए ।

सुमेरियन, अक्काडियन र गुटियंन साम्राज्यको पतन भएपछि १९०० ई.पू.मा सिरियाका मरुभूमिबाट आएका एमोराइटहरूले सुमरमाथि आक्रमण गरेर अधिकार जमाए । त्यही सुमर बेविलोनियाको नामबाट प्रसिद्ध भयो । त्यसै वंशका छैठौं (१२२३ देखि २०८१) हम्मुराब राजाले देशको एकीकरण गरेर बेबिलोनियालाई आफ्नो राजधानी बनाएर विश्व प्रसिद्ध कानुन निर्माण गरे । यिनको मृत्यु भएको ४०० वर्षपछि यिनको वंश अन्त्य भयो । कसाइट हिटी र असिरियनहरूले त्यहाँ राज्य गर्न थाले । टिकलेथ पिलेसर तृतीय सरगन बतिय र सेन्नाचेरिव नामका प्रसिद्ध राजाले बेबिलोनियामा राज्य सञ्चालन गरेका थिए । चाल्डियन मेसेज जातिको आक्रमणपछि सिरियन साम्राज्य विभाजित भयो । चाल्डियनहरूले बेबिलोनियामा शासन गर्न थाले । चल्डियन सम्राट् नेबोपोलानरका छोरा नै बुचाडनेजरले बेबिलोनिया सहरलाई सिँगारेर आफ्नी रानीका निम्ति झुल्ने बगैंचा बनाएका थिए । यसरी ज्ञान, विज्ञान, साहित्य, धर्म, भूगोल र व्यापारको क्षेत्रमा समेत यस सभ्यताले संसारलाई ठूलो गुन लगाएको पाइन्छ ।

युनानी धर्मको ऐतिहासिक मूल तथा आदि रूपको प्रश्न अहिले अनुत्तरित छ । त्यो धर्ममा त्यस्ता तत्वहरू धेरै कम छन् जुन तथाकथित साझा भारोपेलीयुगसित सम्बन्धित हुन सक्दछ । त्यो पनि केवल एकाध देवताहरूका नामसम्म सीमित हुन्छ । त्यसको व्युत्पत्तिको दृष्टिबाट अरु भारोपेली देवताहरूका नामसित त्यसको समानता हुन्छ । जस्तै जीपस (वैदिक द्यौ), रोमनेली जुपीटर (जर्मन टिउ), यूरेनस (वैदिक वरुण), आदि । मानव आकृतिसम्बन्धी देवताहरू, विशेष गरेर नारी देवताहरूको समेत पूजा गर्ने गरिन्थ्यो । एउटा चित्रमा नारीलाई हात माथि उठाउँदै त्यसका अगाडि खडा भएको र कुकुरलाई एक पञ्जामाथि राखेको देखाइएको छ । माइसिनी लेखहरूमा हाल पढिसकेका केही नाम शास्त्रीय युनानका देवताहरू-आर्टीमिपेसीडिन, अर्मीज, हेरा, जीयस, हेष्टियाआदिका नामसित मिल्दाजुल्दा छन् । युनानीधर्मको इतिहास करिब १५,००० वर्ष लामो छ । त्यसको परिधिमा इ.पू. प्रथम सहस्राब्दीको प्रारम्भदेखि चौथो

शताव्दीसम्म, इसाईधर्मको विजयसम्मको सम्पूर्णकाल पर्दछ । प्राचीन युनानीधर्ममा आदिम टोटेमवादका हल्का नै किन नहोऊन् तर पनि स्पष्टरूपले देखिने अनेकौं निशानहरू थिए । त्यसको एउटा उदाहरण त्यसमा पाइने मिर्मीडोनाका कमिलाहरूबाट भएको उत्पत्ति मिथक हो । अर्को उदाहरण सर्पका जस्ता खुट्टा हुने सेक्रोप्सको मिथक हो ।

तात्कालिक इतिहासहरूलाई केलाउँदा मिश्रको सभ्यतामा प्रष्टसँग प्रकृति पूजा तथा अलौकिक शक्तिको आराधना भएको देखिन्छ । यस सभ्यताभित्र बाइबलका दर्शन र ईश्वरीय छाप परेको देखिन्न । उल्टो यो सभ्यताको छाप भने बाइबलभित्र परेको देखिन्छ भनी परमेश्वरसमक्ष आफ्नो गवाही पेश गरेको छु ।

### रोमको सभ्यता

रोमबासीहरूले के मान्दथे भने आत्माहरू (मृतकहरू)का छायाँहरू- 'मानीज'–परिवारहरू र गोत्रका संरक्षक हुन्छन् । 'डिई मानिज' अर्थात् मानिस देवता शब्दहरूको प्रायः प्रयोग गरिन्थ्यो । चिहानमा ढुङ्गे चाफाहरूमा 'डिसमानीबुस' (मोनिज देवताहरू) लाई सधैं पदका शुरूका अक्षरहरू 'डि.एम.' कोरिएको पाइन्छ । प्रसङ्गवश मृतकहरू, पितृपूजा तथा सम्पूर्ण रोमनेली धर्मको मूल त्यो पूजामै देख्न सिद्धान्तको लागि कहिलेकाहीँ प्रयुक्त 'मानीवाद' शब्द त्यही 'मानिज' शब्दबाट बनेको हो । मानिजलाई 'पेनातो' सित मिल्दोजुल्दो वा दुवैलाई एउटै मान्ने गरिन्थ्यो । पेनात शुरूमा घरको अन्न अथवा खाद्यभण्डारको प्रतिरूप हुने गर्दथ्यो । पछि आएर त्यो घरको संरक्षक प्रेतात्मा बन्न पुगेको थियो । ती दुई अवधारणासित मिल्दोजुल्दो अर्को एउटा अवधारणा 'लार' थियो । त्यसको निकै बढी व्यापक अर्थ थियो । लार सबै प्रकारका संरक्षक प्रेतात्माहरूलाई भन्ने गरिन्थ्यो । त्यसमा परिवारको संरक्षक प्रेतात्माका अतिरिक्त मार्गहरूका संरक्षक प्रेतात्माहरू र सेनाका रक्षक प्रेतात्माहरूसमेत हुन्थे ।

पारिवारिक र गोत्रसंरक्षकको पूजा निजी, पारिवारिक वा गोत्रीय कार्य हुने गर्दथ्यो । परिवारको मूलीको निर्देशनमा घरको आगोको नजिक आफ्ना पूर्वजहरू, आफ्ना संरक्षकहरूको पूजा गर्दथे । त्यसैगरी गोत्र (कूलपूजा) आयोजित गर्ने गरिन्थ्यो । तीनमा आराध्य गोत्रको मिथकीय वा

अनुश्रुतिबाट लिइएको आदि पूर्वज वा नाम स्रोत हुन्थ्यो । ( धर्मको इतिहास, पृ. न. २६९, से. तोकारेव)

इसाई कर्मकाण्डमा मुख्य स्थान धार्मिक अनुष्ठानलाई प्राप्त छ, जसको उद्देश्य आस्थावान् व्यक्तिहरूका लागि ईश्वरको अनुग्रह प्राप्त गर्नु हो । सबैभन्दा प्राचीन महत्त्वपूर्ण इसाई अनुष्ठान वपतिस्मा र युखारिस्त हुन् । युखारिस्तको अवसरमा धार्मिक मानिसहरूले रोटी र रक्सीको रूपमा इसाको मासु तथा रगतको आस्वादन गर्दछन् ।

रोमस र रोम्बुलस नामका दुई भाइले टाइवर नदीको किनारमा इ.पू. ७५३ मा रोम नगरको स्थापना गरेका थिए भन्ने जनविश्वास रही आएको पाइन्छ । पुरातात्विक स्रोतका आधारमा करिब ७५० इ.पू. मा युटूस्कन जातिहरूले रोममा गणराज्यको स्थापना गरेको कुरा प्रमाणित भएको छ । यस जातिका राजाहरूले दुई शताब्दीसम्म इटाली प्रायद्वीपमा शासन गरेका थिए । यो जाति निकै सभ्य र सुसंस्कृत भएको हुनाले इटालियनहरूले यिनलाई आफ्नै देशबाट धपाएर गणतन्त्रको स्थापना गरेका थिए । उनीहरूबाट प्राप्त राजनीति, धार्मिक ज्ञान र विद्याको प्रयोग गरेर इ.पू. ५०९ मा इटालियनहरूले यिनीहरूमाथि विजय प्राप्त गरेका थिए । (विश्वको इतिहास-२०७० पृ. ६१, प्रा.डा. श्रीप्रसाद उपाध्याय) ।

गणतन्त्र स्थापना भए पनि रोममा दुई जाति पेट्रिसियन र प्लेनियनका बीचमा एक अर्काप्रति घृणाको भावना हुनाले शान्ति र प्रगति भएन । अन्त्यमा यी दुवै जातिका बीचमा सम्झौता भयो र रोम साम्राज्यको विस्तार गर्ने वातावरण सिर्जना हुन पुग्यो । रोममा गणतन्त्रात्मक व्यवस्था भएपछि वंशाणुगत राजा हुने चलन थिएन । निर्वाचनद्वारा राजा चुनिन्थ्यो । राजाले ठूलाहरूको सभा र कोमिसिया क्युरियटाको सल्लाहअनुसार काम गर्नुपर्दथ्यो । रोम साम्राज्यमा प्रान्तीय स्वायत्व शासन लागु थियो । रोमको कानुन विश्वको कानुनी इतिहासमा विशिष्ट रहेको पाइन्छ । प्राचीन समयमा रोममा कुनै लिखित कानुन नभए तापनि बाह्रवटा पत्रको निर्माण भएपछि यहाँ लिखित कानुनको विस्तार गरियो । यो बाह्र पत्रे कानुनले समय सुहाउँदो कानुन निर्माण गर्न सजिलो भयो । त्यसपछि प्रिटोरको नियुक्ति गर्न थालियो । यहाँको कानुन उत्कृष्ट बन्दै गयो । यसरी रोमको

सभ्यताले विश्वलाई कानुनी, सरकारको उचित सङ्गठन, असल राजनीतिक सिद्धान्त तथा पात्रोको निर्माणमा ठूलो योगदान दिएको छ ।

**सिन्धुघाँटीको सभ्यता :**

सिन्धुघाँटी सभ्यताको इतिहास निकै पुरानो मानिन्छ । इतिहासलाई तुलना गर्दा सिन्धुघाँटीको सभ्यतापश्चात् बाइबलमा भनिएको यहोबाले संसार सृष्टि गरेको जस्तो भान हुन्छ । त्यसैले बाइबलमा बेबिलोनी सभ्यताको उत्पत्ति, विकास र पतनबारे विरोधाभास वचन मैले परमेश्वरको अदालतमा पेश गरेँ ।

विश्वका महत्वपूर्ण सभ्यताको उद्गमस्थल नदीघाँटीलाई मानिन्छ । यस कुराको पुष्टि सिन्धुघाँटी सभ्यताले गर्दछ । यो सभ्यता सिन्धु र राभी नदीको किनारमा विकसित भएको थियो । सिन्धु नदी उत्तर-पश्चिमी तिब्बतबाट उत्पत्ति भएर २,९०० किलोमिटर पार गर्दै अरब सागरमा खस्दछ । यसका चेनव, झेलम राभी, ब्यास र सतलज नामका पाँच सहायक नदीहरू छन् । सिन्धु ऋग्वेदमा उल्लेख गरिएको संस्कृत शब्द हो । यसलाई युनानीहरूले इन्डोस (Indos), अरबिकहरूले सिन्धु वा सिन्धुवी (Sindhavi), पर्सियनहरूले हिन्द वा हिन्दवी (Hindavi) भन्दथे । सन् १९२२ भन्दा अघि सिन्धुघाँटीको सभ्यताको बिषयमा केही थाहा थिएन । त्यस वर्ष डा. राखलदास बन्दोपाध्याले सिन्धुको लरकनाजिल्लाको मोहन्जोदडोको उत्खनन गरेपछि अनेक पुरातात्विक वस्तुहरू फेला परे । यस उत्खननपछि पुरातत्वविद्हरूको ध्यान यसतर्फ आकर्षित भयो । दयाराम साहनीले सर जोन मार्सल (Sir John Marshall) को नेतृत्वमा पन्जाबको मन्टगोमरी जिल्लाअन्तर्गत पर्ने हरप्पामा उत्खनन गरेर मोहन्जोदडोसँग मिल्दाजुल्दा वस्तुहरू फेला पारे । यसरी सिन्धुघाँटीका यी दुई महत्वपूर्ण स्थलहरू फेला परेपछि युरोपियन विद्वान्हरूको ध्यान यसतर्फ आकृष्ट भयो । (विश्वको इतिहास, २०७०, पृ. नं ३७, प्रा. डा. श्रीरामप्रसाद उपाध्याय ।)

हेवलार र जोन मार्सलले विस्तृत अध्ययन र उत्खननपश्चात् यो सभ्यता इसापूर्व २५०० देखि १५०० बीचको हुन सक्ने अनुमान गरे । हाल रेडियो कार्बन परिक्षणको निष्कर्षअनुसार यो सभ्यता ई.पु.

३००० को भन्ने निष्कर्षले मान्यता पाएको छ । )विश्वको एतिहासिक रूपरेखा, २०५६, पृ.नं. १४, डा. सुरेन्द्र के.सी.)

खाली मोहनजोदोडो, हडप्पा, सिन्धु घाँटी आदिको साक्षी दिएर सिन्धुघाँटीको सभ्यता नै प्राचीन सम्यता हो भनेर अड्डी मारेका छन् । तर यो सभ्यता वैदिक सभ्यतादेखि लाखौं वर्षपछिको हो । किनभने वेदहरूमा वर्णन गरेअनुसार त्यहाँका पुरातत्वहरू पाइँदैन । (वेदमा के छ ? डा. प्रपन्नाचार्य) ।

यो सभ्यता सिन्धु र राभी नदीको किनारमा विकसित भएको थियो । सिन्धुघाँटीको सभ्यताको विषयमा विभिन्न मतहरू आए पनि यस सभ्यताको प्रारम्भ ३००० इ.पू. मा भएको थियो भन्ने मानिन्छ । यस सभ्यताको मुख्य केन्द्र हालको पाकिस्तानको हरप्पा र माहन्जोदडोमा पर्दछ । यी दुबै ठाउँ एक अर्काबाट करिब ४०० मिल टाढा रहेको छन् । (भारतका इतिहास १९९० ई.सं, पृ.१७,डा. ओमप्रकाश) ।

सिन्धुघाँटी सभ्यताको मुख्य विशेषता उत्कृष्ट भवन निर्माण तथा नहर योजना थियो । यहाँ बनेका हरेक घरहरू पाकेका इँटाले बनेका हुन्थे । प्रत्येक घरमा सुत्नेकोठा, बैठककोठा, भान्साकोठा र स्नानगृह छुट्टा छुट्टै बनेका हुन्थे । यहाँको एउटा स्थान गृह १८०×१०८ फिट चौडा थियो । मोहन्जोदारोमा एक ठूलो खाद्यभण्डार र सभागृह पनि बनेको थियो । सिन्धुघाँटीका मानिसहरू माछा, मासु, तरकारी र दूध खाने गर्दथे । यिनीहरू नाइटोमुनि मात्र लुगा लगाउने गर्दथे । पुरुषहरू आफ्नो काँधमा च्यादर राख्ने र महिलाहरू विभिन्न किसिमका श्रृंगारका सामानहरू प्रयोग गर्दथे । धनी व्यक्तिहरू दास-दासी राख्ने गर्दथे । सिन्धुबासीहरूको व्यवसाय कृषि र उद्योग थियो । यिनीहरू खेतीपातीका साथै पशुपालन गर्दथे । यसबाहेक यिनीहरू गोरु, गैडा, सर्प, परेवा, बाख्रा र गोहीको पूजा गर्दथे । यसरी सिन्धुघाँटी सभ्यताले आधुनिक विश्वलाई निकै ठूलो देन पुऱ्याएको पाइन्छ ।

## पूर्वीय सभ्यताहरू

येशू जन्मिनुपूर्व जन्मिएका बुद्धको बारेमा बाइबलमा कहिकतै नलेखिनु, ८ लाख ६९ वर्षपूर्वको मिथिला सभ्यता, लाखौं वर्षपूर्वको वैदिककालको इतिहास बोकेको सनातनी धर्माबलम्वीहरूको काठमाडौं

सभ्यतासँग जोडिएको येशूको १२ देखि ३० वर्षसम्मको जीवन वृतान्तलाई नसमेटिनुले बाइबल पूर्ण ग्रन्थ होइन भन्ने प्रष्ट हुन्छ । यसले प्राचीन सभ्यताको जानकारी दिन सक्दैन भनी परमेश्वरको सामु बाइबल लेखकको अनविज्ञतालाई पेश गरेको छु । बाइबलमा तिलौराकोट कपिल सभ्यता, प्राचीन चीनको सभ्यता, काठमाडौँ सभ्यता, मिथिला सभ्यता, प्राचीन भारतका अन्य सभ्यताहरू समेटियोस् भनी उल्लेख नगरेको गवाही पेश गरेको छु । केही प्राचीन सभ्यताको छोटो परिचय परमेश्वरको अदालतमा पेश गर्न चाहैं ।

### क . तिलौराकोट (कपिल सभ्यता) :

पूर्वीय सभ्यताभित्र पर्ने तिलौराकोट सभ्यता विश्वको नै प्राचीन हो । यो सभ्यताको शुरुवात पूर्वीय संस्कृतिबाट भएको मानिन्छ । यहाँको सभ्यता विभिन्न ऋषिमुनि, सन्त, महात्माहरूसँग जोडिएको पाइन्छ । यस सभ्यताको प्रमुख केन्द्र प्राचीन समयमा कपिलवस्तुको नामले चिनिन्थ्यो । जुन वर्तमान नेपालको लुम्बिनी अञ्चलको तौलिहवामा रहेको छ । । यस सभ्यताको बारेमा विभिन्न किसिमका ऐतिहासिक प्रमाणहरू पाइन्छ । प्रसिद्ध ग्रन्थ दीर्घनिकाय र सुमङ्गल विलासिनी नामका ग्रन्थअनुसार कौशलराज्यका राजाले आफ्नी कान्छी रानीका छोरालाई राज्य दिन जेठी रानीतर्फका चार छोराहरू र पाँच छोरीहरूलाई राज्य निकाला गरिदिएका थिए । कौशलराज्यका यी राजकुमार तथा राजकुमारहरू हिमालयतर्फ लाग्दा बाटामा जङ्गलको माझमा तपस्या गरी बसेका कपिल मुनिसँग भेट भयो । केही समयसम्म मुनिको सेवा गरेर बसेपछि कपिल मुनिले यिनीहरूलाई त्यही जङ्गल फडानी गरेर बस्ने अनुमति दिए र बस्ती बसाले ।

गौतम गोत्र भएका राजकुमार तथा राजकुमारीहरूले शकवृक्षको फडानी गरेर बसेका हुनाले यिनै गोतामेहरूको वंश शाक्य हुन गयो । यसरी कोशलबाट आएका पाँच राजकुमारीमध्ये जेठीले राजमाताका रूपमा काम गर्न थालिन् । अरु चार बहिनीले अन्य चार दाजुभाइहरूसँग विवाह गरेर सन्तान वृद्धि गरे । यिनीहरूकै सन्तानको वृद्धिले गर्दा त्यो ठाउँ बस्तीको रूपमा परिणत भयो । यसरी कपिल मुनिको अनुमति लिएका गोतामेहरूले बसाइएको वस्ती हुनाले हालको तिलौराकोटको नाम कपिलवस्तु

हुन गएको वर्णन गरिएको छ । तिलौराकोटको सिमाना एकिनका साथ भन्न नसकिए तापनि बौद्धग्रन्थहरूको आधारमा तिलौराकोट भगिरथी (वाणगंगा) नदीको किनारमा हिमालयको नजिक अवस्थित थियो भन्ने प्रमाणित हुन्छ । त्यसबेला तिलौराकोटको पूर्वमा रोहिणी नदी, पश्चिममा राप्ती नदी, उत्तरमा हिमाल र दक्षिणमा पावा कुशीनगरसम्म फैलिएको थियो । अहिलेको तिलौराकोट प्राचीन कपिलवस्तुको राजधानी भनेर इतिहासले बताउँछ ।

कपिलवस्तु कला, कृतिमा निकै सम्पन्न थियो भन्ने कुरा बौद्धग्रन्थ तथा हालसम्म प्राप्त पुरातात्विक वस्तुहरूबाट प्रमाणित हुन्छ । तिलौराकोटमा प्राप्त दोस्रो शताब्दीको इशापूर्व ब्राह्मी लिपिमा अंकित अर्थात् माटाको मुद्रामा शा.का. ना.शा. (शाक्य समयको भन्ने) लेखिएकाबाट तिलौराकोटको भौगोलिक स्थिति प्रष्ट हुन्छ । नेपालमा मात्र नभएर भारतमा रहेको साँची र भारहुतको स्तुपमा रहेको चित्रहरूबाट पनि कपिलवस्तुको जीवनपद्धति तथा कलाको विकासको परिचय पाइन्छ ।

**ख. काठमाडौँ सभ्यता:**

काठमाडौँ सभ्यता पनि पूर्वीय सभ्यताको इतिहासमा प्रमुख प्राचीन सभ्यताको रूपमा विकसित भएको पाइन्छ । नेपालमहात्माअनुसार 'ने' नामका ऋषिले यहाँका जनताको पालन गरेकाले यस देशको नाम नेपाल रहन गयो । उनले चन्द्रचुड पर्वतमा आई तपस्या गरेका थिए । जातिगत आधारमा काठमाडौँ उपत्यकामा बस्ने प्राचीन 'निय' जाति नै आजको नेवार जाति हुन् । यिनीहरूको भाषाका आधारमा नियमबाट 'नेप' शब्दको उत्पत्ति भयो यसमा 'आल' प्रत्यय लागेर यस ठाउँको नाम नेपाल रहन गएको हो । तिब्वतीभाषाको आधारमा 'नु' को अर्थ घर र 'पाल' को अर्थ ऊन हुन्छ । ऊन पाइने हुनाले तिब्बतीभाषामा यस ठाउँलाई नेपाल भनिएको हो ।

संस्कृतभाषाको आधारमा 'निप' को अर्थ उपत्यका 'आल' को अर्थ घर भएको हुनाले निपआल शब्द मिलेर नेपाल शब्द बन्न गएको हो । यसरी विभिन्न आधारअनुसार काठमाडौँ उपत्यकाको नाम नेपाल रहन गएको

हो । त्यस्तै काठैकाठको मन्दिर तथा घरहरू भएका कारण पछि काष्ठमण्डप भन्ने नाम रहन गयो । यही अपभ्रंश भएर काठमाडौँ बन्न पुग्यो ।

काठमाडौँमा राज्य गर्ने प्रथम राजवंश गोपालवंश मानिएको छ । गोपालवंशको अर्थ गाई पाल्ने वंश भएकाले त्यही वंशबाट नेपालराज्य शुरुवात भएको कारण नेपालमा गाईको महत्व धेरै रहेको हो भन्ने मानिन्छ ।

गोपालवंशको अन्त्यपछि नेपालराज्यमा हिन्दूस्तानबाट आएर अभिरहरूले राज्य गरे । अभिरवंशलाई नै महिषपालवंश भनिन्छ । यलम्बर किरातवंशका संस्थापक राजा भएपछि नेपालमा अभिरवंशको शासन समाप्त भयो । यलम्वर राजा वीर, पराक्रमी र साहसी थिए ।

नेपालको इतिहासमा किराँत केन्द्रमा नेपालको जग (आधारस्तम्भ) खडा भयो । उनीहरूले नै सर्वप्रथम बृहत नेपालको खाका खडा गरे । (बाइबल र माओवाद-२०७३, पु.८८, अर्जुन ज्ञवाली/पेशल निरौला) । नेपालका गुरूङ राई, लिम्बू, तमाङ, मगर आदि जस्ता किरातीद्वारा विकसित गराइएको सभ्यता नै किरात सभ्यता हो । कसिया जातिले बेविलोनको एउटा सभ्यता विकास गऱ्यो । त्यस्तै आर्यावर्त क्षेत्रमा विकसित भएको प्रमुख सभ्यता नै किराती सभ्यता हो । किराती सभ्यताको केन्द्र काठमाडौँ हो । किरातीहरूको इतिहास पूर्णतः बाहिर ल्याउन यलम्बर प्रथमदेखि यलम्बर ३१७ औँसम्म त्यस्तै जिस्तेदस्ती प्रथमदेखि जिस्तेदस्ती ३३ औँसम्मको कालगणना उभ्याउनुपर्ने देखिन्छ । महाराजा अश्वपति जनकदेखि महाराजा शुद्धोधनको पालासम्म किरातीहरूको शासन नेपालमा थियो । सुन्दर किरातीकालमा कुनै जातीय भेदभाव थिएन । यसको सुरूवात राजा जयस्थिति मल्लले मालवारका चर्चको सल्लाहमा काशी कान्यकुब्जेबाट झिकाइएका ब्राह्मणको सहयोग लिएर जातभात छुट्याउने गलत कार्यको सुरूवाती भएको थियो ।

यी सबै इतिहास हेर्दा शैतानद्वारा प्राचीन सभ्यता र इतिहासलाई नष्ट गरिदिएको देखिन्छ । बाइबलमा त्यो अजिंगर क्रोधित भयो र सन्तानसँग युद्ध गर्न गयो भनी लेखिएको छ । कतै यही युद्धका कारण उत्पत्तिदेखि रहस्य बोकेको पूर्वीय सभ्यतालाई बाइबलबाट हटाइएको त

होइन ? भनी मैले परमेश्वरको अदालतमा किरातीद्वारा तयार गरिएको किराती सभ्यता (काठमाडौँ) लाई राखिदिएँ ।

## मिथिला सभ्यता

यो सभ्यता आर्य जातिद्वारा विकसित सभ्यता हो । यस सभ्यता विश्वको पुरानो सभ्यतामध्ये एक मानिन्छ । उत्तरमा हिमालयदेखि दक्षिणमा गंगासम्म फैलिएको थियो । 'सुकिङ्ग' भन्ने ग्रन्थकालभन्दा हजारौं वर्षपूर्वका पारसियनको जेन्दा-अवस्ता-ग्रन्थमां हिन्दू शब्दको उल्लेख छ, अनेकन प्रमाणले पनि पुरानो सभ्यता भएकाले अल्पज्ञानी विवादको अर्थ छैन । ८ लाख ६९ हजारपूर्व राजा जनकको समयमा यो सभ्यताको विकास चरम सिमामा पुगेको थियो । ५००० पूर्व कृतिजनकको समय महाभारतको युद्ध र युग परिवर्तनको प्रलयमा यो सभ्यताको पतन भयो । राजा जनकको शासनकालमा महिला शिक्षालाई पुरुषसमान प्रदान गरिन्थ्यो । आरुणी, सत्यकाभा, जावल, दृत्पवालकी, श्वतकेतुजस्ता विदुषीहरूको इतिहासले नारीको शिक्षाको स्तर उच्च भएको बताउँछ । राजा जनकको सभाका सभासद पनि महिलाहरू थिए ।

राजा जनकको शासन कालमा स्त्री शिक्षामा जोड दिइएको थियो । गार्गी र मैत्रीयजस्ता उत्कृष्ट श्रेणीका विदुषी हुनुमा यस समयको स्त्री शिक्षाको प्रभाव थियो भन्न सकिन्छ । (नेपालको प्राचीन तथा मध्यकालीन इतिहास २०६० पृ. २१, प्रा. डा. श्रीरामप्रसाद उपाध्याय) ।

सुन्दर र भव्य महल तथा सहरहरू थिए । कौशीका, गण्डकी (शालिग्राम) किनार र तीनले सिँचाएका फाँटहरूमा अनि भूमिहरूमा धान, जौ, गहुँजस्ता खेतीहरू प्रशस्त हुन्थे । गाई, गोरु, भेडाबाख्रा, घोडाजस्ता जनावर पाल्ने गर्दथे । कुशल शिल्पकार र चित्रकारहरूमात्र होइन, संस्कृत वेदमन्त्रहरू ब्रह्मलोकबाट जनहरूसमक्ष प्रष्फुटित गराउने पवित्रजनहरू थिए । सत्ययुगको अन्त्यमा ब्रह्मसामीप्यमा लीन गराउने मन्त्रहरू त्यस युगमा लिपिबद्ध गराउने विद्वान् र दार्शनिकहरू यो सभ्यतामा जन्मिएका थिए ।

यही समयमा गणेशहिमालको फेदीमा विशाल गोरखपोखरी थियो । उक्त पोखरीमा रहेको कमलको बोटबाट मुनीन्द्र ऋषि पृथ्वीतलमा

अवतरित भई रामचन्द्रलाई पुल निर्माण गर्न सहयोग गर्नुभयो । ऋषिमुनि र पृथ्वीतलमा रही जेष्ठपूर्णिमाको दिन आफ्नो शब्दद्वारा सिर्जना गरेकी छोरी दुर्गा, वाराही देवीलाई मनको इच्छा पूरा गर्ने देवीको रूपमा यस लोकमा तिमीलाई श्रद्धा गर्नेछन् भनी सशरीर मुनीन्द्र लोक जानुभयो । जसको प्रभावलाई मनकामना क्षेत्र नेपाल भूमिको पुण्यक्षेत्र मानिन्छ ।

सत्ययुगका कतिपय विद्वान् महर्षिहरूले पुनः जन्म लिएका थिए । मिथिला क्षेत्र यी प्राचीन ऋषिमुनिको तीर्थस्थलको रूपमा विकसित थियो । स्वर्गका देवदेवतासमेत भ्रमण आउने ठाउँको रूपमा विकसित भएको थियो । यो सभ्यता साहित्य र धर्ममात्र होइन संचार, यातायातलगायत प्रशस्त भौतिक सुविधा सम्पन्न थियो ।

एउटा रहस्यमय यथार्थ, इतिहासकारको लागि चुनौती जनक राजाले हलो जोते त्यो पनि सुनको, अनि सीता उत्पन्न भइन् । लेख सामान्यजस्तो लाग्छ तर गहिरो रहस्य छ । मिथिला सभ्यताभित्र धनुवाण सीताले उठाइन तर उमेर पुगेका, बहादुर, ज्ञानी कसैले उठाउन सकेन । कलिलो उमेरका राम आए उठाए अर्को रहस्य । रहस्य नै रहस्यभित्रको सभ्यता, विश्वका दार्शनिक अनि वैज्ञानिकहरूलाई गृहकार्य बनेको यो सभ्यता जसले विश्वसामु सयौँ आश्चर्यको ज्ञान दिएको छ । यो सभ्यताभित्र गणितज्ञ राजनीतिज्ञ, भौतिकशास्त्री, चिकित्सकजस्ता थुप्रै महर्षिहरूको अतुलनीय योगदान रहेको देखिन्छ ।

# येशू को हुन् ?

वर्टराण्ड रसेल २०औं शताब्दीको एक प्रख्यात लेखक तथा इतिहासकार हुन् । उनले इसाईको वास्तविकता उद्घोष गर्ने उत्कृष्ट पुस्तकमा येशूबारे यसरी लेखेः "ऐतिहासिक रूपमा खीष्ट अस्तित्वमा थिए कि थिएनन् भन्ने कुरा शंकास्पद रहेको छ अनि यदि उनी थिए पनि भने उनीबारे कुनै पनि कुरा हामीलाई थाहा छैन ।"(Bertland Russel: Why I am not a Christian and other Essay on Religion and related subject ed. By Paul Edwards) Simon and Schuster, 1957,16

रूसी विद्वान् डा. निकोलस नोटोविचकको अनुसार येशू पहिले एभडी साधु थिए । उनी १८ वर्ष भारत-तिब्बत भ्रमण गरी वेद, त्रिपिटक अध्ययन गरेका थिए । १२ वर्षदेखि ३० वर्षसम्मको १८ वर्षको अवधिको येशू विषयमा बाइबल मौन छ । यही मौनतालाई तोड्दै The unknown life of Jesus Holdger Christon, P. 10 मा नेपालमा ६ वर्ष येशूले बिताएका छन् ।"

रघुनन्दन शर्माले वैदिक सम्पत्तिको २६३ पृष्ठमा, "भारतमा आएर इसाले काशी, विहार आदिमा विद्या अध्ययन गरेर तिब्बत जाने कुरा लेखेको छ ।"

मुसलमानको धार्मिक ग्रन्थ कुरानमा सुरते निशा पारा भन्ने प्रकरणमा ६-१५७ इसा सुलीमा नमारिएको लेखिएको छ ।

येशूखीष्टको जन्म यस प्रकारले भयो उहाँकी आमा मरियमको मगनी योसफसँग भएको थियो । उनीहरूको विवाह हुनु अघि मरियम पवित्र आत्माद्वारा गर्भवती भएकी थाहा भयो । तिनका पति योसेफ धार्मिक मानिस भएका हुनाले शर्ममा पार्ने इच्छा नगरी गुप्तमा नै त्याग्ने इच्छा गरे । जब उनले यो कुरा विचार गर्दै थिए सपनामा परमप्रभूका दूत देखा परे । उनलाई यसो भने "योसेफ दाउतका छोरा १ तिम्री पत्नी मिरियमलाई

स्वीकार गर्न नडराऊ किनभने जो तिनका गर्भमा हुनुहुन्छ, तिनीले एउटा पुत्र जन्माउनेछिन् । तिमीले उहाँको नाम येशू राख्नेछौं । (पवित्र बाइबल मति १:१८ देखि २१ सम्म )" ।

त्रिपिटकले येशू ख्रीष्टलाई चिन्दैन, महायानी केही लामाहरूले बौद्धवादी येशूलाई हिरोद राजाको ज्ञानी छोराको रूपमा चिन्दछन् । (बौद्ध दर्शन) ।

मेरियमको मगनीपूर्व नै रोमन सैनिक टाइबेरियस जुलियस पेन्तेराको प्रेममा फसी गर्भवती भएकी थिइन् । त्यतिबेलका रोमी सैनिकहरूलाई विवाह गर्ने अनुमति हुँदैन थियो । त्यसकारण पेन्तेराको सहयोगमा मेरियमको विवाह भएको थियो । थेरावादीहरू येशूलाई पेन्तेराको छोरो एक असल गुरु हो भनी चिन्दछन् । (थेरावादी) ।

मिश्री देवता होरस, पर्सियन देवता मित्रा, ग्रीक देवता डियोनाईसिस, सिरियन देवता एडोनिस आदि कुमारीको गर्भबाट येशूख्रीष्टको जन्मनु भन्दा हजारौं वर्षअगाडि भइसकेको थियो । यसैगरी रोमन इतिहासका नायकहरू हर्कुलस र अलेक्जेण्डर महान् पनि कुमारीकै सन्तान थिए । बाइबलमा योजनाकारहरूले कुमारीको गर्भसम्बन्धी तात्कालिक समाजमा प्रचलित मान्यतालाई आफ्नो सहुलियतअनुसार अलिकति बदले । (पूर्वीय चिन्तक) ।

येशूख्रीष्टको ज़न्म यसरी भयो-उहाँकी आमा मरियमको मगनी युसुफसँग भएको थियो । उनीहरूको सहवास हुनुभन्दा अघिबाटै मरियम पवित्र आत्माद्वारा गर्भवती भएकी थिइन् । एकजना दूतले उनलाई यसो भनेर दर्शन दिए, "ए युसुफ दाउदको छोरो, तिम्री पत्नी मरियमलाई तिमीकहाँ ल्याउनलाई नडराऊ, किनभने जो तिम्रो गर्भमा हुनुहुन्छ, उहाँ पवित्र आत्माबाट हुनुहुन्छ"। (पवित्र बाइबल, मत्ती १ :१८-२०) ।

पुरै ख्रीष्टीयन धर्म विज्ञान यति धेरै मूढतापूर्ण धरणाहरूमाथि आधारित छ, कि त्यसलाई धर्म मान्न पनि पागलपन हो । येशू कुमारी माताबाट जन्मेका हुन् । यो भनाई पुरै चिकित्सा विज्ञानको विपरित छ । यो सम्भव हुन सक्दैन तर यो ख्रीष्टीयनहरूको मूल तत्वमध्ये एक हो । यदि यसलाई

हटाइदिने हो भने खीष्टीनिटीको सारा भवन नै धरासायी हुन्छ । (ओशो) ।

लुकाको पुस्तक भन्छ 'येशू जन्मदा सिरियामा हाकिम कुरेनियस थिए । हामीलाई जानकारी भएअनुसार, कुरेनियस ६ ईस्वी संवतमा सिरियाका हाकिम भएका थिए ।

उनीअगाडि लेख्छन् - मत्तीको पुस्तकअनुसार, येशूको जन्म हुँदा यहुदियामा राजा हेरोदको शासन छ । तर, हेरोद त ईसापूर्व ४ मा मरेका थिए । ईसापूर्व ४ मा मरेका राजा हेरोददेखि ईस्वी ६ का सिरियन हाकिम कुरेनियसबीच १० वर्षको फरक छ । यसकारण, येशूको जन्म कसको पालामा भयो ? स्पष्ट जवाफ छैन । के मरियमले दश वर्षको अवधिमा दुईपटक येशूलाई जन्म दिइन् ? (टप हर्पर, पेगन क्रिण्ट) ।

परमेश्वर व्यक्तिगत हुनुहुन्न । त्यसो हुँदा येशू परमेश्वर पुत्रचाहिँ कदापि होइन, सायद उनी ज्ञानी पुरुष थिए । (सान्तेनिया/आत्मावाद) । येशू मसिह हुनुहुन्न । मसिह भनेको ईश्वरीय व्यक्तित्व होइन तर उहाँले यहुदीराज्यको पुनर्स्थापना गर्दै न्याय स्थापना गर्नुहुनेछ । यहुदीहरूको कतिपय पवित्रजनहरूको समूहले मसिह भनेको व्यक्ति नभएर समयावधि विश्वास गर्छन् । (मसिह युग) त्यतिबेला मानिसहरूले अन्तिम सिद्धता प्राप्त गर्नेछन् भन्ने मान्यता राख्छन् । (यहुदीवादी) ।

यहोबाका साक्षीहरू येशू र प्रधान स्वर्गदूत मिखाएल एउटै भएको ठान्दछन् । उनीहरू येशू महान् व्यक्ति हुन तर यहोवासँग बराबरी नभएको ठान्दछन् । उनीहरूका अनुसार येशू खाबोमा मारेका थिए र त्यसपछि अस्तित्वबाट हराएको विश्वास गर्छन् । येशू शारीरिक रूपमा नभई आत्मिक रूपमा उठाएको भनेर विश्वास गर्छन् । (यहोवाका साक्षीहरू) ।

येशू तथा अन्य धार्मिक अगमवक्ताहरू आफैँमा 'स्पष्ट' थिएनन् । (विज्ञानशास्त्र) ।

युरास्तेरियनहरू येशूबारे कुनै ठोस विश्वास गर्दैनन् । उनीहरू यी काल्पनिक कथाहरू हुन् भन्ने धारणा व्यक्त गर्छन् । (युरास्तेरिमनवाद) । येशू देहधारी हुनु भएको परमेश्वर र येशूको ईश्वरत्व तथा अचम्मको कामहरू काल्पनिक र भ्रमात्मक भएको विश्वास गर्छन् । येशू थुप्रै अगमवक्ताहरूमध्ये एक हुन भनी विश्वास गर्छन् । (बहाई) ।

येशूखीष्टको ईश्वरमा विश्वसनीयता नभएको र उनी तात्कालिक एक आत्मिक मार्गदर्शक हुन् भनेर विश्वास गर्छन् । सिक्खवादी शिन्तो, कन्फुशियन्स र ताओबादले येशूखीष्टलाई चिन्दैनन् । ( शिन्तो/कन्फुसियन/ताओवादी) ।
येशू एकमात्र साँचो परमेश्वर होइन उनी मुक्तिदाता पनि होइन तर एक आत्मिक नमूना र मार्गदर्शक हुन् । येशू भारत, तिब्बतमा गई आत्मिक ज्ञान र रहस्य सिकेको विश्वास गर्छन् । उनीहरूको अनुसार येशू बौरी उठेको नभई आत्मिक संसारमा उचालिएको मात्र हो । (न्यू एज मुभमेन्ट, नवयुग अभियान) ।

येशूखीष्ट छैनन् तर सत्यताको प्रकाशलाई प्रस्तुत गर्ने मान्छेमात्रै 'खीष्ट' भनेको सिद्धता हो, व्यक्ति होइन । परमेश्वर कहिल्यै पनि मान्छे वा देह हुन सक्नुहुन्न । उहाँलाई कसैबाट सताइन, मार्न सकिन्न, न त उहाँ फेरि उठ्नुभयो । उहाँ शरीरमा फर्केर पृथ्वीमा आउने कुरा काल्पनिक हुन् । त्यसैले येशू परमेश्वर होइन । पाप, दृष्टता, बिरामी तथा मृत्यु वास्तविक होइनन् । स्वर्ग नरक भनेको कल्पना सोचमात्र हो । अनि बाइबल भरोसा योग्य छ भनी मान्न आधार छैन भन्ने गर्छन् । (खीष्टियन साइन्स) ।

अन्नपूर्ण पोष्ट, राष्ट्रिय दैनिक २०७१/०७/२८ अनुसार 'जिसस क्राइस्ट विवाहित थिए कि थिएनन् भन्ने प्रश्न फेरि उठेको छ ।'

अहिले फेरि दुई लेखकले आर्माइकभाषामा लेखिएको ग्रन्थ 'लस्ट गोस्पेल' को अनुवाद गरेपछि जिसस विवाहितमात्र नभई दुई सन्तानका बाबु नै भएका दावी गरेका छन् । बहुचर्चित उक्त हस्तलिखित ग्रन्थ सन् १९४७ देखि बेलायती पुस्तकालयमा रहेको छ । प्रोफेसर ब्यारी विल्सन र लेखक सिम्बा ज्याकोबोयिकले एक हजार पाँच वर्ष पुरानो उक्त किताबलाई कैयौं महिनाको मिहिनेतले अनुवाद गरेका हुन् । अनुवादपछि जिससले वेश्यावृत्तिमा संलग्न म्यारी माग्दालेनसँग विवाह गरेको तथ्य बाहिर आएको हो । जिसस र म्यारीको दुई सन्तान रहेका छन् । सन्तानको हत्या प्रयास पनि भएको पाइएको छ । म्यारी जिससकी मिल्ने साथी भएको रूपमा पहिलेदेखि चित्रण हुँदै आएको छ । म्यारीलाई पहिले भगवान्को रूपमा पुजिने गरेको

पाइएको छ । अहिले वास्तविक भर्जिन म्यारी जिससकी आमा नभई पत्नी नै भएको पनि तथ्य आइरहेको छ । 'लस्ट गोस्पेल' ले पहिलोपटक जिससको म्यारीसँग विवाहको दाबी गरेको भने होइन । यसअघि सन् १९५३ मा निकोस कजान्तजाकिसद्वारा लिखित 'द लास्ट टेमटेसन अफ क्राइस्ट' र डन ब्राउनको 'द डा भिन्ची' कोडमा पनि यस्तै किसिमको दाबी गरिएको छ । धार्मिक व्यक्तित्वहरूले यो दावीमा निकै शंका गरिरहेका छन् । यसमा गहन अध्ययन हुनुपर्ने समेत बताइएको छ । लेखक सिम्चबा ज्याकोबोविकयो नयाँ तथ्य सार्वजनिक गर्ने क्रममा भनेका छन् ' हामी गहन पत्रकारिताअन्तर्गतको इतिहास र पुरातात्विक सम्पत्तिको अध्ययन गरेका हौं । पहिलेदेखि इसाई समुदायले जिससलाई दिव्य र मनुष्य दुवैको रूपमा विश्वास गर्दै आएका छन् ।

त्यस्तै वैदिक शास्त्रले येशूलाई चिन्दैन तर भविष्यपुराण प्रतिसर्गपर्वको तेस्रो खण्डमा ईश पुत्रको बारेमा यसरी वर्णन गरेको पाइन्छ । राजा विक्रमादित्यको स्वर्गवास भइसकेपछि अनेक राजा एवम् राज्यहरू बन्न थाले । अनेक भाषाभाषी र अनेक धर्महरूको सिर्जना भयो । विक्रमादित्य राजाका नाति शालिवाहन आफ्नो पराक्रमले पुनः आफ्ना पुर्खाको राज्यलाई अधीनमा राख्न सफल भए । उनले नै म्लेच्छ र आर्यहरूलाई भिन्न-भिन्न मर्यादामा स्थापित गरे । आर्यहरूको राष्ट्रलाई सिन्धुस्थान भन्ने नाम राखे, म्लेच्छहरूलाई सिन्धु नदीको पारप्रदेशमा स्थापना गरे । एकचोटी शकका अधिनायक शालिवाहनले हिमालयको शिखरको यात्रा गरे । त्यहाँ हूण प्रदेशको मध्येमा अवस्थित त्यस पर्वतमा बसेका एक सुन्दर मूर्तिवाला सेतो वस्त्र लगाएका गोरो शरीरधारी पुरुषलाई देखे ।" पुराणमा भनिएको छ :-

"हूणदेशस्य मध्ये वै गिरिस्थं पुरुषं शुभम् ।<br>
ददर्श बलवान् राजा गौराङ्गं श्वेतवस्त्रम् ॥"<br>
शालिवाहनले तिनलाई सोधे तपाई को हुनुहुन्छ ?<br>
तिनले जवाफ दिए -<br>
"ईशपुत्रं च मां विद्धि कुमारीगर्भ सम्भवम् ।<br>
म्लेच्छधर्मस्य वक्तारं सत्यव्रतपरायणम् ॥<br>
इति श्रुत्वा नृपः प्राह धर्मः को भवतो मतः ।<br>
श्रुत्वोवाच महाराज प्राप्ते सत्यस्य संक्षये ।

निर्मर्यादे म्लेच्छदेशे मसीहोहं समागतः ॥"
"म ईश पुत्र हूँ । मेरो जन्म कुमारीको गर्भबाट भएको हो । म म्लेच्छधर्मको प्रवक्ता हूँ तर पनि सत्यको पालन गर्दछु ।"
राजाले सोधे - धर्मको विषयमा तपाइँको मत के हो ?

कुमारीपुत्रले जवाफ दिए - "हे महाराज ! म्लेच्छदेशमा जो सत्यहीन एवं मर्यादाविहीन छन् तिनीहरूका लागि म मसीहा भएर आएको हूँ । मैले म्लेच्छधर्मलाई स्थापना पनि गरिसकेको छु । त्यसैले म म्लेच्छहरूको बीचमा मसीहा बनेर आएको हूँ । देहमा स्थित शुभअशुभरूपी मलग्रस्त मनलाई निर्मल गरेर मनुष्यले सत्य र न्यायलाई स्वीकार गरेर वैदिक मन्त्रको जपपूर्वक सूर्यमण्डलस्थित त्यो निर्मल परमेश्वरको ध्यान एवं पूजा गर्नु । जसरी परमेश्वर भगवान् अचल हुनुहुन्छ त्यसरी सूर्यनारायण पनि अचल नै हुनुहुन्छ ।"

"तत्वानां चलभूतानां कर्षणः स समन्तत : ।
इति कृत्येन भूपाल मसीहा विलयं गतः ॥
ईशमूर्तिहृदि प्राप्ता नित्येशुद्धा शिवङ्करी ।
ईशामसीह इति च मम नाम प्रतिष्ठितम् ॥"
"प्राणीहरूको शरीरमा रहेको अस्थायी पञ्चतत्व - पृथ्वी, जल, तेज, वायु र आकाशलाई चारैतिरबाट आकर्षण गरेको कारणले नै मेरो मसीहा नष्ट भयो र हृदयमा ईशको मूर्ति जुन नित्य, शुद्ध तथा कल्याण दिनेवाला छ त्यो मेरो मनमा स्थित भएकोले मलाई ईसामसीह भनेर भन्दछन् ।"
"यी कुरा सुनेर राजा शालिवाहनले त्यो म्लेच्छपूजकलाई नमस्कार गरे र भीषण म्लेच्छदेशमा लगेर स्थापना गरे । त्यसपछि पुनः आफ्नो राज्यमा आएर अश्वमेधयज्ञको अनुष्ठान सम्पन्न गरी साठी वर्षसम्म राज्य उपभोग गरेर स्वर्ग प्रस्थान गरे ।"

त्यस्तै कतिपय विधर्मी पाष्टर तथा रेभहरूले यजुर्वेदको प्रसङ्ग उल्लेख गर्दै त्यसमा येशूलाई मुक्तिदाता भनिएको छ भन्दै भ्रम सिर्जना गर्ने गरेका छन् तर यजुर्वेदले येशूलाई चिन्दैन । किनकि वेदका कथा, वार्तालापपछि आएको कुनै पनि व्यक्तिको नाम उल्लेख नहुने सत्यता

बुझेका इसाई अगुवाहरूले येशूलाई मुक्तिदाता होइन भनी सिद्ध गर्न वेदको निम्न मन्त्र देखाउन यसो भनिएको हो ।

"वेदाहमेतं पुरुषं महान्तमादित्यवर्णं तमसः परस्तात् ।
तमेव विदित्वाऽतिमृत्युमेति न्यान्यः पन्था विद्यतेऽयनाय ॥"(यजुर्वेद ३१/१८)

अर्थात्, "सूर्यको समान तेज सम्पन्न, अन्धकाररहित, यो विराट् पुरुष छ जसलाई जानेर उपासकलाई मुक्ति प्राप्त हुन्छ । मोक्षप्राप्तिको यो नै एकमात्र मार्ग हो । यसबाहेक अरु कुनै पनि मार्ग वा उपाय छैन ।"

"प्रजापतिश्चरति गर्भे अन्तरजायमानो बहुधा विजायते ।
तस्य योनिं परिपश्यन्ति धीरास्तस्मिन् ह तस्थुर्भुवनानि विश्वा ॥"(यजुर्वेद ३१/१९)

अर्थात्, "प्रजापालक परमात्माको सत्ता सम्पूर्ण पदार्थमा विद्यमान छ । ऊ अजन्मा भएर पनि अनेक रूपहरूमा प्रकट भइरहन्छ । उसको कारण शक्तिमा सम्पूर्ण भुवन समाहित छ । ज्ञानीजनहरूले उसको मुख्य स्वरूपलाई देख्न सक्छन् ।"

नेपाली पाष्टर रेभ तथा खीष्टियन अगुवाहरूले हिन्दूधर्मशास्त्रमा येशूलाई मुक्तिदाता हो भनी लेखिएको छ भनी झुट बोल्नुका रहस्य गहिराईमा पुगेर खोज्ने क्रममा हिन्दूशास्त्र श्रीमद्भागवत, ब्रह्मपुराण र गरूडपुराणले झुण्डाएर मारिएका मानिसहरू सद्गत नभएमा प्रेत बन्दछ भनी ठोकुवा गरेको हुँदा येशूलाई प्रेत बनाइएको तथ्य उजागर गर्न यसो भनिएको हो ।

# कसरी भित्रियो नेपालमा बोक्सी प्रथा ?

वि.सं. ६४२ मा म्याकनमा नारी र उनको आत्मा विषयमा ९५ जना विज्ञहरूको गोष्ठीले पारित गरिएको निर्णय इसाईहरूको पवित्र अगमवाणीको ग्रन्थ डिक्सनरियो फायोडलको पृष्ठ ५६ अनुसार "इसाई स्त्री दुष्ट आत्मा (इभिल) हुन् । गैह्र इसाई स्त्रीलाई त मानवीय वस्तु नै मान्नुहुँदैन । मान्नु अधार्मिक र शैतानीकृत्य हुनेछ ।"

खीष्टियनधर्म परिवर्तनबारे थोमास जेफरसन लेख्छन् - "हाम्रो क्रिस्चियानिटीमा नोट गर्न लायक एउटा कुरा छः खराब, ब्लडी, निर्दयता, धन मुठ्याउने र प्रिडेटोरी काम गर्ने । केही इसाईमुलुकमा केही संशोधित इसाईपन छ, हाम्रोचाहिँ भयानक रेलिज (सम्प्रदाय) हो । विश्वको जहाज सहज ठाउँमा आनन्दसँग तैरन सक्छ । जिससको गोसपेल इतिहासमा तीन चिज हुन्छन्ः फेब्रिकेशन, सुपर्चिशन र फ्यान्टासिज्म । क्रिस्चियानिटीका कारण करोडौं लोग्ने मानिस, महिला र बालकलाई बोक्सीको आरोपमा जिउँदै जलाईएका छन् ।"

मध्यकालमा पोपहरूले नारीलाई बोक्सी र डायनमा गणना गर्दथे । कुनै नारीलाई चर्चले बोक्सी घोषित गर्न अधिकार थियो । वि.सं. १५४० देखि वि. सं. १८४० को ३०० वर्षमा ९० लाख महिलालाई चर्चले बोक्सी घोषणा गरी उनीहरूको पारिवारिक सम्पत्ति हडप गरेको थियो । वि.सं. २०३४ मा पोप पाल छैटौंले भनेका थिए, "महिलालाई प्रार्थना गर्न अधिकार छैन किनभने हाम्रा ईश्वर पुरुष हुन् ।"

पन्ध्रौं शताब्दीको जेकब स्प्रेङ्गरले भनेका थिए, "स्त्री किमेरा हो अर्थात् उसमा शेर, सर्प र बाख्राको आत्मा रहेको हुन्छ, ऊ मानिसलाई खान्छे, डस्छे र दिनभरी चपाई रहन्छे ।"

बट्राण्ड रसेलका अनुसार "लाखौं अभागी महिलालाई बोक्सीको आरोपमा जलाइयो । धर्मका नाममा सबै खाले मानिसमाथि सबै प्रकारका क्रूरताको प्रयोग गरिन्थ्यो र त्यसलाई व्यवहारमा लागु गरिएको थियो ।

पश्चिम संसारमा होलियन पर्वको समयमा छानीछानी असहाय अशक्त महिलाहरूलाई बोक्सीको आरोपमा सामूहिक हत्या गरिन्थ्यो । पूर्वीय संसारमा वेदमन्त्र र बौद्ध ध्वनिको उच्चारण गरिन्थ्यो । यिनै मन्त्रहरूको प्रभावले यी क्षेत्रमा दुष्ट आत्मा, बोक्सीहरूको शक्ति प्रवेश हुन नसक्ने शास्त्रीय प्रमाण छ । भारतवर्षमा वेद, बौद्धमन्त्रहरूको वारम्वार हुने उद्घोषले त्यहाँ पुगेका बोक्सी, भूतप्रेतसमेत मुक्त हुने सत्यता सुन्न पाइन्छ । तर पछिल्लो समयमा विस्तारैविस्तारै विधर्मीहरूद्वारा मनाइने होलियन पर्वको प्रभाव भारतवर्षमा समेत पर्न गयो । पवित्र नेपालभूमिमा वेदमन्त्र र बौद्ध ध्वनिको कारण भूतप्रेत प्रवेश हुन नसके पनि विधर्मीहरूद्वारा तोडफोड गरिएका शास्त्रको कारण निर्दोष र असहाय व्यक्तिलाई बोक्सीको आरोप लगाउन शुरु भयो ।

# येशूको अदालतमा ख्रीष्टियनहरू किन श्रापित हुनेछन् ?

बाइबल बोक्ने श्रापित भइसकेका छन् । येशूलाई सुनियोजित तरिकाले क्रूशमा टाँगी हत्या गराए । उनको हत्यापछि उनकै नाममा दशांश र मुठीदानको शोषणतन्त्र फैलाए र येशूप्रति प्रेम दर्शाउँनेहरूका चिन्ह नष्ट गरेर चर्चभित्र क्रूश स्थापना गरे । हिन्दू, बुद्धिष्ट, किराँतहरूले येशूलाई आश्रय दिए ज्ञान बाँडे तर पूर्वाग्राही छन् बाइबल बोक्नेहरू । त्यसैले उनीहरू येशूको अदालतमा श्रापित हुनेछन् ।

बाइबलमा लेखिएको छः यस पुस्तकको अगमवाणीका वचन सुन्ने हरेक मानिसलाई म चेतावनी दिन्छुः यदि कसैले तिनमा थप्यो भने यस पुस्तकमा लेखिएको विपत्तिहरू परमेश्वरले त्यसमाथि थपिदिनु हुनेछ । कसैले अगमवाणीको पुस्तकका वचनबाट केही घटायो भने यस पुस्तकमा लेखिएका जीवनको वृक्ष र पवित्र सहरबाट त्यसले पाउने हिस्सा परमेश्वरले त्यसबाट खोस्नुहुनेछ । यो वचनको विरूद्ध गराएर ख्रीष्टियनहरूले बाइबलमा थुप्रै वचन तोडमोड गरेको पाइन्छ । पृथ्वीको उत्पत्तिलाई संकेत गर्ने ३-५-४००४ जनवरी बाइबलको प्रत्येक पृष्ठको अन्तिमबाट हटाइएको छ । बाइबलमा २५०० भन्दा धेरै ठाउँमा प्रयोग गरिएको एलोहिम परमेश्वरलाई परमेश्वरमात्र लेखिएको छ । बाइबलमा लेखिएको दाखमद्यलाई हटाई दाखरस लेखिएको छ ।

डा. स्वामी प्रपन्नाचार्य र डा. विकासानन्दका अनुसार आरवी र हिब्रुभाषामा लेखिएका बाइबलमा भएका थुप्रै अनुच्छेदहरू अन्य भाषामा अनुवाद गर्दा वचनहरू थपघट भइसकेको छ ।

उक्त भनाईलाई पुष्टि गर्ने नेपाल बाइबल सोसाइटीद्वारा प्रकाशित बाइबलको अग्रपेजमा दुई शब्द यसरी व्यक्त गरेको देख्न पाइन्छ । "अन्त्यमा हाल देखिएका सबै किसिमका त्रुटिहरूलाई सच्याएर अझ स्तरीय र थप विशेषतासहितको नेपाली बाइबल उपलब्ध गराउने उद्देश्य राखेर ईस्वी सम्वत् २००८ बाट शुरु भएको बाइबलको पुनः सम्पादन कार्य यस सोसाइटीले जिम्मा लिएको छ । यस लेखलाई हेर्दा बाइबलको वचन

सच्याउन बाइबलको त्रुटि केलाउन अधिकार छ भने त्यो एक व्यक्ति दाउदको मूल हो" भनी बाइबलले गवाही दिन्छ । पवित्र बाइबलको प्रकाश ५ को वचनअनुसार आफूलाई थुमा (दाउदको मूल) मान्नेहरू बाइबल सोसाइटीका सबै कमिटीहरू विधर्मीहरू हुन् । हरेकपटक यस्ता विधर्मीहरूको दुई शब्द/वचन/लेख भ्रमात्मक हुनेछ । त्यसैले उनीहरू येशूको अदालतमा श्रापित हुनेछन् ।

यसै सन्दर्भमा खोजकारको लेखमा बौद्ध लामा पेमा दोर्जेको भनाई समेट्नु उपयुक्त देखिन्छ :

"येशूलाई मार्ने को हो त बाइबल बोक्नेहरूले कि वेद, त्रिपिटक, कुरान बोक्नेहरूले ? येशूलाई मारेर येशूको नाममा दशांश र मुठीदानको धार्मिक व्यापार गर्ने को हुन् त ? यस्तो किसिमका धार्मिक व्यापार गर्ने बाइबल बोक्नेहरू कि वेद, त्रिपिटक, कुरान बोक्नेहरू ? तिनीहरूको त्यो महामानव, त्यो पवित्रजन जसलाई यातनापूर्वक क्रुस टाँगेर मारे अनि समस्त विश्वभरिका मानिसहरूलाई दशांश र मुठीदानको नाममा शोषणतन्त्र फैलाए । त्यसैले उनीहरू येशूको अदालतमा श्रापित हुनेछन् ।"

बाइबलभित्रको एउटा सत्य खीष्टियनहरूले सायद नलुकाइदिएको भए आज खीष्टीयन धर्मको सारा भवन नै फरक देखिने थियो भने हाल भएको बाइबललाई नै पूर्णता मान्ने हो भने बाइबलीय पूर्णतामाथि शंका उत्पन्न हुन्छ । येशूको १२-३० वर्षको समय १८ वर्षको अवधि भारतवर्षमा आएर इतिहास पढेको सत्य तिव्वतको हिमसगुम्बाले पुष्टि गर्दछ । (वैदिक सम्पत्ति पृ. २६३, वेदका के छ पृ. ६४) तर बाइबलभित्र यो सत्यता नहुनु चाहिँ साच्चै बाइबल पूर्णशास्त्र होइन भनी सिद्ध गर्छ । कि त येशूको वचन विपरीत यी वचन हटाइएकामा जीवनको वृक्ष र पवित्र सहरबाट उनीहरूको हिस्सा परमेश्वरद्वारा खोसिनेछ ।

पछिल्लो समयमा बाइबल सोसाइटी र पाष्टरहरू नै येशू बन्न कोशिस गरेको देखिन्छ । बाइबललाई आफूखुसी थपघट गर्न कसैको पनि अनुमति नदिएको वचन पढ्दा पढ्दै उनीहरूले येशू आफू नै भएजस्तो ठानी अगमवाणी, रहस्यको उद्घोषण, धर्मपुत्रको मुठो खोल्ने र वचनलाई तोडमोड गर्ने दुस्साहस गर्छन् । यसो गर्ने संबै बाइबल सोसाइटी र पाष्टरहरू दाउदको मूल येशूको अदालतमा श्रापित हुनेछन् भनी बाइबल स्वयंले गवाई दिएको छ ।

गरिब र असहाय नेपाली विश्वासीको लागि किनिदिएका जग्गासमेत पाष्टरहरूको नाममा पास गरेको प्रशस्त प्रमाण भेटिन्छ । नेपालका अधिकांस चर्च, बाइबल कलेज र बाल गृहहरू पाष्टर उनीहरूको सन्तानका नाममा भएको पाइन्छ । पाष्टर आवासका लागि भनेर किनिएका जग्गा समेत अरबौं अरबमा बेचबिखन गरी पाष्टरले भोगबिलास गरेका छन् । सबैभन्दा दुखद तथ्य त विश्वासीको लागि चिहान गाड्न विदेशीले किनिदिएका कयौं जग्गा पाष्टरले घर घडेरीको रूपमा बेचेका छन् । चर्चभित्र यति धेरै गुनासा र पीडाहरू बोकेर बाँचेका विश्वासीहरूको सत्यतथ्य के हो भनेर बुझ्न न त स्थानीय सरकारले चासो देखाउँछ न त केन्द्रीय सरकारले नै । यस्ता गतिविधिमा संलग्नहरू निश्चय नै परमेश्वरको अदालतमा श्रापित हुनेछन् भन्ने खोजकको ठहर छ ।

# ख्रीष्टियनहरू दशांशका व्यापारी हुन् त ?

यस विषयमा नलेख्नुहोस्, कतै लेखेको भेटियो भने न पढ्नुहोस्, सबैभन्दा ठूलो परमेश्वर विरोधी क्रियाकलाप नै यही हो । जो यो क्रियाकलापमा संलग्न हुन्छ, ऊ माफीको लायक छैन । हरेक चर्चहरूले यस्तै भनेको भेटिएपछि यस्ता पुस्तक लेखनीमा तुँवालो लाग्ने नै भए । यसको सत्यतथ्य सबैसामु पस्कन जरूरी भएकोले आज खोजकारले लेखनीलाई निरन्तरता दिएको छ ।

मानव सभ्यताको विकाससँगै थुप्रै खिस्टियन सम्प्रदाय र पन्थहरु उत्पन्न भए । यसरी खडा भएका सबै सम्प्रदायहरूले आफ्नो मण्डली साँचो र सत्य भन्छन् । अरु सम्प्रदाय झुट भन्ने गर्दछन् । सबैले विश्वास गरेको परमेश्वर पुत्र येशू एकै भए तापनि तिनीहरूले संकलन गर्ने। दशांश र भेटिकार्डको प्रयोगकर्ता फरक हुनु हो भनी थाहा पाउँछौं । विश्वासीहरूले आफू भोजन विहीन हुँदा, खाली खुट्टा हुँदा, आफ्ना छोराछोरीलाई उपचार र एकसरो कपडा किन्न नसके पनि परमेश्वरप्रति धन्यवादी हुन आफ्ना ज्यानै अर्पण गरेका छन् । प्रत्येक महिना विश्वासीहरूले दशांश भेटी, चर्च भेटी, धन्यवाद भेटी, समूह भेटी, सेवा भेटी, प्रतिज्ञा भेटी, प्रचारक भेटी, सबाथ खाना भेटी, चर्च निर्माण भेटी, चर्च भाडा भेटी, रेभ वा पास्टरभेट भेटी, प्रेमको बजार भेटी, चर्चको सामान किन्न भेटी, स्वेच्छिक भेटी, मुट्ठीदान भेटी आदि दान दिने गर्दछन् । विभिन्न शीर्षकमा चर्चभित्र भेटीकार्ड उठाइएको अवस्थामा खोजकले विश्वभरीको सयौं मण्डलीहरु तीन झुण्डमा विभाजित गर्नु सान्दर्भिक ठान्दछन् ।

### क) ईश्वरीय आस्थाका मण्डलीहरू

यस्ता मण्डलीहरूले विश्वव्यापी रूपमा निस्वार्थ आफूभन्दा कमजोर जनहरूलाई भौतिक, आर्थिक सहयोग गर्नुको साथै मार्गदर्शन गरिरहेका

हुन्छन् । उनीहरूका अनुसार येशू सम्भवतः पहिलो यहुदी व्यक्ति थिए, जसले यहुदीहरूको सिनेगागमा र त्यहाँ बेच्न राखिएका नानाथरीका सामान टिप्दै बाहिर हुत्याइदिएका थिए । पादरीहरूलाई समातीसमाती सिनेगागबाट बाहिर धपाइदिएका थिए । तिमीहरूले मेरो भगवान् बेचिदियौं तिमीहरू पादरी होइनौ, पागल हौ भनेका थिए । यस्ता महामानवको वचनबाट डराएर तिनीहरूले येशूलाई सुलीमा चढाएर आफ्नो व्यापारलाई अपशकुनबाट बचाएका थिए । यही येशूको महानतालाई आत्मसात गर्दै विश्वासमा बाँचिरहेका लाखौं मानिसहरू ईश्वरीय आस्थाका मण्डलीमा रहेका छन् । यस्ता मण्डलीमा करकापमा नगद, जिन्सीजस्ता कुनै पनि आर्थिक सहयोग उठाइँदैन । स्वेच्छाबाट दिइएका दान, चन्दाहरूमात्र संकलन गरिन्छ । उठेका रकमहरू असहाय र गरिबहरूको हितका लागि प्रयोग गरिन्छ । यी रकमहरू विभिन्न ठाउँहरूमा शान्ति स्थापनाका लागि पहल गर्न खर्च गरिन्छ । येशूको पवित्र वचनहरू शिरोपर गरेर विश्वमा शान्तिकायम गर्नुपर्छ भन्ने सोच तयार गरेको पाइन्छ । सन् १९८६ अक्टोबर २७ तारिखमा इटालीको एसिसी सहरमा अवस्थित बासिलिका अफ सेन्ट मेरी अफ एन्जल्स भन्ने गिर्जाघरमा पहिलो विश्व प्रार्थना दिवस सम्पन्न भएको थियो ।

सनातन वैदिक धर्ममा दानबाट प्राप्त रकम ब्राह्मणले आफूमात्र प्रयोग नगरी असहाय र आर्थिक विपन्न वर्ग विशेष गरी जोगी, विद्यार्थीहरूको अध्ययन, धर्मशाला, पाठशाला निर्माण, अन्तक्षेत्रको साथै अन्य दानमा खर्च गर्नुपर्ने व्यवस्था छ । अहिले पनि सनातनधर्म र अन्य धर्मका अगुवाहरूले दानबाट उठेको रकम जनहितका लागि खर्च गर्दै आएका छन् ।

### ख) मुठीदानको रूपमा आर्थिक संकलन गर्ने मण्डलीहरू

विश्वासीहरूका लागि सबैभन्दा ठूलो सतावट र आर्थिक ठगी गर्ने चर्च नै मुठीदान संकलन गर्ने चर्च हो । पास्टर राजन शर्माले एक ठाउँमा भनेका छन्, "दान दिंदा आफ्नो ढुकुटीमा निर्धक्क भएर हात हाल्नुहोस् । ढुकुटीबाट मुठीमा दानको रकम निकाल्दा दश लाखको बिटो वा एक रुपैयाको सिक्का जति आए पनि नहेरीकन दान दिनुपर्दछ । दान हेरेर घटाएमा अन्तिमको समयमा इन्साफ हुनेछ । दानको रकम सार्वजनिक गर्नु परमेश्वरको विरुद्ध उत्रनु हो ।"

त्यसपछि यो खोजकले मण्डलीको दानको रकमबारे अनुसन्धान शुरु गर्दा चर्चमा उठेको दानको रकम विश्वासीहरूको बीचमा कहिल्यै सार्वजनिक नहुने यर्थाथताको साक्षी बन्यो । दानमा दिएको रकम चेन सिस्टममार्फत् विदेश गईरहेको तथ्य सत्य विश्वासी, स्थानीय तथा केन्द्रीय सरकारलाई समेत थाहा नभएको पत्ता लाग्यो । यसमा न त कर लगाइन्छ, न त पारदर्शीरूपमा खर्च हुन्छ । नेपालबाट उठाइएका रकम नेपालमा खर्च नहुनु अर्को दुःखद् पक्ष हो ।

## ग) आर्थिक संकलन गर्ने मण्डलीहरू

अधिकांश चर्चहरूमा सोभा मानिसहरूबाट स्वर्ग, नर्क, चंगाई, ईश्वरको नाम गरेर उठाइने दशांश र भेटीकार्डको रूपमा संकलन गरिएको आर्थिक सम्पत्तिको बारेमा विश्वासीहरू अनभिज्ञ देखिएपछि यो खोजकारले आफ्नो खोजी अगाडि बढायो । नेपालका अधिकांश चर्चहरूमा दशांशका व्यापार घनीभूतरूपमा भएको भेटियो ।यस कार्यको लागि चितवन, मकवानपुर, गोरखा, काठमाडौँ, काभ्रे, नुवाकोटलगायतका थुप्रै जिल्लामा रहेका चर्चहरूमा खोजकले खोजीकार्य सम्पन्न गऱ्यो । उक्त खोजबाट यस्तो नतिजा बाहिरियो ।

नेपालमा एउटा गा.पा. को एउटा वडामा दशवटा चर्च (व्यापारी केन्द्र) छन् । एक चर्चमा सय जना सदस्य परिवार छन् । एक परिवारको मासिक आम्दानी सरदरमा दश हजारमात्र राख्दा उक्त व्यक्तिले आफ्नो आम्दानीको १० प्रतिशत (एक हजार) परमेश्वरको नाममा दान दिन्छ । यसो गर्दा १०० जना व्यक्तिको एक लाखप्रति दशांश आम्दानी एक जना पाष्टरले पाउने गर्दछ । योबाट के प्रष्ट हुन्छ भने १०० जना सदस्य भएको चर्चको पाष्टरको मासिक एक लाख आम्दानी हुन्छ । यस्तो पाष्टर वडामा १० जना छन् । त्यसो भए १० गुणा एक लाख बराबर दश लाख हुन्छ । गा.वि.स. को प्रमुख वा इलाका प्रमुखको आम्दानी दश लाख हुन्छ । यही रीतले जिल्लाको प्रमुख पाष्टरको करोडभन्दा माथि आम्दानी हुन्छ । उक्त पाष्टरले आफ्नो आम्दानीको १० प्रतिशत केन्द्रमा पठाउँछ । ७७ वटा जिल्लाबाट दशांश संकलन गर्दा केन्द्रीय पाष्टरको करोडौँ रकम हुन्छ ।

उक्त रकमको १० प्रतिशत विदेशमा रहेका संघसंस्थाको प्रमुखकहाँ पुऱ्याएको भेटियो ।

अर्कोतिर प्रत्येक हप्ता विश्रामको दिन स्वेच्छिक भेटीकार्डको रूपमा लाखौं रकम चेन सिष्टममार्फत एक देशबाट अर्को देश जाने गरेको देखियो । यतिमात्र होइन, लाखौं संख्यामा बाइबल, क्रस, कपडा, बुर्का सबै बिक्री वितरण भइरहेको पाइयो । शुरूशुरूमा आफ्नो व्यवसाय सञ्चालनका लागि चलाखीपूर्ण ढंगमा गरीब बस्तीहरूमा लत्ताकपडा, राशनपानी पैसा बाँड्ने चर्चहरूले दीर्घकालिकरूपमा फाइदा लिएको भेटियो । सर्वसाधारणमा यसलाई चर्च व्यवसाय हो भन्ने भान पर्न नदिन ईश्वरको नाम, चंगाइको नाम, भूतात्मा धपाउने नाममा साप्ताहिक बाइबलको वचन रटाउने काम निरन्तर भएको छ ।

सनातनधर्म, संस्कृति परम्परागत चाडपर्व मान्ने समुदायप्रति लक्षित गरी उनीहरूको आस्था विपरीत सनातन धर्मको कमजोरीमाथि प्रहार गर्न सक्ने मण्डलीले छोटो समयमा नै ठूलो जमात खडा गरी आर्थिक उन्नति गरेको पाइयो । शुरूका वर्षहरूमा स्वास्थ्य, शिक्षा, मानवीय मूल्य, नैतिक आचरणको पाठ परमेश्वरको नाममा सिकाउन सक्ने मण्डलीहरू अग्रस्थानमा भएको देखियो । रातारात सर्वसाधारण र अशिक्षित नेपालीबाट दशांश संकलन गर्ने पाष्टर र अगमवक्ताहरू परमेश्वरको आशिषको रूपमा छोटो समयमा चिल्ला कार र करौडौं पर्ने घरजग्गाको मालिक बनेको देख्न पाइन्छ । प्राप्त आर्थिक गतिविधिको विषयमा आवाज उठाउँदा धार्मिक सद्भाव खलल् हुने हुँदा कुनै पनि पार्टी, नेता तथा सर्वसाधारण मौन बस्नुपर्ने कानुनी प्रावधानको फाइदा लिएर चर्चले आफ्नो नेटवर्क व्यवसायलाई निरन्तरता दिएको पाइयो । आज नेपालमा खीष्टियनहरू मानव जातिको उत्पत्तिस्थल नेपालको चिनारी र पूर्वीय सभ्यता नष्ट गर्नका लागि ज्यान दिएर लागि परेका छन् । सगरमाथामा टेकेर किरातेश्वरमहादेव, बुद्ध, पशुपति, मुक्तिनाथ आदिलाई शैतानको संज्ञा दिँदै छन् । हिमालयन सभ्यता, मिथिला सभ्यता, दामोदर(ब्रम्ह कुण्ड) दमौलीको व्यासगुफा, लुम्विनी तिलौराकोट र पशुपति काठमाडौंलगायत पूर्वीय सभ्यताको खिल्ली उडाउनेहरूको बाहुल्यता चर्चभित्र भेटिएको छ, जुन नेपालको लागि भयावह अवस्था हो ।

प्रसिद्ध लेखक प्रा.डा. रामप्रसाद उपाध्यायले आफ्नो पुस्तक "विश्वको इतिहास पृ. १०८" मार्फत यस्तो तथ्य उजागर गरेका छन् । किसानले आफूले उत्पादन गरेको दशौं भाग चर्चलाई बुझाउनुपर्छ ।

हिन्दू जागरण केन्द्र नेपाल तथा भागवत् सेवा संघका अध्यक्ष रामकृष्ण उपाध्याय भन्नुहुन्छ "चिनियाँ सरकारले आफ्नो संस्कृति र अर्थतन्त्र ध्वस्त पार्न पश्चिमी खीष्टियन लागेकोमा सो विरुद्ध कदम चालिसकेको छ । अब नेपाल सरकारको ध्यान सोतर्फ नपुगे नेपाली अर्थतन्त्र खीष्टियनहरूले टाट पल्टाउँछन् ।"

प्रसिद्ध लेखकद्धय सुरेन्द्र गौतम र नवराज पनेरूले दशौं वर्षको अनुसन्धानात्मक कृति 'विज्ञानको नजरमा वेद र बाइबल' पुस्तकको पृं. ६१ मार्फत यस्तो रहस्य उजागर गरेका छन्, "इसाईले सेवाको नाममा बाइबल प्रचार गरी शुरूमा केही दिने र पछि दान भन्दै विश्वासीको कमाईको केही अंश माग्ने र धर्म परिवर्तनमा प्रयोग गर्ने गर्दछन् । वास्तवमा यो धर्म नभएर शोषण हो ।"

त्रि.वि. प्राध्यापक संघ सिनासका सभापति तथा प्रसिद्ध लेखक पेशल निरौला भन्छन् "पछिल्लो समयमा खीष्टियनहरूले धर्मान्तरका लागि विदेशबाट पठाइएको रकमभन्दा दशौं गुणा बढी रकम नेपालीबाट दशांश र मुठिदानको रूपमा संकलन गरी विदेश पठाएका छन् । यसले निकट भविष्यमा नेपाली अर्थतन्त्र टाट पल्टने सम्भावना प्रष्ट हुन्छ । खीष्टियनहरूको दशांशको रकम उठाउन बन्द भए संसारभरका धेरै चर्चहरू बन्द हुन्छन् र युरोप, अमेरिकाको समृद्धिमा पनि धक्का लाग्छ । यिनीहरूले दिएको जस्तो गरे पनि हामीबाट सर्वश्व लुटिरहेका छन् ।"

त्रिचन्द्र कलेजका प्राध्यापक तथा प्रसिद्ध लेखक गोविन्द उपाध्यायले, "दानको रकम कहाँ जान्छ ?" भन्ने शीर्षकमा आफ्नो अनुसन्धानात्मक लेख यसरी प्रस्तुत गर्दछन् । "यदि नेपालमा खीष्टियनको जनसंख्या ४० लाख मान्ने हो भने सन् २०१८ को सरदर बार्षिक आम्दानीलाई आधार मान्दा ४४,९६,३०,५६,०००।- नेपाली बजेटको करिब ८.६% रकम चर्चले पाउँछन् यसरी नेपालमा सञ्चालित विदेशी खीष्टियनधर्म प्रचारकहरूले विश्वासीबाट उठाइने १०% प्रतिशत रकम विदेश पठाउँदै जाँदा दश वर्षमा देशको १००% बजेटबाहिर जाने र देश टाट हुने सम्भावना छ ।"

खीष्टियनहरूको धर्मग्रन्थ बाइबलले धर्मपरिवर्तन गराउने विषयमा स्पष्ट बोलेको छैन । खीष्टियन अगुवाहरू "सु-समाचार विश्वभरि फैलाउनुपर्छ" भन्ने मान्यतासाथ अगाडि बढिरहेका छन् । विश्वभरि छरिएर रहेका विभिन्न सम्प्रदायका खीष्टियनहरू गैर-खीष्टियनहरूलाई "इसाई बनाउन सके ठूलो पुण्य कमाएको" ठान्छन् ।

मैले भन्नुपर्दैन, नेपालमा पनि खीष्टियन अगुवाहरूको प्रमुख र पहिलो प्राथमिकतामा नेपालका गैर-खीष्टियन समुदायलाई "खीष्टियन बनाउनु"रहेको छ । वि.सं. २०४७ पछिको राजनैतिक परिवर्तनपछि धर्मपरिवर्तनका लागि नेपाल निकै उर्वर रहेको "जसुवा-प्रोजेक्ट"ले देखाएकैछ ।

खीष्टियन पन्थ स्वीकार गरेपछि प्रत्येक इसाईले आफ्नो कमाईको १०% चर्चलाई अनिवार्य रूपमा भेट गर्नुपर्ने व्यवस्था बाइबलले गरेको छ । नयाँ नयाँ खीष्टियनहरूले यो मर्यादा उल्लंघन गरेको निकै कम पाइन्छ । सन् २०१८ मा प्रत्येक नेपालीको सरदार आम्दानी वार्षिक ११२४०७.६८ रहेको नेपाल राष्ट्र बैकको तथ्याङ्कले देखाएको छ । यदि नेपालमा खीष्टियनहरूको जनसंख्या ४० लाखको हाराहारी मान्ने हो भने पनि उनीहरू सबैको वार्षिक आय ४,४९,६३,०७,२०,०००।- रहेको देखिन्छ भने यसको १०% रु ४४,९६,३०,५६,०००।- वार्षिक हुन्छ, यसरी नेपाली चर्चहरूले नेपाली बजेटको करिब ८.६% रकम पाउँछन्, यति धेरै नेपालको कुनै बजेटमा एकसाथ विनियोजित हुँदैन ।

उपर्युक्त रकममा विदेशबाट खीष्टियनधर्मको विस्तारको लागि प्राप्त हुने रकम जोडिएको छैन । केही वर्षअघिसम्म धेरै भारतीय धार्मिक संस्थाहरूले नेपाली भक्तहरूबाट रकम सङ्कलन गरेर भारत लैजाने गरे । खीष्टियन धर्मगुरुहरूले १०% रकममध्ये ठूलै रकम विदेश लैजाने गरेको सहजमै अनुमान गर्न सकिन्छ । इसाईभक्तहरूबाट संकलित रकमको १०% नेपालमा खर्च गर्ने हो भने वार्षिक २८०० कक्षा, कोठा सतहत्तर ७७ जिल्लामै स्वास्थ्य चौकी तथा अन्य धेरै आधारभूत आवश्यकताहरू विस्तार हुनसक्छ । यसरी नेपालमा संचालित विदेशी खीष्टियनधर्मका प्रचारकहरू नेपालको कल्याण गर्न होइन आफ्नै कल्याण गर्न आएका हुन् भनेर बुझ्न गाह्रो हुँदैन । उपयुक्त तथ्याङ्क -मेरो व्यक्तिगत खोज भएतापनि मिथ्याङ्क

हुनै सक्दैन । जसरी नेपालमा खीष्टियनको संख्या बढ्नेछ त्यसरी नै १०% रकम पनि बढ्नेछ । एकदिन सम्पूर्ण अर्थतन्त्रको १०% रकम देशबाट बाहिर जानेछ । यतिमात्र होइन भेटीकार्ड, मुठीदान र दशांशभन्दा बढी दिएको दानको कूल रकमको दशांश देशबाहिर जानेछ । यति हुँदाहुँदै पनि आफ्नो आधारशील (स्थायी लुटको भाँडो) बनाउन हालका दिनहरूमा पश्चिम र कोरियनहरूले नेपालमा ठूलै लगानी गरेका छन् । समाज कल्याण परिषद्बाट सम्बन्धन प्राप्त गरेका २,३४५ इसाई गैह्र सरकारी संस्थाहरूले वार्षिक अरबौं रूपैयाँ स्वीकृति लिन्छन् । नेपालमा क्रियाशील कारितासजस्ता बहुराष्ट्रिय संस्थाहरूको खर्च यसमा जोडिएको छैन । कारितास, युनाइटेड मिसन टू नेपाल, प्लान नेपाल, लुथरन नेपाल, मर्सी मिसन, वर्डभिजन आदि संस्थाहरूले नेपाल सरकारलाई नटेर्ने समाचार त धेरैपटक बाहिरिएकै हुन् ।

असल धर्मप्रचारका नाममा आफ्नो ढुकुटी भर्ने उद्देश्यले विदेशी मिसनरीहरू सञ्चालित छन् भन्ने कोणबाट हेर्नु उपयुक्त हुन्छ कि भन्ने मेरो मान्यता र सुझाव रहेको छ । नेपाल र नेपालीलाई माया गर्ने नेपाली इसाई समुदाय र अन्य विज्ञहरूले समेत यो पाटोबाट हेर्ने काम गर्नुपर्छ । नेपालीले खीष्टियन धर्म स्वीकार गरे तापनि निजहरूको जरोकिलो नेपाली धर्म, संस्कृति तथा परम्परामै छ भन्ने तथ्य विर्सन हुन्न ।

विभिन्न लेख तथा अनुसन्धानकर्ताका वचन कति सत्य छन् । के साँचै बाइबलले गरीब, निमुखा विश्वासीको रगत र पसिनाबाट कमाइएको आम्दानीको दशांश पाष्टर (चर्च) लाई बुझाउन अनुमति दिन्छ त ? अब हेरौं बाइबलका वचनः हिता ३:९-१० आफ्नो धन-सम्पत्ति र आफ्ना सबै उब्जनीको अगौटे फलले परमप्रभूको आदर गर, तब तेरा ढुकुटीहरू पोखुञ्जेल भरिनेछन् तर तेरा भाँडाहरू नयाँ मद्यले चुलिएर पोखिनेछन् ।

कदोर्लाओमेर र तिनका मित्र राजाहरूलाई जितेर फर्कदा शावेको उपत्यका अर्थात् राजाको उपत्यकामा सदोमका राजा तिनलाई भेट गर्न आए । अनि शालेमका राजा मल्कीसेदेक रोटी र दाखमद्य लिएर अब्राहमकहाँ आए । उनी सर्वोच्च परमेश्वरका पूजारी थिए । उनले अब्रामलाई यसो भनेर आशीर्वाद दिए, "स्वर्ग र पृथ्वी सृष्टि गर्नुहुने सर्वोच्च परमेश्वरबाट अब्राहमलाई आशिष मिलोस् । सर्वोच्च परमेश्वर धन्यका होऊन्, जसले

तिम्रा शत्रुहरूलाई तिम्रा हातमा सुम्पिदिनुभयो ।"अनि अब्राहमले उनलाई सबै कुराको दशांश दिए । (पवित्र वाइबल, उत १४:१७-२०) ।

"तिमीहरूका पिता-पुर्खाको समयदेखि नै तिमींहरू मेरा उनीहरूदेखि तर्केर गएका छौं र ती तिमीहरूले पालन गरेका छैनौं । मतिर फर्क र म तिमीहरूतिर फर्कनेछु, सर्वशक्तिमान् परमप्रभू भन्नुहुन्छ । तर तिमीहरू त सोध्छौं "हामी कसरी फर्कौं ?"

"के कुनै मानिसले परमेश्वरलाई लुट्छ र ?" तापनि तिमीहरू मलाई लुट्दछौं ।

तर तिमीहरू सोध्छौं, "कसरी हामीले तपाईंलाई लुट्यौं र ?"

"दशांशको भेटीमा । सराप परेर तिमीहरू श्रापित भयो, किनकि तिमीहरूले मलाई लुटिरहेछौं तिमीहरू सम्पूर्ण जातिले ।" (पवित्र वाइबल, मला ३:७-९,) ।

"सम्पूर्ण दशांश ढुकुटीमा ल्याओ, ताकि मेरो घरमा भोजन रहोस् । यसमा मलाई जाँचेर हेर," सर्वशक्तिमान परमप्रभू भन्नुहुन्छ ।

"म स्वर्गका ढोकाहरू उघारेर पर्याप्त ठाउँ पनि नहुनेसम्मका आशिष तिमीहरूमाथि बर्साउँछु वा बर्साउँदिन,"सर्वशक्तिमान परमप्रभू भन्नुहुन्छ ।

"म तिमीहरूका अन्न-बाली स्वाहा पार्ने रोग निको पारिदिनेछु र तिमीहरूका वारीमा भएका दाखका बोटका फलहरू झर्ने छैनन्,"सर्वशक्तिमान् परमप्रभू भन्नुहुन्छ ।

"तब सारा जाति-जातिहरूले तिमीहरूलाई धन्य भन्नेछन्, किनकि तिमीहरूको देश एक अति खुशी देश हुनेछ,"सर्वशक्तिमान् परमप्रभू भन्नुहुन्छ । (पवित्र वाइबल, मला ३:१०-१२) ।

तिनीहरूले उहाँलाई भने कसरको । तब उहाँले तिनीहरूलाई भन्नुभयो, "यसकारण जो बसेको हुन् ती कसैलाई देऔं र जे परमेश्वरका हुन् ती परमेश्वरलाई देऔं, यहाँ परमेश्वरको कुरा के हो बाइबलद्वारा हेरौं ।" (पवित्र वाइबल, मत्ति २२:२१) ।

"रूखका फल वा जमिनको बीउको होस् भूमिका उब्जनीको दशांश परमप्रभूकै हो र ती परमप्रभूको निम्ति पवित्र हुन् ।"(पवित्र वाइबल, लेवी २७:३०) ।

"धिक्कार तिमीहरूलाई शास्त्री र फरिसी हो, पाखण्डीहरू १ किनकि तिमीहरू पुदिना, सुप र जिराको दशांश दिन्छौं तर व्यवस्थाका गहकिला विषयहरू अर्थात् न्याय, दया र विश्वासको अवहेलना गरेका छौं । तिमीहरूले दशांश दिने काम गर्नुपर्ने थियो अनि ती गहकिला विषयको अवहेलना नगर्नुपर्ने थियो । (पवित्र वाइबल, मत्ती २३:२३) ।

"आफ्नो निम्ति पृथ्वीमा धन-सम्पत्ति नथुपार, कीरा र खियाले ती नष्ट पार्छन् र जहाँ चोरहरूले घर फोरेर ती चोर्छन् । तर आफ्नो निम्ति स्वर्गमा धन-सम्पत्ति थुपार, जहाँ कीराले वा खियाले नष्ट पार्दैन र चोरले पनि चोर्दैन । किनकि जहाँ तिम्रो धन हुन्छ, त्यहीँ तिम्रो मन पनि हुन्छ ।" (पवित्र वाइबल, मत्ती ६:१९-२१)

तर पछिल्लो समयमा विभिन्न देशमा खुलेका गैह्रसरकारी संस्थाले मानवजातिको हितका नाममा सोझासाझा मानिसलाई स्वर्ग, नर्क, चंगाई र ईश्वरको नाममा दशांश र भेटीकार्ड उठाइन्छ । यसरी उठाइने दशांश र भेटीकार्ड यस्ता ग्रैह्रसरकारी संस्था सञ्चालन संवर्द्धनमा ठूलो सहयोग पुगेको छ । यसरी उठाइएका रकमले येशूको वास्तविक दर्शन र मर्मलाई जोगाउन नसकेता परमेश्वर पुत्र येशूको अन्धभक्तहरू तयार गर्न ठूलो सहयोग पुऱ्याएको छ ।

गला ६:६-८ "वचनको शिक्षा पाउने हरेकले आफ्ना सबै असल थोकहरू वचन सिकाउनेसँग बाँडचुँड गर्नुपर्छ । धोखामा नपर, परमेश्वरको ठट्टा हुँदैन किनभने मानिसले जे रोप्छ त्यसैको कटनी पनि गर्नेछ । जसले आफ्नो पापमय स्वभावको निम्ति रोप्तछ, त्यसले आफ्नो पापमय स्वभावबाट नै सर्वनाशको कटनी गर्नेछ । तर जसले आत्माको निम्ति रोप्दछ, त्यसले आत्मांबाट नै अनन्त जीवनको कटनी गर्नेछ ।

त्यस्तै बाइबलले दशांश नदिनेहरूलाई यस्तो चेतावनी दिएको छ भनी बाइबलका वचन देखाइन्छ,"जे रोप्छ त्यसैको कटनी पनि गर्नेछ भन्नुभएको छ । शरीरको निम्ति रोप्नेले सर्वनाशको कटनी गर्नेछ र आत्माको निम्ति रोप्नेले अनन्त जीवनको कटनी गर्नेछ भनिएको छ । " खीष्टियनहरूको धरातल झुटमा टिकेको छ, यिनीहरू केवल नाफाको व्यापार गर्छन् । ग्रीसको अर्थतन्त्र टाट पल्टियो ! सम्पन्न जनताले समेत

एक छाक खान नपाउने अवस्था आयो तर त्यहाँका चर्च र अगुवाहरूलाई यसले असर पारेन । झन् झन् चर्चको कमाई बढ्दै गयो ।

क्याथोलिकहरूको बाहुल्यता भएको दक्षिणी अमेरिकी राष्ट्र भेनेजुएला अहिले चरम आर्थिक संकटबाट गुज्रिएको छ । एकछाक खान हजारौं रुपैयाँ खर्चिनुपरेको छ । त्यहाँका जनता छिमेकी कोलम्बियातर्फ पलायन हुन बाध्य भएका छन् तर त्यहाँको चर्चलाई अलिकति पनि असर पारेको छैन । कथित खीष्टियन एजेन्ट चर्चको फादरको कमाई झन् माथि जाँदैछ । धर्मको व्यापारभन्दा हानिरहित व्यापार संसारमा केही छैन । अनिकाल लागोस् कि प्राकृतिक प्रकोप आओस्, कमाईमा कुनै कमी छैन । गल्ती उनीहरूको होइन, उनीहरू त व्यापारी भए छलछम गरेर भए पनि आफ्नो व्यापार बढाउँछन् । गल्ती आमजनताको हो । कर्ममा विश्वास गर्न नसक्नेहरू, मरेर स्वर्ग जाने लालचमा वर्तमानलाई नर्क बनाईरहेका छन् । बबुराहरूलाई के थाहा रगत, पसिना बगाएर जोगाएको रकम दशांशको नाममा, भेटीको नाममा ती धूर्त पादरी- व्यापारीहरूलाई लुटाउँदैछन् । यो क्रम तबसम्म रोकिँदैन जबसम्म आमजनमानसमा चेतनाले ईश्वरत्व र जीवप्रतिको प्रेमविनाको दानले मुक्तिको हवला दिए पनि त्यो सम्भावना छैन भन्ने बुझ्दैन । मानिस जतातत‌ै भौतारिए पनि अन्तमा चाहिने अपरिहार्य साथी परमात्माको दर्शन नै हो । जुन दर्शनलाई आत्मसात गरेका एक व्यक्तिले यो संसारमा कसैलाई ठूलो सानो नदेखेर सबैलाई समभावले हेर्छन् । उसको एकमात्र उद्देश्य मानव कल्याण र असत्यबाट सत्यतर्फ लैजानु हुनेछ ।

# धर्मान्तर गर्ने तरिका

सम्पन्नदेखि गरिब मुलुकसम्म धर्मान्तर भइरहेको छ । दुःख, कष्ट, रोग, व्याधी र वेदनाले आर्त बनेका मानिसहरू प्रशस्त संख्यामा रहेका हुन्छन् । भौतिक साधन र उपायहरूले मात्र उनीहरू सबैका दुःखको निवारण हुँदैन । दुःखको निवारण गर्नको लागि धार्मिक व्यक्ति वा गुरूको शरणमा पुग्छन् अन्ततः तिनै धर्मगुरूमार्फत धर्मान्तरण गराइन्छ ।

वि.सं. २०७१ मा चितवनजिल्लाको भोकाहा क्षेत्रमा रहेको सच्चाई भजन मण्डलीको अगुवाहरूको विशेष बैठकमा देशभरिबाट आएका १३५ जना अगुवाहरू भेला भएका थिए । उनीहरूलाई वि. सं. २०७२ सालमा हुने चंगाई कार्यक्रममका लागि विरामीको अभिनय गर्ने जिम्मा दिइयो । सोही भेलाले चंगाईको तिथि, मिति तय गर्नुको साथै उक्त चंगाई कार्यक्रमलाई सफल बनाउन विभिन्न समिति र उपसमितिसमेत गठन गरेका थिए । केही व्यक्ति वि. सं. २०६९ को भेलादेखि नै विरामीको अभिनय गर्न लगाइएको रहेछ । उनीहरूले घरपरिवारलाई समेत धोका दिई विरामीको अभिनय गर्छन् । घरपरिवारले उनीहरूको उपचारको लागि नजिकको हस्पिटल, राजधानी तथा देशबाहिरसमेत हैसियत अनुसार उपचार गरे पनि रोग २० को १९ नभएको अभिनय गरिरहेका रहेछन् । चंगाईको समयको नजिकै आउँदा विरामीलाई भेट्न खटाईएका प्रतिनिधिहरूले कथित विरामीको घरमा पुगी परिवारसँग रोग निको कार्यक्रम तय भएको र पाष्टर आउने बताएका रहेछन् । कथित विरामी आफू मर्न परे पनि मर्ने तर अर्को धर्ममा नजाने स्वाङ्ग अथवा घरायसी वातावरण हेरी शब्द चयन गरेको बताए । अन्त्यमा कथित विरामीले आफूलाई घर, परिवारले जबरजस्ती चंगाई समारोहमा लागिएको र सयौं मानिसहरूको बीचमा रोग निको भएको अभिनय गर्न सकेको दाबी गरे । यो घटनाले परिवार र आफन्त छरछिमेकलाई समेत धर्मान्तरण गर्न सकारत्मक प्रभाव परेको सोही भेलाका पाष्टर पुरन लामाले बताए ।

सोही भेलालाई संबोधन गर्दै पाष्टर राजन शर्माले साँच्चै विरामी भएकाहरूलाई आराधना वा पवित्रस्थलमा लगेर प्रार्थना गराइएको, शास्त्रका वचनहरू देखाइएको र विरामी भएका भनिएकाहरूका गवाही सुनाउँदै उनीहरूको आत्मबल बढी रोग निको भएको समेत दाबी गरे ।

वि.सं. २०५२ सालपश्चात् खीष्टीनिटीसँग सम्बन्धित NGO र INGO द्वारा स्थानीय मौलिक धर्मलाई नष्ट पारेर खीष्टीनिटी फैलाउनको निम्ति डा. बाबुराम भट्टराईमार्फत जातीय मुक्ति मोर्चाको व्यानर र तुल झुण्ड्याइयो । खीष्टीनिटी फैलाउनको निम्ति नश्लवादको रणनीति नै निर्माण भयो । जसअनुसार किराती क्षेत्री (जनजातिहरू) को बीचमा ब्राह्मणहरूको घोर विरोध गर्ने, हिन्दूशास्त्रमा बताइएका कथा, उखान, दृष्टान्तको सामान्य र उल्टो अर्थ लगाई धर्मको उछितो गर्न सिकाइयो । परिणामस्वरूप किरातीहरूले खस क्षेत्री, बाहुन देख्नेवित्तिकै कन्सुरीको रौं तातेर आउने नश्लवादी नै हुने स्थिति सृजना भयो । यहाँसम्म कि किराती क्षेत्रीहरूलाई मंगोलियन बनाई खस क्षेत्री बाहुनहरूलाई मुहार र रौं को आधारमा लडाई चलाउने योजना बाहिर आउन थाल्यो । भारतीय नागरिक पास्टर डा. गोपाल गुरूङको आवरणमा बुद्धलाल मेचे र विरलालमार्फत अहिन्दू मूलबासीको नारा अगाडि आउन थाल्यो । त्यस्तै डा. बाबुराम भट्टराई, लोकमणि ढकाल, साईमन पाण्डे, टंक सुवेदी, मुकुन्द शर्माजस्ता बाहुनका आवरणमा खीष्टीयनमार्फत हिन्दू देवीदेवता देख्नेवित्तिकै घृणा जागेर आउने अवस्था सृजना गर्न थालियो । पछिल्लो समयमा राजु सुन्दास, रामशरण नेपाली (साईमन पिटर), डा. मित्र परियारजस्ता इसाईहरूलाई परिचालन गरी जातीय मुद्दा उठाइयो ।

खीष्टीयन मेशिनरीहरूको योजनामा हिन्दूलाई विभाजन गर्न तमाङ्ग मगरलाई बुद्धिष्ट, गुरूङ्ग - शेर्पालाई प्रकृति पूजक, राई-लिम्बूलाई किराँत भनेर खण्डखण्डमा विभाजन गरी इसाईकरण गर्न सजिलो बनाइयो । पछिल्लो समयमा सत्ताको दुरूपयोग गर्दै खस बाहुन, क्षेत्रीलाई आर्य र खसमा विभाजन गरियो । आर्यहरूलाई हिन्दू र खसहरूलाई मष्टोपूजक भनी विभाजन गर्न खीष्टीयन संस्थाहरू लागि परेका छन् । समयमा नै होसियारी हुन नसके आगामी जनगणनामा यो विभाजनसहित तथ्यांक बाहिरिन सक्ने प्रबल सम्भावना छ ।

किरातीकुलका क्षेत्रीहरूले मान्ने गरेका साङ्गे/तथागत/बुद्ध पनि क्षेत्री हो गुरुरिम्पोछे (पद्मसम्भव) धोतीधारी बाहुन हो, ल्हाछेन्पो, पारुहाङ् पनि त्यही धतुरे शिवजी हो भनी भ्रम फैलाउन थालिन्छ । यसै कपोलकल्पित सुनाएर किराँतकुलका मानिसहरूको मनमा अन्तरद्वन्द्व मच्चाई दिन्छन् । त्यसपछि विधर्मीहरूले लामावाद र लामाहरूलाई ब्राह्मणवादी प्रति सराप्न सिकाइयो । बुद्धको आवरणमा खीष्टियनहरूले बौद्ध संस्कारमा भएका एकै पद्धति, उही शब्द, विरुद्ध बोल्न लगाए । अब किरातीहरूले लामा र ब्राह्मणलाई एउटै देख्ने परिवेश सृजना भयो । यसरी बौद्धधर्म, किरातधर्म, हिन्दूधर्म विरुद्ध इसाईहरूको प्रहार निरन्तर हुन थाल्यो । मुन्धुममा जुन ओत छ नि त्यो ओम् हो, त्यहाँ भनेको प्रलय कथा बाहुनहरूको मनु कथा हो । सुम्निमा पारुहाङ यही धतुरे शिव र पार्वती हो भनी एकपछि अर्को प्रहार हुन थाल्यो । यही धार्मिक प्रवृत्तिका बीच इसाईहरूले बाइबल बोकेर गाउँमा पस्न थाल्छन् । नेपाली समाजमा आपसी द्वन्द्व जन्माएपछि लामा र ब्राह्मणको कुनै गन्ध नमिसिएको बाइबल देखाएर धर्मान्तर गर्न सफल भएका छन् ।

खोजकले नेपालको थुप्रै दुर्गम क्षेत्रका चर्चहरूमा भ्रमण गरेर त्यहाँका विश्वासीहरूसित धर्मान्तरण गर्नुको कारण सोधेर रहस्य पत्ता लगाएँ । उनीहरूको भोक र गरिबीको फाइदा उठाएर विदेश पठाईदिने र रोजगारी तालिम उपलब्ध गराईदिने नाममा धर्मान्तरण गरिएको भेटियो । जब उनीहरूले धर्मान्तरण गरे तब व्यक्तिगत खुबी र क्षमताको आधारमा स्वदेशी तथा विदेशी एजेन्टमार्फत उनीहरूले विदेश पठाइदिएका तथ्य बाहिरियो । यसरी बाहिर पठाउँदा लाग्ने लगानी ईश्वरीय आशिष भएको भन्दै साँवा, व्याज दुवै पाष्टरहरूले उठाउँछन् ! साँवा ब्याज तिरिसकेपछि सोझा विश्वासीहरूले आफू परमेश्वरको अगमवक्ता पाष्टरद्वारा विदेश आई पैसा कमाउन सफल भएको ठानी विदेशमा कमाएको पैसाको दशांशको हिस्सासमेत धर्मान्तरण गर्ने पाष्टरहरूलाई पठाइरहेका भेटियो । यसरी जीवनभरि ईश्वरको नाममा दशांशको हिस्सा थाहा नपाई - नपाई पाष्टरहरूद्वारा लुटिएको देख्दा खोजकलाई असहय पीडा भयो ।

वि.सं. २०२७ तिर मकवानपुरजिल्लाको तात्कालिक काकडा गा.वि.स. का उपाध्यक्ष भविकन प्रजाकी जेठी छोरीलाई रोग लाग्यो । उनले छोरीको उपाचारका लागि धेरै उपाय अपनाए तर निको भएन । गाउँलेहरूले उनको घरमा क्षत पस्यो भनी आउनजान बन्द गरिदिए । त्यही समयमा न्यूजिल्याण्डका रस्कोलिन नामका क्रिश्चियन उनको गाउँमा चेपाङभाषा सिक्न भन्दै आए । उनले भविकनकी छोरीको उपचारका लागि केही आर्थिक सहयोग गरे । आफूले बोकेर ल्याएको औषधि खान दिए । उनकी छोरी ठीक भइन् ।

रस्कोलिनले येशू भगवान्को प्रार्थना गरेको कारण उनकी छोरी निको भएकी हुन् भनेर येशू भगवान्को प्रर्थाना गर्न सिकाए । वि.सं. २०६५ को तथ्यकथामा यो रिपोर्ट प्रकाशित हुँदासम्म भविकन पाष्टर बनिसकेका थिए र गाउँलेमाझ इसाई पन्थ प्रचारको काम गरिरहेका थिए ।

वि.सं. २०४० सालतिर रूकुमको टक्सेरा गाउँका मानिसहरूलाई जुका रोगले सतायो । कतिपयको मृत्यु पनि भयो । तात्कालिक शाही सरकारले टक्सेरासम्म औषधिमूलो पुऱ्याउन सकेन । टक्सेरामा जुका रोगको महामारी फैलिएको खबर थाहा पाउनेवित्तिकै काठमाडौँमा रहेको एउटा इसाई मिसनरीको टोली औषधि बोकेर हेलिकप्टरमार्फत टक्सेरा पुग्यो । गाउँभरि उनीहरूले येशू भगवान्को प्रसाद भन्दै जुकाको औषधि बाँडे । औषधि खाएर गाउँलेहरूको रोग निको भयो । त्यसपछि मिसनरीहरूले टक्सेराबासीलाई तिमीहरू येशू भगवान्को प्रसाद खाएर निको भएका हौँ भन्दै भ्रममा पारेर धर्मान्तरण गराए ।

संखुवासभाजिल्लाको तात्कालिक चेपुवा गा.वि.स. मा विदेशीहरूलाई प्रवेश निषेध थियो । त्यस्तो प्रवेश निषेध रहेको ठाउँमा समेत उनीहरूले धर्मान्तरण गराए । त्यहाँ पनि मिसनरीहरूले जुकाको औषधि, झाडावान्ताको औषधि तथा केही रकम बाँडेका थिए । मिसनरीको प्रभावमा आएर यसरी इसाई बनेका स्थानीय बासिन्दाहरूले गुम्बा भत्काएर चर्च बनाउन थाले । गाउँलेहरूले भटाभट गुम्बा भत्काउन थालेपछि स्थानीय प्रशासनले वि.सं. २०४० साल जेठको महिनामा सो कार्य गर्नेहरूलाई कारबाही गर्नुपरेको थियो ।

विसं. २०५२ सालमा नवलपरासीजिल्लाको कावासोतीमा एक जना नव इसाईले चर्च बनाउनुको लागि जग्गा दान गरेको रहेछ । सो जग्गामा इसाईहरूले प्रशासनको अनुमति नलिई चर्चको भवन ठड्याउन खोज्दा स्थानीय प्रशासनले हस्तक्षेप गर्नुपरेको थियो ।

जनयुद्धकालीन समयको फाइदा उठाउँदै रोल्पामा त्यतिखेर धमाधम चर्च खुल्दै गएको समाचार नागरिकले दैनिकले छापेको थियो । सो समयमा जिल्लामा ५ दर्जनभन्दा बढी चर्च खुलिसकेका थिए । मिसनरीहरूले स्थानीयलाई चर्चमा गएर प्रार्थना गरे सबै रोग निको हुन्छ भन्दै भ्रम छरेका थिए । गाउँलेले रोग निको हुने आशामा चर्च जान थालेका थिए । स्थानीयका अनुसार, शान्ति प्रक्रिया सुरू भएपछि रोल्पामा धर्मान्तरणले तीव्रता पाउनको साथै विदेशीहरूले आएर गाउँलेलाई प्रवचन दिने गरेका थिए । यसका लागि विदेशीहरूले आफूसँगै एक जना दोभाषे बोकेर रोल्पा पुग्ने गर्दथे ।

नेपाल र इन्डियाका थुप्रै अगुवा भेलालाई संबोधन गर्ने इसाई प्रशिक्षक एवं लेखक पाष्टर चन्द्र प्रकाशले "खीष्टीयनहरूको सुसमाचार प्रचार गर्ने हेतुले पुराण, त्रिपिटकजस्ता धार्मिक ग्रन्थहरू खीष्टीयनहरूले आफ्नो अनुकूलतामा संशोधन गरी प्रकाशित गरिसकेको र यस कार्यका लागि प्रत्यक्ष एवं अप्रत्यक्ष रूपमा सहयोग गर्न नेपाल र इन्डियाका खीष्टीयन छात्रा संगठनलाई निर्देशन दिइएको र सोही बमोजिम समिति तथा उपसमिति तयार गरेको जानकारी दिए ।" उक्त संशोधित ग्रन्थ हिन्दूहरूको बीचमा लगी आफू अनुकूल व्याख्या गर्दा धेरै गैह्र खीष्टीयनहरूलाई खीष्टीयन बनाउन सक्ने हुँदा उक्त संशोधित ग्रन्थ सबै अगुवाहरूलाई पढ्न र धर्म प्रचारका लागि लिएर हिड्न समेत आह्वान गरेका थिए ।

खीष्टीयनहरूको पहलमा आदिवासी, जनजाति, दलित, मंगोल आदि संघहरू खोल्ने कार्यमा प्रोत्साहन एवं आर्थिक सहयोग निरन्तर भइरहेको बताए । यस्ता संगठन खोलेर सनातन हिन्दू धर्मलाई खण्ड-खण्ड पारी कमजोर बनाएर धर्मान्तरण गर्न सकिन्छ । यस्ता सङ्गठनहरूमार्फत बाहुन-क्षेत्रीलाई हिन्दू, तामाङ्-शेर्पालाई बुद्धिष्ट, गुरूङ-मगरलाई प्राकृतिक पूजक, राई-लिम्बूलाई किरातधर्मावलम्वी भनी विभाजन गर्न सजिलो भएको

छ । यो रणनीतिले उनीहरूबीच फुट आउने हुँदा खीष्टीयनधर्म प्रचार गर्न सहज हुन्छ । यस्ता क्रियाकलाप सफल भएमा जनजाति, आदिवासीहरू आफ्नो शास्त्र नपढी सनातनधर्म विरोधी बन्ने अवस्था सिर्जना हुन्छ ।

सनातनबौद्धधर्म र हिन्दूधर्मको ब्रिज (सेतु) को रूपमा रहेको बोनधर्म समाप्त गर्न खीष्टीयनहरूले विभिन्न कदम अगाडि बढाएका छन् । हिमवत्क्षेत्रको कैलाश पर्वत केन्द्रविन्दु बनेको शामनिजमको अप्रभंश शैवजमको तान्त्रिक मत बोन तिब्बतमा तोन्पा सेराप वोन जुन सनातन धर्मको मेरूदण्ड हो । यही मेरूदण्डलाई तान्त्रिक गुरु पद्मसम्भवले इतिहासमा जोडेका बोनधर्म संस्कृतिविरूद्धको प्रहार निरन्तर हुन थालेको छ । यस्ता कार्यहरूको कारण बोन तन्त्रयानलाई रूढीवादी भन्दै रोक लगाएर आफ्नो सम्प्रदायमा प्रवेश गराएर दशांश संकलन गर्ने गरेको पाइन्छ । यस्ता बोनधर्म विरोधी कार्यअन्तर्गत बौद्ध संस्कार र बोन तन्त्रयानलाई रूढीवादी परम्परा भनी पाठ्यक्रम, पुस्तक, लेखरचना प्रकाशित गर्ने कार्यहरू पर्दछन् । बौद्ध र हिन्दूमा फाटो हाल्ने, जातीय राज्य माग्ने, सङ्घात्मकता बनाउने हो । लिङ्ग, भूगोल, भाषा आदि अस्त्र प्रयोग गरी सम्भव भए जति फुटाउने उपाय अबलम्वन गरिएको छ । राष्ट्रिय पोशाक, भाषा र झन्डासमेतमा विद्रोह गराउन राजनीतिक दल र तराईवादीलाई उक्साइएको छ । देश छिन्नभिन्न बनाएर वैदिक धर्म, वैदिक राष्ट्र प्रमुख, वैदिक संस्कारको एकमात्र विश्वकेन्द्रका रूपमा रहेको नेपाललाई भत्काउनु उनीहरूको प्रमुख उद्देश्य देखिन्छ ।

२०७८ को जनगणनामा हिन्दूहरूको संख्या घटाउन २०७७ साल चैत्र २९ गते किप्टो इसाई मिशनलाई अगाडि बढाउन विश्व हिन्दू महासंघको कार्यालय तोडफोड गरिएको छ । विभिन्न गैह्र सरकारी इसाई संस्थाले रोजगारी र विदेश लैजाने प्रलोभन देखाई इसाई बनेदेखि विभिन्न युरोपियन देशहरूमा रोजगारका लागि लगिदिने वचन दिन्छन् । यसबाट केही महत्वाकांक्षी युवायुवतीहरू इसाई बन्ने गर्दछन् । निःशुल्कमा पढाइ दिने प्रलोभन देखाई इसाई बनेपछि विदेशस्थित राम्रा युनिभरर्सिटीमा निःशुल्कमा पढ्न पाइन्छ भनेर धेरै व्यक्ति इसाई बन्ने गर्दछन् ।

खीष्टियनहरूले राजनीतिक दल र भूमिगत विद्रोही समूहको प्रयोग गरी नेपालमा संस्कृतभाषा तथा तिब्वतीयनभाषा (महायानी ज्ञान) पठनपाठनमा रोक लगाउने कार्य पटकपटक दोहोऱ्याएका छन् । यस्ता कदममा दार्जलिङका खीष्टियन गल्फ तथा पश्चिमी देशका माफियाहरूलाई साथ लिएर राजनीतिक आवरणका एजेन्ट र कथित बुद्धिजीवीद्वारा नै विद्यालयस्तरमा संस्कृत पठन, पाठनलाई रोक लगाइन्छ । अर्कोतिर तिब्तीयनभाषा अध्ययनरत लामाहरूलाई माहायानी ज्ञान र प्रचार कठिन वातावरण सिर्जना गराइन्छ । माहायानी धार्मिक ग्रन्थहरूलाई नेपालीमा अनुवाद गर्न रोक लगाउनेसम्मका कार्य भएका छन् । भिक्षु तथा लामाहरूलाई शास्त्रीय कर्मकाण्ड गर्न निरूत्साहित गर्ने जस्ता कार्यहरू मण्डली स्थापनाको रणनीतिअन्तर्गत पर्दछ ।

हिन्दू र बुद्धिष्टको आवरणमा रामबहादुर उर्फ, पाल्देन दोर्जे र किरातीमा गड एन्जेलको नाउँमा नक्कली बाबा र लामाहरूतयार गरिन्छ । यसरी तयार गएिका ढोंगी बाबाहरू र लामाहरूको कारण समाजमा वितण्ड मच्चिने गर्दछ । बोक्सीको नाममा दुःख पाएका व्यक्ति गरीब, वृद्धवृद्धा, विधवा नारीलाई कुटपिट गर्ने, तातो फलामले शरीरमा डाम्नेजस्ता गलत कार्य गर्ने बाबा र लामाहरू खीष्टीयनद्वारा परिचालित सहयोगी हुन् । ईश्वरको नाम दिएर मदिराजन्य पदार्थ र धूम्रपान गर्न गराउन सिकाउने गुरु तथा लामाहरू असली नभई खीष्टीयन मण्डली स्थापनामा अप्रत्यक्ष सहयोग पुऱ्याउने व्यक्तिहरू हुन् । हामी धेरै वर्ष हिन्दू वा बुद्धिष्ट थियौँ सत्य बुझेपछि येशूको शरणमा आएर मुक्ति पायौँ भनी झुट्टा कुरा गर्दछन् । सर्वसाधारण मानिसलाई त्यो सत्य नै होला भन्ने भ्रम पर्दछ र धर्मान्तरण गर्दछन् ।

खीष्टीयन मिसनअनुसार हिन्दू संस्कृतिलाई ध्वंश गर्न हिन्दू आवरणमा पशुपति क्षेत्र विकाश कोषजस्तो गरिमामय पदमा रहिसकेका डा. गोविन्दा टण्डनलगायतका संस्कृतिविद् लागि परेका रहेका छन् । डा. गोविन्द टण्डनले पाशुपतक्षेत्रमा रहेको वनकालीमा नन्दीविनाको शिवलिङ्ग बगैंचा बनाउने काम गरेका छन् । झट्ट हेर्दा यो सुन्दर देखिए पनि उनले यहाँ झगडाको विऊ रोपेका छन् । शैव क्षेत्रमा वैष्णवलाई ल्याएर हिन्दूभित्र फाटो ल्याउने काम गरेका छन् । नन्दीविनाको शिवलिङ्गमात्रै राख्दा

मुर्दास्थल हुन्छ । त्यहाँ कुनै नन्दी राख्ने काम भएको छैन । यसरी डा. टण्डनले बनकालीलाई मुर्दा क्षेत्र बनाएका छन् । पशुपतिक्षेत्रका पूर्वसदस्य सचिव डा. टण्डन कोरियाली हतियार माफिया खीष्टीयन सानम्योगङ्ग मुनका घनिष्ट मित्र हुन् भन्ने तथ्य बुझ्न धेरै मिहिनेत गर्नुपर्दैन । हिन्दूविद्यापीठ खोलेर पौरस्त्य धर्म, संस्कृतिको श्रीवृद्धि गर्न खटिएका कथित डाक्टर उपाधि प्राप्त गरेका योगीहरू पनि मुनकै पृष्टलघु भएर हिंड्ने अर्को ज्वलन्त उदाहरण हो । खोल र बोल हिन्दूको, दूत मुनको भएको देख्दा उदेक लागेर आउँछ ।

नाग, देवीदेवता, तीर्थस्थल, बुद्ध, पद्मसम्भव, शिव आदिको बारेमा विभिन्न पर्चा छापेर यति पर्चा यसो गर्दा धनराशी प्राप्त हुनेछ र मनले चिताएको पुग्छ, अनादर गरेमा विपद् आइलाग्छ भनी हिन्दू आवरणका खीष्टीयनहरूले पर्चा छपाउने गर्दछन् । हिजो आज इन्टरनेटमार्फत देवीदेवताका तस्वीर, तीर्थस्थलको फोटो राखी लाइक कमेन्ट शेयर गरे मनले चिताएको पुग्छ भनी पोष्ट गरी भ्रम छर्नेहरू धर्मान्तर गर्ने खेतलाहरू हुन् । यिनीहरूद्वारा पोष्ट गरिएका फोटो, लेख, लाइक, कमेन्ट शेयर गर्दा कुनै फल नपाइने हुँदा आपत् परेका मानिसलाई ईश्वरप्रति विश्वास घट्न जान्छ । आशा र उद्धारका लागि पर्चा बनाएर बाँड्नेहरूले पनि कुनै फल प्राप्त नहुँदा ईश्वरप्रति अनादर गर्दछन् ।

यस्ता क्रियाकलापको विषयमा महेश संस्कृत गुरूकुल विद्यापिठ देवघाट तनहुँका प्राचार्य डा. गुरूप्रसाद सुवेदी भन्छन् "विद्यालय, क्याम्पस, किताब, गुरूको फोटो लाइक, शेयर, कमेन्ट गर्दा पढ्न लेख्न आउँछ वा पास होइन्छ भन्नु, मन्दिर तथा देवीदेवताको फोटो शेयर, कमेन्ट लाइक र पर्चा बाँड्दा फल प्राप्त हुन्छ भन्नु एउटै कुरो हो भनी सर्वसाधारण सबैले बुझ्न जरूरी छ । " यसरी खीष्टीयनहरूले अर्थतन्त्रलाई टाट पल्टाउने हिन्दूधर्मको आवरणमा बौद्धलाई झगडा गराउने, तराई र पहाडबीचमा फाटो ल्याउने काम गरेको बुझ्न आवश्यक छ ।

# अस्पताल छोडेर येशूको पछि लाग्दा के भयो ?

समस्याले ग्रस्त व्यक्तिले काल्पनिक कुरामा पनि सम्भावना देख्छ । यसरी भावनामा खेल्वाड गर्दै खीष्टीयनहरूले हिन्दू र बौद्धधर्ममाथि नग्नरूपमा प्रहार गरिरहेका छन् ।

क) सन् २०२० मा कोरियन सरकारले चर्चमार्फत कोरोना भाइरस संक्रमण भएको तथ्य सार्वजानिक भएको छ । दक्षिण कोरियाको सेन्चेवन्जी चर्चका सदस्यमार्फत ३,७३० विश्वासीहरूलाई कोरोना संक्रमित भएको र २१ जनाको ज्यान गएपछि चर्चका पाष्टर किमसिम च्याङ्ले चर्चको तर्फबाट माफी मागेका थिए ।

ख) अमेरिकाको भर्जिनियास्थित न्यूडेलिभिरेन्स चर्चका पाष्टर विशेष जेरल्ड ग्लेनको कोरोना भाइरसका कारण आईतबार निधन भएको थियो । यसअघि २२ मार्चमा भर्जिनिया गर्भनर राल्फ नर्थामले १० जनाभन्दा बढी व्यक्ति भेला हुन नपाउने आदेश जारी गर्नु अघि उनले "यो डरलाग्दो भाइरसभन्दा येशू शक्तिशाली हुनुहुन्छ भन्ने मेरो गहिरो विश्वास छ । त्यसैले आफू र विश्वासीहरू नमर्ने" उनले बताएका थिए ।

ग) चितवनको माडी नगरपालिका वडा नं. ७ जगन्नापुरी बस्ने पा. जानकी ढुंगानासहितका समूहले "येशूलाई विश्वास गर्नुहोस्, खीष्टीयनधर्म मान्नुहोस्, कोरोना लाग्दैन" भनी अफवाह फैलाएपछि मुलुकी अपराधसंहिता २०७४ को दफा १८ अन्तर्गत मुद्दाअगाडि बढाइएको थियो । त्यस्तै पा. केशव आचार्य पनि सोही अपराधमा जेल चलन गरिएको छ ।

घ) सल्यानजिल्लाको कुभिण्डे -४ ज्यामिरेमा २० बर्षीया सीता परियारलाई भूत र बोक्सीले समातेको भन्दै पाष्टर डल्लु सुनारले मरणासन्न हुने गरी सिस्नुपानी लगाए । त्यसपछि जबरजस्ती दिसा खुवाए । चर्चमा उपस्थित अन्य विश्वासीले पाष्टरसँग सीता परियारलाई यातना नदिन अनुरोध गर्दा उनले टेरेनन् । उल्टै घटना सार्वजानिक गर्नेलाई सीता परियारलाई झैं यातना दिने चेतावनी दिए ।

सीता परियार पेट दुःखेको छ भन्दै प्रार्थना गर्न चर्च पुगेकी थिइन् । प्रार्थना गरेपछि जस्तोसुकै रोग निको हुन्छ भन्ने भ्रम नेपाली इसाईमाझ व्यापक रहेको छ । तर, चर्चका पाष्टर डल्लु सुनारले दिएको यातनाको कारण उनको स्वास्थ्य झन् बिग्रियो । मानसिक सन्तुलन पनि खल्बलियो ।

ङ) स्याङ्जाको हरिनाश गाउँपालिकामा मृत बच्चालाई बचाउने भन्दै गाडिएको बच्चा निकाल्न पठाउने तीन जना महिलाहरूलाई प्रहरी नियन्त्रणमा लिएको थियो । विश्वासी धर्मको प्रचार गर्दै आएका हरिनाथ गाउँपालिका वडा नं. ७ चाङसिङ बस्ने गंगा थापा, सचिना परियार र कृष्णमाया थापाले स्थानीय रीता वि.क. को बच्चालाई बचाउन सक्ने दाबी गरेका थिए । शवलाई खाल्डोमा गाडिएको २ घण्टापछि प्रभूले बच्चालाई बचाउने आश्वासन दिएतापनि उक्त बच्चा बचाउन नसकेपछि उल्टै विश्वासी धर्म मान्नेहरूले भनेको स्थानीय तथा मृतकका परिवारले मान्न पर्ने" भन्दै अपशब्द बोल्ने र दुर्व्यवहारसमेत गरेका थिए ।

च) सन् २०१९ सेप्टेम्बर ११ को दिन बी. बी. सी., द गार्डियन र टाईम्सलगायत नाम चलेका धेरै पश्चिममा मिडियामा एउटा समाचार आयो । क्यालिफोर्नियाको हार्भेष्ट क्रिश्चियन फेलोसीप चर्चका ३० वर्षे पाष्टर जेराड विल्सनले आत्महत्या गरे । मानसिक स्वास्थ्यका परामर्शदातासमेत रहेका विल्सनले आत्महत्या गर्नु अचम्मको कुरो थियो । समाचारअनुसार, उनी डिप्रेसन, अनिद्रा तथा आत्महत्याको विचारबाट प्रताडित थिए । उनको मनमा बारम्बार आत्महत्या गर्ने विचार आइरहन्थ्यो ।

छ) वि.सं. २०६९ मा चितवनको नारायणगढमा यहोवाको साक्षीहरूले त्रिएक मण्डलीका विश्वासीहरूलाई धर्मान्तर गरेपछि यहोवाका साक्षी र त्रिएक चर्चबीच झडप भएको थियो । उक्त घटना स्थानीयको रोहवरमा सुल्झाइए तापनि यही घटनाको कारण यहोवाका साक्षीका पाष्टर डेन्सको स्वास्थ्य स्थिति बिग्रिएको थियो ।

च) चितवनको काउलेमा वि.सं. २०७४ मा सियोनले सुसमाचार प्रचार गर्ने क्रममा प्रोष्टेण्ड मण्डलीका विश्वासीलाई धर्मान्तर गर्न नदिंदा स्थानीयबासीबीच

झडप भयो । स्थानीय प्रशासनको सहयोगमा सियोन र प्रोटेष्टेड मण्डलीको धर्मान्तर विवाद टुंग्याइएको थियो ।

छ) दक्षिण ईथियोपियाको मार्केव ताब्या जिल्लाको अबायामा एक जना पाष्टर बप्तिस्मा दिँदै थिए । बप्तिस्मा लिन ८० जना लाईन लागेर तालनजिक उभिएका थिए । पाष्टर तालमा छिरे । पहिलो व्यक्तिलाई उनले तालमा बोलाए र वप्तिस्मा दिए । त्यसपछि दोस्रो व्यक्तिलाई उनले बप्तिस्माका लागि तालमा बोलाए तर दोस्रो व्यक्ति तालमा पस्दा नपस्दै एउटा गोहीले पाष्टरलाई आक्रमण गऱ्यो । उनको शरीरको पछाडिको भाग, हात र खुट्टमा गोहीले टोकेको थियो । उनी मरे । यो समाचार बी. बी. सी., बासिङ्गटनपोष्ट लगायतका विश्वप्रख्यात सञ्चार माध्यममा छापिएको थियो ।

संसारभरी लाखौंको संख्यामा त्यस्ता पाष्टरहरू छन् जो विभिन्न खाले मानसिक र शारीरिक रोगले ग्रस्त छन् । जो अकालमा मरे किनकि उनीहरूले अस्पतालको सट्टा उपचारका लागि चर्चलाई चुने, पाष्टरका कुरा सुने र प्रार्थना गर्न थाले ।

ज) चितवनको कालिका नगरपालिका शक्तिखोरमा वि.सं. २०७५ मा कान्छा मगरको उपचारका लागि समयमा अस्पताल नगई चर्च जाँदा मरेका थिए ।

झ) र.न.पा. चित्रसारी निवासी रमेश थारूले नियमित खाँदै आएको क्यान्सरको औषधि पाष्टरको सल्लाहअनुसार खान छोडेपछि मृत्यु हुन पुगेको थियो ।

ञ) कालिका र र.न.पा. नगरपालिकामा मात्र पाष्टरहरूको चंगाईको आश्वासनमा ७ जना विश्वासीले अकालमा ज्यान गुमाउनुपरेको थियो । येशूको नाममा दुवाही दिएर समाजमा अराजकता फैलाउनेलाई परमेश्वरको अदालतमा पेश गरेको छु ।

# सूर्य पूजाको पवित्र दिन क्रिसमस

अन्धभक्त भएर कागले कान लग्यो भन्दा पछि पछि दौडने क्रम निकै बढेको छ खीष्टीयन समाजमा । बाइबल पढ्नभन्दा पनि हिन्दू र बौद्धलाई गाली गर्न समय खर्चनेहरूलाई आफ्नो धोती फुत्किएको पत्तै छैन । क्रिसमस कहिले हो र यस दिन कसको पूजा हुन्छ भन्ने ज्ञानै नहुनु अर्को दुर्भाग्य हो खीष्टियनहरूलाई । हिजो आज क्रिसमसको समय डिसेम्बरनजिक आउँदा सम्पूर्ण मानिसको मन हर्षित हुन पुग्छ । पछिल्लो समयमा यो संसारको सर्वोत्कृष्ट चाड र सर्वोत्कृष्ट कार्यक्रम मानिन्छ । यो दिन अनन्त आशा र आशिषको दिनको रूपमा चिनिएको छ । क्रिसमस सम्पूर्ण धर्मको एक अद्भूत पर्व हो । क्रिसमस वास्तवमा सूर्य देवता बालको एउटा पर्व हो ।(मेरो भेडाहरूले मेरो स्वर सुन्छ, पृ ८३, पृ २११ पा. किम जु छल) ।

हजारौं मान्छेहरू जानी नजानी यो चाड मनाइरहेका छन् । अन्जानमा यो चाडको स्मरण गरेका छन् । रोमी पर्व सेटरनालीयाबाट शुरु भएको हो । रोमेलीहरू सूर्यपूजा अत्यन्तै रहस्यमय, अति गोप्य र उत्तम व्रतको रूपमा लिने गर्दथे । सूर्यपूजाको प्रभावले मानिस मृत्युपछि सूर्यलोक प्राप्त गर्ने कुरा रोमी इतिहास र हिन्दूधर्म ग्रन्थमा प्रष्ट लेखिएको छ । बौद्धभिक्षुहरूले बुद्धपूर्णिमाको दिनलाई सर्वोत्कृष्ट चाडको रूपमा मनाएजस्तै खीष्टियनहरू सूर्यको जन्मदिन Dec 25 लाई धूमधामसँग मनाउँछन् । सूर्यपूजा विधि र सौर्य कथाअनुसार सूर्यको जन्मदिन सूर्यको आराधना गर्ने वा जान अन्जानमा सूर्यको आकृति अथवा मूर्तिको नजिक रही ईश्वरको आराधना गर्ने सबै मानिस सौर्यलोक पुग्ने उनीहरूमा विश्वास छ ।

खीष्टियनहरूको इतिहासमा क्रिसमसचाहिँ सौर्यलोक प्राप्त गर्ने उत्तम बाटो हो । यसलाई जस्ताको तस्तै लिएर धर्ममा मिलाइएको एउटा परम्परा हो भनेर गवाई दिएको छ । Dec 25 मा क्रिसमस मनाइएको कुरा

इ.सं. ३५४ को लेखमा पाइन्छ । जुन युग रोमी पादरी लिवेरिउसको युग थियो । ई.सं. ३७९ मा यो कन्स्टेन्टाइनोपल सहरमा मनाइयो । त्यसपछि मिश्र र प्यालेस्टाइनमा विस्तार भयो । क्रिसमसको शुरुवात रोमबाट भएको हो । रोममा डिसेम्बर महिनाको अन्त्यतिर क्रमिकरूपमा तीनवटा महान् चाड मानिन्थ्यो । पहिलो सेटनालिया, दोस्रो सिगीलारिया तेस्रोचाहिँ ब्रुमालीया थियो । ब्रुमालीया चाड उत्तरायण (माघे संक्रान्ती) पर्व थियो, जो सूर्योदयको अवसरमा मनाइन्थ्यो । यही तीनवटा चाडको विशेष अर्थ मनाउन ग्भअ द्दछसूर्यको जन्मदिन येशूको सम्बोधन गर्दै क्रिसमसको उत्पत्ति हुन गयो । अर्को इतिहासको पुस्तकमा पनि क्रिसमस Dec 25 को विषयमा उस्तै अभिव्यक्ति पाइन्छ ।

सेटरनालीया (Dec को १७ देखि २४) अनि देवताको प्रभूत्व हुँदाको स्वर्णयुगको स्मृति, सिगिलारीया (डिसेम्बरको अन्त्यतिर) बच्चालाई खेलौना दिएर मनाइने चाड, ब्रुमालिया (माघे-संक्रान्ति) सूर्योदयको चाड यस्ता ऐतिहासिक प्रमाणमात्र हेर्दा क्रिसमस भनेको सूर्यलाई देवताको रूपमा पूजा गर्दै आएका प्राचीन रोमी र वैदिक सनातन धर्मालम्बीहरूद्वारा निमित्त चाडलाई खीष्टियनधर्ममा रूपान्तर गरिएको सौर्यलोक प्राप्त गर्ने विधि भएको प्रष्ट हुन्छ । ऐतिहासिक विषयवस्तुबाहेक हिजो आज प्रकाशित विभिन्न पत्रपत्रिकाको लेखमा डिसेम्बर २५ सूर्यको जन्मदिन हो भन्ने कुरा स्पष्ट गवाही दिएको छ ।

डिसेम्बर २५ मा येशू जन्मे भन्नु झुठो कुरा हो । अर्थोडक्स इसाईहरू पनि डिसेम्बर २५ मा येशू जन्मेको कुरालाई स्वीकार गर्दैनन् । त्यस दिन उनीहरू क्रिसमस मान्दैनन् । उनीहरू जनवरी ७ तारिखका दिन क्रसमस मनाउने गर्दछन् तर बाइबलले येशू जनवरी ७ तारिखमा जन्मेको पनि प्रमाण दिँदैन । जनवरी ७ तारिख डिसेम्बर २५ तारिखझैँ कपोलकल्पित मितिमात्रै हो । (येशूको वस्तविक इतिहास २०७६, अभिषेक जोशी) ।

सन् १९८५ साल डिसेम्बर महिनाको आजको कोरिया भन्ने मासिक पत्रिकाको ६७ पेजमा क्रिसमस भन्ने शीर्षकमा तलअनुसारको रिपोर्ट प्रकाशित भएको थियो । "खीष्टको जन्मदिन सम्झना दिने क्रिसमस इसाईधर्मको सबैभन्दा ठूलो महोत्सव हो । खीष्ट यो दिनमा जन्मनु भएको

निश्चित नभए तापनि उहाँको जन्मलाई बधाई दिने यो कार्यक्रम भने तेस्रो शताब्दीदेखि मात्र मान्न थालिएको देखिन्छ । युनानी पात्रोमा माघेसंक्रान्तिको रूपमा निश्चित गरेर यो दिनदेखि सूर्यको शक्ति बढ्दै जाने कुरा विश्वास गरी सूर्यको जन्म दिनको रूपमा तोकेर महान् विधिको रूपमा ठहराइयो । यस्तो सूर्यपूजाको परम्परा लागु गरेर खीष्टको जन्मदिन सम्झना गरेजस्तो देखिन्छ । तर खेतीपातीका देवता सार्टनलाई, डिसेम्बर २१ देखि ३१ सम्म बली चढाइन्थ्यो । सूर्य देवताको रूपमा पुजिएका मिथ्राको सम्झना गर्ने दिन पनि यही डिसेम्बर २५ थियो ।"

६६६ (पृष्ट १३१) नामक पुस्तकमा "नर्मोद (सूर्य) को जन्मदिन डिसेम्बर २५ मा मनाइन्थ्यो जुन प्राचीन रोमको सेटरनालीया भन्ने पर्व थियो" भनेर लेखिएको छ । सन् १९७० साल डिसेम्बर ०८ तारिखको हान्गुग इल्बो, जुङ-आङ इल्बो र दोङआ इल्बोलगायत सन् १९८३ डिसेम्बर २४ तारिकका जुङ-आङ इल्बो इत्यादि समाचार पत्रमा डिसेम्बर २५ रोम देशको खेतीपातीको देवता अर्थात् सूर्यदेवताको पर्व हो भन्दै रिर्पोट दिएको छ ।

सन् १९८९ साल डिसेम्बर २४ तारिखमा म्यङदोङ गिर्जाघरमा क्रिसमसको मध्यरातको आराधनामा क्रिसमसको उत्पत्तिको बारेमा पत्रकारले प्रश्न गर्दा एक जना पादरीले "यो दिन सूर्यपूजा गर्ने रीतिबाट शुरु भएको हो" भन्दै सबैको अगाडि खुलस्त गरेका थिए । (मेरा भेडाहरूले मेरो स्वर सुन्छ, मल्कीसेदक प्रकाशन पृ ८७) ।

रोमी साम्राज्यका सम्राट्, सिजर अगष्टले रोमी साम्राज्यभर एउटा जनगणना गरियोस् भन्ने हुकुम जारी गर्छन् । त्यसपछि आ-आफ्ना नाउँ दर्ता गर्न सबै आ-आफ्ना सहरमा जान्छन् । यसरी युसुफ (येशूका पिता) पनि गालीलको नासरत सहरबाट यहुदियामा, दाउदको सहर बेतलेहम गए, किनकि उनी दाउदकै घराना र वंशका थिए । उनी मरियमसगैं गए र मरियम गर्भवती पनि थिइन् । तिनीहरू त्यहीं भएकै बेला बालक येशू जन्मिए । तिनले येशूलाई एउटा लुगाले बेरेर डुँडमा राखिन् किनकि तिनीहरूका निम्ति पौवामा ठाउँ थिएन ।

अनि त्यहाँ नजिकैको चौरमा राति आफ्नो बगालको रखवारी गरी बस्ने केही गोठालाहरू थिए ।" बाइबलका विद्यार्थी र खोजकर्ताहरूका

अनुसार डिसेम्बर महिनामा बेतलेहम (येशू जन्मेको ठाउँ) मा घनाघोर वर्षा र असाध्यै जाडो हुन्छ । यस्तो समयमा गोठालाहरू आफ्ना भेडाको बगालसहित राति खुल्ला आकाशमुनिको चौरमा बस्नुको कत्तिको उपयुक्त हुन्छ ? (लुका २ १।८, माथि हेर्नुपर्ने) अर्थात् यो हुनै सक्दैन किनकि यस्तो जाडो र बर्षाको समयमा गोठालाहरू पुरै रात आफ्नो भेडाको बगालको साथ बस्ने कुरा हुनै सक्दैन । रोमी सम्राट्ले त्यसै विद्रोह गर्न तम्सिएका त्यहाँका मानिसहरूलाई यस्तो जाडोको मौसममा जन्मदर्ता (जन्मगणना) गर्नको लागि यात्रा गर्ने आदेश दिने सम्भावना पनि छैन । त्यस्तो जाडो र वर्षाको समयमा जनगणना गर्ने सम्भावना पनि हुँदैन । तसर्थ यसबाट सिद्ध हुन्छ कि येशू जन्म डिसेम्बर महिनामा भएकै होइन, यो झुटो हो ।

यसबाट के प्रष्ट हुन्छ भने येशूलाई विश्वको ज्योति (Light of World) को उपमा दिई नयाँ तरिकाले येशूलाई सूर्यको अवतारको रूपमा परिभाषित गरिएको बुझिन्छ । अन्योलमा परेका मानिसहरूलाई आईतवार र डिसेम्बर २५ को पवित्र दिन येशूलाई सूर्यको अवतार मानेर शवथको दिनको आराधना र क्रिसमसको दिनको आराधनाको मार्फत सूर्यदेवताबाट आशिष प्राप्त गर्ने महान् विधि तय भएको छ ।

# सूर्यको प्रतिमूर्ति नै क्रुस

हिजो आज धेरैजसो चर्चहरूमा खीष्टको चिह्नको रूपमा प्रयोग गरिरहेका क्रुस सूर्य पूजाविधिद्वारा पूजा गर्दै आएको पूजाको वस्तु हो । क्रुस प्रयोगको उत्पत्ति प्राचीन वेवीलोन र वैदिक संस्कृतिको मिश्रित संस्कार हो । सूर्यको आकृतिको रूपमा कोरिएको सूर्यको चित्रलाई प्रतिमूर्ति बनाउन काठको ली जोडी बीचमा प्वाल पारी तयार गरिएको थियो । वेविलोन राज्य Tammuz नामको पहिलो अक्षरको चिह्न सूर्यको आकृति चिह्नसँग करिब उस्तै उस्तै हुने भएकाले त्यस समयका पूजारीहरूको आधिकारिक पोशाकमा अंकित गरिन्थ्यो, अनि छातीमा टाँस्ने सुरक्षा कवचको रूपमा प्रयोग गरिन्थ्यो ।

रोमीहरूले आफ्नो संस्कृतिको विकास हुनुभन्दा पहिले क्रुसलाई पूज्य वस्तु मान्दथे । उनीहरूको विश्वासअनुसार क्रुस (सूर्य) को आराधनाबाट आफ्नो सुरक्षा हुने ठान्दथे । विस्तारै मानिसको मृत्यु हुँदा उसले सौर्यलोक प्राप्त गरोस् भनी लाससँग क्रुस चढाइन्थ्यो । समय बित्दै जाँदा घोर पापी र अपराधीहरूलाई अर्को जन्ममा असल मानिसको रूपमा जन्म लिओस् भनी उसका आफन्तले लासमा क्रुस चढाउन थाले । यही क्रमअगाडि बढेर मृत्युदण्डको साधनको रूपमा क्रुसलाई प्रयोग गर्न थालियो । यसरी घोरपापीको आत्माको उद्धारको निम्ति पापीहरूलाई क्रुसमा झुण्डाएर मृत्युदण्ड दिइन थालियो । येशूको मृत्युको समयतिर मानिसहरूमा क्रुसप्रति घृणा थियो । जब दियावलसको युक्तिद्वारा येशूलाई क्रुसमा टाँगी मृत्युदण्ड दिएपश्चात् क्रुसप्रतिको विश्वास खीष्टियन समाजमा बढ्न थाल्यो ।

जसको परिणाम अहिले क्रुसलाई सूर्य उपासनाको प्रतिमूर्तिको रूपमा विभिन्न मण्डलीहरूले मान्दै आएका छन् । उनीहरूले क्रुसको प्रतिमा चर्च, घरभित्र र बाहिर खडा गर्दै आएका छन् । आभूषणको रूपमा क्रुसको नमूना बनाएका छन् । सुरक्षाकवचको रूपमा प्रयोग गर्दै आएका छन् । आराधनास्थल वा बाहिर क्रुस खडा गरिएको छ । यसरी सूर्यको प्रतिमूर्तिको रूपमा क्रुसको पूजा एवम् स्मरण आजको विश्वको जनसंख्याको ३३ प्रतिशत ख्रीष्टियनहरूले गरिरहेका छन् । ती सबैमा सूर्यलोक प्राप्त गर्ने महान् सपना अन्तरआत्माभित्र लुकेका छन् । उनीहरू अन्य जातिको अघि आफूलाई पृथक् देखाउन सो यथार्थ सूर्यपूजाको विधि नमानेको र ख्रीष्टलाई मात्र विश्वास गरेको बताउँछन् ।

# आइतवार नै किन सूर्यपूजा गरिन्छ ?

आइतवार सूर्य पूजाका लागि सर्वोत्कृष्ट वार मानिन्छ । क्रसको प्रारम्भिक धार्मिक अर्थको विषयमा नानातरहका मतहरू प्रकट गरिएका छन् । केही विद्वान्हरूका अनुसार त्यो अग्निको प्रतीक हुन्छ । अर्को त्यसलाई सौर्य चिह्न, उर्वरताको प्रतीक आदि बताउने गर्दछन् । स्वस्तिकको समेत पनि बेग्लाबेल्लै व्याख्या गरिन्छ । उत्तरअमेरिकामा भारतीयहरूमा क्रस चार दिशाहरूको प्रतीक थियो । त्यसले चार तत्वहरूको पूजासित सम्बन्ध राख्दथ्यो । सबैभन्दा पुराना इसाईस्मारकहरू (समाधिहरू) मा पवित्र चिह्नको रूपमा क्रस नभएर अरू आकृतिहरू बनेको पाइन्छ । जस्तै पाठो, काँधमा पाठो उठाएको गडरिया, माछो आदि । पछि आएर नाना प्रकारका आकारको क्रस प्रकट भए तापनि त्यसमा ईसाको क्रस आरोपित आकृति थिएन । क्रसमा झुण्ड्याइएको ईसाको मूति (चित्र) केवल ८ औं शताब्दीदेखि मात्र बनाउन थालिएको थियो (धर्मको इतिहास ३२०,३२१ से. तोकारेव ) ।

जसरी बुद्धको पवित्र जन्मदिन भनेर बुद्धपूर्णिमा मानिन्छ त्यसै सूर्यको जन्मवार आइतवार मानिन्छ । यो दिन साताभरिको दिनको रूपमा पवित्र सूर्यपुराणमा व्याख्या गरिएको छ । त्यही दिन सूर्यको जन्म र उज्यालो प्रारम्भ भएको विश्वास गरिन्छ । विधिअनुसार आईतवारको दिन सूर्यको प्रतिमूर्ति बनाई पूजा गर्नाले सूर्यबाट विभिन्न लाभ पाइने जनविश्वास छ । सूर्यलाई जल, फूल चढाएर प्रार्थना गर्छन् । खीष्टियनहरू बन्दकोठामा आईतवारको दिन सूर्यलाई स्मरण गर्ने वा सूर्यको आकृतिको अगाडि रहेर प्रार्थना गरिरहेका हुन्छन् । उनीहरूको येशूलाई विश्वको ज्योति (Light of

World) सूर्यको रूपमा स्मरण गर्दछन् । श्रीमद्भागवत गीता (४ को ११) मा भनिएको छ, "कुनै पनि बाटो वा शैलीबाट मानिसले मलाई प्राप्त गर्न सक्छन् किनकि हे अर्जुन ! तिमीले जुनबाटो छान्यौ त्यो प्रत्येक बाटो मसम्म आइपुग्छ ।"

यही पङ्क्तिलाई खीष्टीयनपाष्टर र गुरुहरूले राम्रोसँग बुझेका छन् । उनीहरूको विश्वास अटल छ, उनीहरू सूर्यलाई येशूको रूपमा याद गर्दछन् तर निरञ्जन निराकारको वशमा भएको हुँदा सो वास्तविक ज्ञान बताउन सक्दैनन् । अर्कोतिर आइतवारको दिन रोमीहरू भने सूर्यलाई बली चढाएर आराधना गर्ने गर्दथे । रोमका सम्राट् कन्स्टेन्टाइनले ई.सं. ३२१ सालमा सम्पूर्ण सूर्यपूजाका भक्तहरूको इच्छाको कदर गर्दै आइतवारलाई छुट्टीको दिनको रूपमा घोषणा गरे । कन्स्टेन्टाइनले त्यसबेला जारी गरेको आइतवारको छुट्टीको आदेश यसप्रकार छ, "सम्पूर्ण न्यायाधीशहरू सहरी मानिसहरू र कारीगरहरूले सूर्यको आदरणीय दिनमा विश्राम गर्नुपर्ने छ । गाउँका मानिसहरूले भने विना बाधा अड्चन कृषिमा सहभागी होऊन् किनकि योचाहिँ धेरै सूग विउ छर्न अथवा अङ्गुर रोप्नका लागि अनि उपयुक्त दिन भएकाले ईश्वरीय निगाहाद्वारा दिएको यो अवसर भने नगुमीयोस् किनकि यो उचित मौसम छोटो हुन्छ ।" ७ मार्च ३२१ यसरी सूर्य देवताको व्यवस्था, रोमी अनि सूर्यभक्तहरूको आस्थाअनुसार सूर्य देवताको पवित्र साप्ताहिक जन्मवार आइतवार सूर्यको स्मरण, प्रार्थना, पूजा आदि गरेमा धेरै आशीष प्राप्त भई स्वर्गलोक प्रवेश गरिने सूर्य देवताको व्यवस्थामा बताइएको छ । हिन्दूग्रन्थका अनुसार आईतको अर्थ सूर्य हुन्छ । चन्द्रमाको अर्थ सोम हुन्छ । हरेक ग्रहअनुसारको वारको नामकरण गरियो । "शनि" ग्रहलाई अंग्रेजीमा स्याटन भनिन्छ । स्याटनबाट स्याटडे भयो । यी वारहरूको उत्पत्ति हिन्दूग्रन्थबाट भई कालक्रमले पश्चिमी देशहरूमा पुग्यो । सूर्यपूजा पनि वैदिक परम्पराबाट बाइबलसम्म पुगेको देखिन्छ ।

# तीनचरणको सात चाडको रहस्य

विगतको धर्मयुद्धले संसारभरिका मानिसहरूको मनोवृत्तिमा नकारात्मक असर परेको कुरा सर्वविदित छ । धर्मका निहुँमा, चाडपर्वको निहुँमा एकले अर्काको टाउको काट्न तयार भएको हामीले देखेका छौँ । मानिसहरूका यस्ता घातक क्रियाकलाप दिनपिच्छे कहीँ न कहीँ भइरहेका छन् । यस्ता घटनाले अनेक कष्ट र कैयौँको अनावश्यक मृत्यु गराइरहेका छन् । हाम्रा समाजमा प्रवेश गरिएका खीष्टीयन अतिवादीहरूलाई सजग गराई यो देशमा शान्ति स्थापना गर्न आजको आवश्यकता देखिन्छ । खीष्टीयन चाडको रहस्य र वास्तविकतालाई हिन्दू, बौद्ध, मुस्लिम तथा सच्चा खीष्टीयनबीच ल्याई भेदभाव एवं काटमारको अन्त गर्ने प्रयास गरिएको छ ।

महाभारतको युद्धको समयमा सामेल हुन नसकेका इजरायलीहरूको इतिहास हेर्दा उनीहरूले यहोवालाई एक वर्षको पाठो चढाउने भाकल गर्दै थिए । संसारभर युद्धको त्राही-त्राही थियो । लाखौँ मानिसहरूको मृत्यु भयो । त्यतिले मात्र उसको इच्छा पूरा भएन उसले केही वर्षपछि आफ्नो आराधना नगर्ने मिश्रवासीहरूलाई मात्र सजाय दिएन । त्यहाँका अबोध पशुहरूको समेत हत्या गर्‍यो । मोशालाई दर्शन दिई आफ्नो अगमवाणी उसको मुखमा हाली दियो । कम्तिमा ३० लाख मानिसहरू त्यही कारण मरेका थिए । यति ठूलो सजाय केका लागि भएको थियो ।

उक्त विषयमा बाइबलको प्र.स. १२:१२ -१४/१२:२९-३० मा लेखिएको छ । मोशाको माध्यमद्वारा उसले पशुहत्या र बलीप्रथा शुरु गरी प्रत्येक घरमा रगत लगाउन लगायो । यस्तो पूजालाई विपत्ति पारको संज्ञा दिइयो ।

येशूले मान्नु भएको अन्तिम निस्तार चाडको बारेमा भन्नुपूर्व पुरानो करारमा मोसाको समयदेखि पालना गर्दै आएको निस्तार चाड हो । ( असल र खराबको ज्ञान दिने रुखको फल र सुसमाचार- २००९ई.सं.,पृ.८३,आनसाङ होङ) ।

यही चलन मोशामार्फत मिश्रको फारोकोराज्यमा शुरु भयो । त्यही विपत्तिबाट पार हुने चाडलाई निस्तारको चाडको नाम दिइयो । चैत्र/वैशाख महिनामा निस्तार चाड र बलीको चलन चल्यो । यसैगरी सबै चाडहरूको रहस्य जोडिएको छ ।

पृथ्वीको पवित्र स्थानचाहिँ स्वर्गीय पवित्र स्थानको छायाँ हो । त्यसकारण येशूख्रीष्टले तीनचरणका सातवटा चाडहरूअनुसार आफ्नो कार्य पूरा गर्नुभएको थियो । (मोसाको व्यवस्था र ख्रीष्टको व्यवस्था२०१२, पृ. ६७,आनसाङ होङ) ।

यसरी निरञ्जनरूपी यहोवा कालले १,४४,००० को निम्ति उसद्वारा निर्माण गरिएको नयाँ यरूशेलम (स्वर्ग) लैजान निस्तारको चाड, अखमरी रोटीको चाड, अगौटे फलको चाड, पेन्टिकोसको चाड, तुरहीको चाड, प्रायश्चित्तको दिन र छाप्रावासको चाड खडा गरी मुक्तिको प्रबन्ध मिलाएको पाइन्छ । यी सातओटा चाडहरूलाई तीन चरणमा बाँडिएको छ ।

१. पहिलोचरणमा - निस्तार चाड र अखमिरी रोटीको चाड
२. दोस्रोचरणमा - अगोटे फलको चाड र पेन्तिकोसको चाड
३. तेस्रोचरणमा - तुरहीको चाड, प्रायश्चितको दिन र छाप्रो बासको चाड

यी नयाँ व्यवस्थाको पालना गरी सियोनमा भेला हुन आह्वान गरेको छ । (परमेश्वरको रहस्य र जीवनको पानीको मूल-२०१२, पृ. २७आनसाङ होङ)

बाइबल र कुरानद्वारा गरिएको अगमवाणीका वचन पूरा गर्न येशूख्रीष्टको दोस्रो अगमन भयो । पहिलोपटक जस्तै बादल (शरीर) मा, यहुन्नाले प्रकाश पारेको पतमस टापुबाट पूर्व कोरियामा आउने, जिससले जस्तै ३० वर्ष पूर्व बौद्धदीक्षा लिएर कुण्डलीनीको यात्रामार्फत विश्वभरिका इसाई पादरीले खोल्न नसकेको बाइबलका सत्यताको उजागर गरिदिए ।

# आत्मासम्बन्धी बाइबलको धारणा

आत्मा शब्दको अर्थ "स्व" अथवा आफू भनेको हो । आत्माको सन्दर्भमा हेर्दा आत्माको अस्तित्व छैन अथवा शरीर मरेपछि आत्मा स्वतः नष्ट हुन्छ भनेर बाइबलको भजन १४/१५५ ले बताउँछ । फेरि उत्पत्ति १ को वचनले आत्मा, शरीर मरेपछि विघटित भएर स्वर्गमा हुनुहुने परमेश्वरकहाँ वा नर्कमा नष्ट गर्नको लागि पठाइन्छ भनिएको छ ।

मृत्युमा तपाईंको सम्झना हुँदैन, पातालमा कसले तपाईंको प्रशंसा गर्न सक्छ र ? यस वचतलाई पूर्वाग्रही ढंगमा नहुने हो भने आत्मा हुँदैन ।(पवित्र बाइबल, भजः ६:५) ।

आत्मा अस्तित्व छैन अथवा शरीरको अन्त्यसँगै आत्मा नष्ट हुन्छ, आत्मा र शरीर एकै हो भन्ने बुझिन्छ (पवित्र बाइबल, भजः १४:४, ११५:१८) । किनभने हामी मर्ने छौं भनी जीवितहरूले जान्दछन् तर मरेकाहरूले त केही पनि जान्दैनन् । तिनीहरूको निम्ति केही प्रतिफल हुँदैन । तिनीहरूको सम्झना पनि लोप हुन्छ, त्यस्तै उप ९:१०, किनभने चिहानमा जहाँ तिमी जान्छौ न त केही गर्ने, न योजना गर्ने, न ज्ञान र बुद्धि नै हुन्छ । (पवित्र बाइबल, उप ९:५)

मानिसको भाग्य पशुको झैं हुन्छ । ती दुवैको एउटै दशाले प्रतीक्षा गरिरहन्छ । एउटा जसरी मर्छ अर्को पनि त्यसरी नै मर्छ । सबैको एउटै सास हुन्छ । सबै एउटै ठाउँमा जान्छ किनभने सबै धुलोबाट आएका हुन् र सबै धुलोमा फर्की जान्छन् । यसरी पवित्र बाइबलले आत्मा शरीरभन्दा पृथक नभएको सत्य उजागर गरेको छ । । शरीरसँगै आत्मा मर्दछ भनी बाइबल ज्ञानदाताको पवित्र वचनमा प्रस्तुत गरिएको छ । अर्कोतिर उही

बाइबल ज्ञानदाता पवित्र वचन यस्तो छ । (पवित्र बाइबल, उप ३:१९-२०) ।

जमिनबाट आएको धुलो जमिनमै फर्कनुअघि तथा आत्मा दिनुहुने परमेश्वरकहाँ आत्मा जानुअघि उहाँको सम्झना गर;(पवित्र बाइबल, उत्पत्ति १:७) ।

"तिनीहरूसँग नडराओ जसले शरीरलाई मार्छन् तर आत्मालाई मार्न सक्दैनन् । बरु आत्मा र शरीर दुवैलाई नरकमा नाश गर्न सक्नेसँग डराओ" (पवित्र बाइबल, भत्ती १०:२८) ।

अनि मेरो छाला नाश गरिसकेपछि मेरो शरीरमै परमेश्वरलाई देख्नेछु । (१ कोर १५:४४)

प्राकृतिक शरीरमा यो गरिन्छ आत्मिक शरीर पनि आवश्यक हुन्छ (पवित्र बाइबल, लूक १९:१०) ।

मानिसको पुत्र हराएकालाई खोज्न र बचाउन आएको हो (पवित्र बाइबल, आयू: १९:२५-२६) ।

"_फेरि यस बालकको जीवन यसमा फर्कोस्"(पवित्र बाइबल, १ राज १७: २१-२२)यस्ता थुप्रै बाइबलका वचन र उपदेशहरूलाई अध्ययन गर्दा आत्माको विषयमा बाइबलका ज्ञानदाताले दुई प्रकारले आत्माको व्याख्या गरेको देखिन्छ । खीष्टीयन धर्मग्रन्थ बाइबलभित्र आत्माको विषयमा अन्यौलता देखिन्छ । आत्मा न त मर्छ, न त मारिन्छ । मर्ने र मार्ने काम दृश्यवस्तु वा नाशवान् हो । यसरी सत्यतथ्य बताउन नसकेर बाइबल आत्माका सम्बन्धमा रनभुल्ल परेको देखिन्छ ।

# बाइबलभित्र नारी परेमश्वरको अस्तित्व

बाइबलीय वचनले भन्छ कि स्वर्गमा यरूश्लेम परमेश्वर महिलाको रूपमा हुनुहुन्छ । जुन कुरा ओल्डटेष्टामेन्ट र न्यू दुवै टेष्टामेन्टभित्र यरूशेलम आमाको अस्तित्व सर्वत्र पाइन्छ ।

फेरि परमेश्वरले भन्नुभयो, "मानिसहरूलाई आफ्नै स्वरूपमा हाम्रै प्रतिरूपमा बनाऔं । यसैकारण परमेश्वरले मानिसलाई आफ्नै स्वरूपमा सृष्टि गर्नुभयो । परमेश्वरकै प्रतिरूपमा उहाँले तिनलाई सृष्टि गर्नुभयो । नर र नारी नै गरी उहाँले तिनीहरूलाई सृष्टि गर्नुभयो ।" (पवित्र बाइबल, उत्त १:२६/२७)

मानिसलाई आफ्नै स्वरूपमा हाम्रो प्रतिरूपमा बनाऔं । यहाँ एक वचनको प्रयोग नगरी बहुवचनको प्रयोग गर्नुको कारण परमेश्वर एकमात्र हुनुहुन्न भन्ने हो । मानिसलाई महिला र पुरुषको रूपमा सृष्टि भएका छन् । त्यो पनि परमेश्वरको प्रतीकका पुरुष यहोवाको प्रतिरूपमा, महिला यरूशेलमको प्रतिरूपमा सृष्टि भएको बुझिन्छ । हामी रमाऔं अत्यन्त खुसी होऔं र उहाँलाई महिमा दिऔं किनकि थुमाको विवाहको दिन आएको छ । उहाँकी पत्नी स्वयम् तयार भएकीछिन् । (पवित्र बाइबल, प्रकाः १९:७)

नयाँ टेस्टामेन्टमा बताएको पवित्र वचनचाहिँ पहिलो येशूखीष्टको विषयमा नभई दोस्रो येशुखीष्ट र यरूशेलम दुर्गाको विषयमा गरिएको घोषणा हो । येशुखीष्टचाहिँ (प्रकाः २१:९/१०) तब ती सात अन्तिम विपत्तिले भरिएका सात कचौरा हुने सात स्वर्गदूतहरूमध्ये एकजना आएर मलाई यसो भने "आऊ, म तिमीलाई थुमाकी पत्नी उहाँकी दुलही देखाउनेछु" । तिनले मलाई पवित्र आत्मा एउटा ठूलो र उच्च पर्वतमा

लगे । परमेश्वरबाट स्वर्गदेखि तलतिर झरिरहेको पवित्र सहर यरूशेलम मलाई देखाए ।

नयाँ टेस्टामेन्टमा स्वर्गदूतहरूले दुलही अर्थात् थुमाको पत्नीलाई देखाई दिन्छन् । जुन सारा आत्माहरूको आमा हुन् ।

माथि (स्वर्ग) मा रहनुभएको माता यरूशेलम हुनुहुन्छ भनेर न्यूटेस्टामेन्ट यरूशेलमको ओल्डटेस्टामेन्ट दुवैले स्पष्ट गवाही दिएको छ । कतिपय बाइबलीय वचनहरूले स्वर्गीय परिवारमो रूपमा महिलाको अस्तित्वलाई प्रष्ट्याएको देखिन्छ । "तिमीहरू मेरा छोराछोरी हुने छौं । हामी परमेश्वरको सन्तान हौं । जसरी पृथ्वीको परिवारमा बा आमा हुन्छ त्यस्तै स्वर्गीय परिवारमा पनि बा आमा हुनुहुन्छ ।" (पवित्र बाइबल, कोर ६:१७/१८) हि.८.५) "तिनीहरू स्वर्गीय पवित्र स्थानको नक्कल र छायाको सेवा गर्दछन् ।"

नक्कल र छायाको स्वरूपचाहिँ पृथ्वीमा हुनुभएको परिवार (बा, आमा र छोराछोरी) हुनु । सकल र वास्तविक स्वरूपचाहिँ स्वर्गीय परिवार हो, जहाँ यहोबा यरूशेलम र सन्तानहरू हुनु भन्ने बुझिन्छ ।

हाम्रा पिता जो स्वर्गमा हुनुहुन्छ । (पवित्र बाइबल, मत्ति ६:९) ।

माथिको यरूशेलम स्वतन्त्र छ, जो हाम्री आमा हुन् । (पवित्र बाइबल, गला:२६) ।

यी वचनहरूले स्वर्गमा पिता परमेश्वर र माता परमेश्वर भएको सत्यता उजागर गरेको छ । त्यस्तै यहुन्नाले पाएको प्रकाशको वचनले थुमाका विवाहका प्रसङ्ग उजागर गरिदिएको छ । सो प्रसङ्ग बुझ्नको लागि उत्पत्ति र यशैयाका केही वचन हेरौं । (मानिस) आदमले भने "यो त मेरै हाडको हाड र मासुको मासु हो । तिनलाई स्त्री भनिनेछ किनभने तिनी पुरुषबाट निकालिएकी थिइन्"। शरीरभित्रबाट कन्या (यरूशेलम) लाई पूर्णपरमेश्वरले बाहिर निकाली दिनुभएको थियो" । (पवित्र बाइबल, उत:२:२३)

आदमले आफ्नी पत्नीको नाममा हब्बा राखे किनभने सबै जिवितहरूकी आमा तिनी नै हुन् । हब्बाले यरूशेलम मातालाई जनाएको छ । हब्बा जसको अर्थ जीवन हुन्छ । (पवित्र बाइबल, उत:३:२०) ।

"मैले त्यस पर्खालहरूमा पहरा बस्नेहरू राखेको छु । ए यरूशेलम तिनीहरू दिनमा न त रातमा चुपचाप बस्नेछन् । हे परमप्रभूलाई पुकार्ने हो ! विश्राम

नलेओ र जबसम्म यरूशेलमलाई स्थापित गरेर त्यसको महिमा पृथ्वीभर फिजाउनुहुन्न तबसम्म उहाँलाई विश्राम गर्न नदेओ ।" यसरी यहोबाको इच्छाअनुसार यरूशेलम खडा गरिन्छ । (पवित्र बाइबल, यशै ६२:६/७) । "दुलही स्वयं तयार भएकीछिन् । चम्किलो मलमलको वस्त्र पहिरन तिनलाई दिइयो वस्त्र सन्तानहरूका धार्मिक कार्य हुन् । (पवित्र बाइबल, प्रकाश १९:८/९ ) अनि ती स्वर्गदूतले मलाई भने "यो लेख थुमाका विवाहका भोजमा निमन्त्रणा पाउनेहरू धन्यका हुन् । तिनले फेरि भने परमेश्वरका सत्य वचनहरू यी नै हुन् । यसो भए बाइबलले बताएको विवाहको अर्थ के हो ? (बुझ्नको लागि बाइबलको एफिसी ५:३१:३२ क) ।

त्यसकारण मानिसले आफ्नो आमा-बुबालाई छोडेर आफ्नी पत्नीसँग मिलिरहन्छ र ती दुवै एउटै शरीर हुनेछ । यो एउटा गम्भीर रहस्य हो । (पवित्र बाइबल, १ कोरन्थी ७: ४/५) "पत्नीले आफ्नो शरीरमाथि अधिकार राख्दिन तर उसको पतिले राख्छ । यसरी पतिले आफ्नो शरीरमाथि अधिकार राख्दैन तर पत्नीले राख्छे । पति पत्नी आफ्नो पारस्परिक संसर्गदेखि एक अर्कालाई इन्कार नगर ।"

यसरी दुलही तयार गरिएको छ । विवाह भोजको निम्ता दिनुको साथै पति पत्नीको शारीरिक संसर्गबारे बताइएको छ । (प्रकाश २२:१७) पवित्र आत्मा र दुलही भन्नुहुन्छ "आउनुहोस्" जसले सुन्छ त्यसले भनोस् जे तिर्खाउँछ त्यो आओस् जसले इच्छा गर्छ त्यसले जीवनको पानी सित्तैमा लिओस् । स्वर्गीय यरूशेलमले जीवनको पानी दिनुहुन्छ र सो ग्रहण गरेपछि मात्र अनन्त स्वर्गीयराज्यमा प्रवेश हुनेछौं । पवित्र आत्मा र दुलही भन्नुहुन्छ "आउनुहोस्" जसले सुन्छ यसले भनोस्, आउनुहोस् जो तिर्खाउँछ त्यो आओस् जसले इच्छा गर्छ त्यसले जीवनको पानी सित्तैमा लिओस्" । (पवित्र बाइबल, प्रकाश २२:१७) ।

तर माथिको यरूशेलम स्वतन्त्र छ जो हाम्री आमा हुन् भनिएको छ (पवित्र बाइबल, गला ४:२६) । यरूशेलम मन्दिरबाट निस्किएको नदीको पानीमा उम्रिएका फलफूल र पात मन पराउनेहरूले जीवन प्राप्त

गर्दछन् । जीवनको पानी नमिले मानिसहरू नयाँ यरुशेलममा प्रवेश गर्न सक्दैनन् । (पवित्र बाइबल, ३ जक ४७.१/१३) ।

स्वर्गीय माताको सिंहासनबाट जीवनका पानी बगिरहेको र त्यसलाई ग्रहण गर्नेहरू सजिलै स्वर्गीयराज्यमा प्रवेश गर्नेछन् । (पवित्र बाइबल, प्रकाश २२:१/२, २:५) ।

यी तमाम बाइबलीय वचनहरूलाई हेर्दा बाइबलभित्र यरूश्लेम परमेश्वरको अस्तित्व भएको र यरूश्लेमले नै जीवनको पानी दिन बताइएको छ । यहाँ जेजति जड पदार्थ छन्, दृश्यमय भौतिक वस्तुहरू छन्, ती सबै परमेश्वरको कल्पनाको उपच हुन् । यिनको कुनै स्वतन्त्र अस्तित्व हुँदैन । परमेश्वरको अनुग्रहमात्र जीवनको मुक्ति सम्भव हुने मान्दछ ।

# इन्द्राणीदेवीको पूजा र मरियमको उपसना

प्राचीन भारतका केही समुदायले इन्द्राणी देवीको आराधना गर्दथे । उनीहरूले इन्द्राणी र उनको छोराको पूजा गर्ने गर्दथे । प्राचीन भारतको यो आमा र छोराको प्रभाव बेबीलोनी धर्ममा पर्न गयो । विस्तारै जर्मनीमा छोरालाई बाहुमा लिएका इन्द्राणीदेवी नै हेरदादेवीको रूपमा आएको जनविश्वास छ । मिश्रमा चाहिँ इन्द्राणीदेवीलाई वेवीलोनको आमासरहकी देवी इसिस र त्यसको छोरो होरोसको स्वरूप खोपिएको छ ।

यसरी भारतका केही समुदायविशेषका कुलायनी देवीको रूपमा परिचित इन्द्राणीदेवी र उनको बच्चाको पूजाको प्रभाव रोमसम्म फैलिएर व्यापकरूपले प्रचलनमा आयो । वर्तमान भारतको एउटा समुदायको कुलदेवताको पूजा प्रथा बेवीलोन हुँदै खीष्टीयनमण्डलीमा मिसिन पुग्यो । क्याथोलिक मण्डलीमा मिरियमलाई येशूकी आमा हुन् भन्दै उनको मूर्ति बनाएर त्यसको अगाडि प्रार्थना गर्दै परमेश्वरकी आमाको रूपमा आदर गरिरहेका छन् । उनीहरू परमेश्वरलाई जन्माएकी भन्दै सृष्टिकर्ताकी आमा हो भनी तर्कअगाडि सारेका छन् ।

बेवीलोनमा निम्रोद नामका एक शक्तिशाली राजा थिए । उनकी सेमिरामिस नामकी पत्नी थिइन् । जसले आफ्नो पतिको आड लिएर ठूलो अधिकार प्रयोग गर्दै आएकी थिइन् । जब निम्रोदको मृत्यु भयो तब रानीले आफ्नो पति सूर्यदेवता भएका र उनको छोरालाई सूर्यदेवताको अंश भएको बताइन् । उसबाट जन्मिएका छोराको नाम तम्मुज नाम दिएर निम्रोदको पुनर्जन्म भयो भनी प्रचार गरिन् । सेमिरामिस देवीको रूपमा तम्मुजलाई बोकिरहेको बेवीलोनी सभ्यतामा यद्यपि देखिन्छ । यसरी पूर्वीय धार्मिक दर्शनभित्रको कुलायन प्रभाव पश्चिम क्षेत्रमा समेत परेको देखिन्छ ।

# ख्रीष्टीयनहरूमा सूर्य, चन्द्रमा र ताराहरूको स्थान

डिसेम्बर २५ सूर्यको जन्मदिन ख्रीष्टीयनहरूले सूर्यको प्रतिमूर्ति क्रुसको अगाडि प्रार्थना गरी सूर्यलाई उच्च सम्मान र आदरको साथ आराधना गरेको प्रष्ट देख्न सकिन्छ । हरेक आइतवार सूर्यपूजाको दिन क्रुस (सूर्य प्रतिमा) साक्षी राखी ज्योति स्वरूपमा स्मरण गर्दछन् । चेक गणतन्त्रको प्राग भन्ने स्थानमा सुनले सिंगारिएको मरियमको प्रतिमा भएको गिर्जाघर छ, जसलाई Kostel panny Marie Tynem भनिन्छ । सूर्यको प्रकाशबीचमा त्यो मूर्ति अत्यन्तै सुन्दर र शरीरमा ताराहरू जोडिएको छ । मरियमलाई अर्धचन्द्रमा माथि खडा गरिएको दृश्य अत्यन्तै मनमोहक छ । यस्ता सुन्दर तस्विरहरू जर्मनको म्युनिक सहर, मरिनाप्लाजमा भएको Marien Saule भन्ने मरियमस्तम्भ, स्लोभाकियाको सिचेमा भएको The Immaculate प्रतिमा, इटालीको रोमको Basilica Di Santa Maria Maggiore गिर्जाघरमा भएका Ave Regin Pacis भन्ने मरियमको मूर्तिलगायत विश्वभरका थुप्रै मरियमका मूर्तिहरूमात्र होइन गिर्जाघरका भवन, गुम्बा, खावाहरूमा सूर्य, चन्द्र, ताराहरू कुदिएको देख्न पाइन्छ ।

यसबाट के प्रष्ट हुन्छ भने प्राचीन भारतका केही समुदायले इन्द्रेणी र उनको छोराको पूजा गर्ने प्रचलन, आद्यगुरु शंकराचार्यले दिएको ज्ञान र इतिहासलाई गहिराईमा गएर नियाल्ने हो भने पुरानो करार बाइबलमा भनिएको यहोबा परमेश्वरले नोहा, मोशा आदिलाई दिएको ज्ञान, अगमवाणीको प्रकृति र शैलीसँग पूर्णतः मेल खान्छ । यस पवित्र रहस्यले बाइबलमा भनिएका अगमवक्ता मोशा, नोहा आदिलाई यहोबाको ज्ञान दिने गुरु अरु कोही नभई आद्यगुरू शंकराचार्य र उनका प्रिय शिष्यहरू हुन् भन्ने सिद्ध हुन्छ । वैदिक धर्म, संस्कृतिले प्रारम्भ गरेको सूर्य, चन्द्र र ताराहरूको पूजाको प्रभाव खिष्टियन मण्डलीले अनुशरण गरेको पाइन्छ ।

# दानिएल झुट कि प्रोटेस्टेण्ट सैतान ?

बाइबलभित्र प्रशस्तमात्रमा विरोधाभास भनाई र व्याख्या पाइन्छ । त्यसमध्येको एक प्रकरणको उठान गर्न चाहान्छु । आदमको पतनपछि परमेश्वरले सर्पको स्वरूपमा प्रकट भएको शैतानलाई हाम्रो मानवीय समाजले सजिलै बुझ्न सकिने गरी बताउनुभएको छ । परमेश्वरले मानिसलाई यस्ता डरलाग्दा परिस्थितिबाट जोगाउन नबुकदनेरको सपनाको रहस्य बताइदिएर रगतद्वारा किनिएको मण्डलीचाहिँ ईश्वरीय मण्डली र प्रोटेण्ट मण्डलीचाहिँ शैतानको मण्डली भएका सत्यता बाइबलद्वारा नै बताइदिनुभएको छ । यसरी परमेश्वरले दानिएलको अवगवाणीमार्फत परमेश्वरको विरोध गर्ने शैतानको वास्तविक परिचय जानकारी दिनुभएको छ ।

आफ्नो शासनकालको दोस्रो वर्षमा नबूकदनेरले सपनाहरू देखे । उनको मनमा छटपट्टी भयो र सुत्न सकेनन् । यसकारण राजाले जादूगरहरू, मन्त्रतन्त्र गर्नेहरू, बिजुवाहरू र ज्योतिषीहरूलाई उनले देखेको सपना बताइदिऊन् भनी बोलाउने हुकुम गरे । ........ उनले तिनीहरूलाई भने, "मैले एउटा सपना देखेको छु । त्यसले मलाई विचलित बनाएको छ र यसको अर्थ बुझ्न चाहन्छु ।"( पवित्र बाइबल, दान २:१-३) ।

दानिएलले जवाफ दिए, "तर स्वर्गमा एक परमेश्वर हुनुहुन्छ,, जसले रहस्यका कुराहरू प्रकट गर्नुहुन्छ । उहाँले महाराजा नबुकदनेसरलाई भविष्यमा हुने कुराहरू देखाउनुभएको छ । हे महाराजा ! हजुर ओछ्यानमा ढल्किरहनुभएको बेला हजुरको मन भविष्यमा के हुने होला भन्नेतर्फ गयो र रहस्य प्रकट गर्नुहुनेले भविष्यमा हुने कुरा देखाउनुभएको छ ।"(पवित्र बाइबल, दान २:२७-३०) ।

"हे महाराजा ! हजुरले हेरिरहनुहुँदा एउटा ठूलो सालिक उभिएको देख्नुभयो । यो सालिक विशाल र अत्यन्तै चहकिलो देखिन्थ्यो, त्यसको रूप भयानक थियो । त्यस सालिकको टाउको निक्खर सुनको, त्यसका छाती र हातहरू चाँदीका, त्यसका पेट र तिघ्राहरू काँसाका, त्यसका गोडाहरू फलाममा, त्यसका खुट्टाहरू केही फलाम र केही माटोका थिए ।" (पवित्र बाइबल, दान २:३१-३३) ।

"सपना यही थियो र अब महाराजालाई यसको अर्थ बताउनेछौँ । हजुर नै राजाहरूका महाराजा हुनुहुन्छ । स्वर्गका परमेश्वरले हजुरलाई राज्य, पराक्रम, शक्ति र महिमा दिनुभएको छ । ........जहाँ-जहाँ उनीहरू बस्छन्, उहाँले हजुरलाई उनीहरूमाथि अधिकार गर्न दिनुभएको छ । हजुर नै त्यो सुनको टाउको हुनुहुन्छ ।"( पवित्र बाइबल, दान २:३६-३८) ।

"हजुरपछि हजुरको भन्दा अलि कमजोर राज्य खडा हुनेछ । त्यसपछि काँसोको तेस्रो राज्यले सारा पृथ्वीमाथि अधिकार जमाउनेछ । अन्त्यमा फलामजस्तै बलियो चौथो राज्य आउनेछ, किनभने फलामले सबैथोक चकनाचुर परिदिएझैँ त्यसले अरू सबैलाई तोडफोड गरी तितरवितर पार्नेछ । ( पवित्र बाइबल, दान २:३९-४०) ।

"हजुरले यसका खुट्टा र औंलाहरू केही माटोले, केही फलामले बनेका देख्नुभएझैँ यो विभाजित राज्य हुनेछ । ( पवित्र बाइबल, दान २:४१) ।

"तैपनि यसमा केहीमात्रामा फलामको बल हुनेछ । जसरी हजुरले फलाम माटोसित मिसिएको देख्नुभयो । जसरी ती औंलाहरू केही फलाम र केही माटोका थिए, त्यसरी यी राज्य केही बलियो, केही सजिलैसित टुक्रिने हुनेछ । ( पवित्र बाइबल, दान २:४१-४२) ।

"हजुरले फलाम माटोमा मिसिएको देख्नुभएझैँ मानिसहरू पनि मिश्रित जाति हुनेछन् र एकतामा रहनेछैनन्, जसरी फलाम माटोसित मिल्न सक्दैन "(पवित्र बाइबल, दान २:४३) ।

बेबिलोनका राजा बेलसजरको पहिलो वर्षमा दानिएल आफ्नो ओछ्यानमा पल्टिरहँदा तिनले सपना र दर्शनहरू देखे । तिनले त्यस सपनाको सार लेखे । दानिएलले भने "मेरो दर्शनमा राती मैले हेरिरहँदा मेरोअगाडि आकाशका चार बतासहरूले ठूलो समुद्रलाई मन्थन गरिएका थिए । एक-अर्काबाट फरक चार ठूला पशुहरू समुद्रबाट निस्के । ( पवित्र बाइबल, दान ७:१-३) ।
चार ठूला पशुहरू समुद्रबाट निस्किए । यी पशुहरूले केलाई जनाएको होला त ?

"चार ठूला मशूहरूचाहिँ पृथ्वीबाट खडा हुने चार राज्यहरू हुन् ।"( पवित्र बाइबल, दान ७:१७) ।
"पहिलोचाहिँ सिंहजस्तै थियो र त्यसका पखेटाहरू चिलका जस्तै थिए । त्यसका पखेटाहरू नचुँडाएसम्म मैले हेरिरहेँ । त्यो मानिसजस्तै दुई खुट्टाले उभिने गरी जमिनबाट उठ्यो र त्यसलाई एउटा मानिसको हृदय दिइयो ।"( पवित्र बाइबल, दान ७:४) ।
"अनि मेरोअघि दोस्रो पशु थियो जुनचाहिँ भालुजस्तै देखिन्थ्यो । त्यसलाई शरीरको एकापट्टिबाट उठाइयो । त्यसका मुखका दाँतहरूका बीचमा तीनओटा करङहरू थिए । त्यसलाई यस्तो आज्ञा दिइयो "उठ् र खान सक्ने जती मासु खा !" ( पवित्र बाइबल, दान ७:५) ।

"त्यसपछि मैले हेरेँ । त्यहाँ मेरोअघि अर्को पशु थियो जुनचाहिँ चितुवाजस्तै देखिन्थ्यो । अनि त्यसको पिठ्यूउँमा चराको जस्तै चारवटा पखेटाहरू थिए । त्यस पशुका चारओटा टाउकाहरू थिए । त्यसलाई शासन गर्ने अधिकार दिइयो ।"( पवित्र बाइबल, दान ७: ६) ।

"त्यसपछि राती दर्शनमा मैले देखेँ । मेरोअघि भयङ्कर, डरलाग्दो र अत्यन्तै शक्तिशाली चौथो पशु थियो । त्यसको ठूला-ठूला फलामका दाँतहरू थिए । त्यसले आफ्नो सिकारलाई चकनाचुर पारी खाइदिन्थ्यो, बाँकी रहेकालाई खुट्टाले कुल्चीमिल्ची पाथ्र्यो । अघिका पशुहरूभन्दा त्यो फरक थियो, त्यसका दशवटा सिङहरू थिए ।"(पवित्र बाइबल, दान ७:७) ।

"जसै म ती सिङहरूका बारेमा विचार गर्दै थिएँ । मेरोअघि एउटा सानो सिङ थियो, जुनचाहिँ तिनीहरू मध्येबाट उम्रेको थियो । पहिलेका सिङहरूमध्ये तीनवटाचाहिँ त्यसको सामु जरैसमेत उखेलिए । मानिसका आँखाजस्तै त्यस सिङका आँखा थिए । अहङ्कारी कुरा गर्ने त्यसको मुख थियो ।" ( पवित्र बाइबल, दान ७:७) ।

"तिनले मलाई यसरी बताए, 'चौथो जनावरचाहिँ पृथ्वीमा देखा पर्ने चौथोराज्य हो । योचाहिँ अरु राज्यहरूभन्दा फरक हुनेछ । समस्त पृथ्वीलाई कुल्चीमिल्ची पारी निल्नेछ । दश सिङहरू त्यस राज्यबाट आएका दस राजाहरू हुन् । त्यसपछि पहिलेको भन्दा फरक अर्को राजा खडा हुनेछ । उसले तीन राजाहरूलाई दबाउनेछ ।"(पवित्र बाइबल, दान ७: २३-२४) ।

"उसले सर्वोच्चको विरुद्धमा बोल्नेछ । उहाँका पवित्र जनहरूलाई अत्याचार गर्नेछ । छुट्याइएको समय र व्यवस्था फेर्न प्रयत्न गर्ने छ । पवित्र जनहरू साढे तीन वर्षसम्म उसको हातमा सुम्पिइनेछन् । ( पवित्र बाइबल, दान ७:२५ ) ।

दानिएलको यस अगमवाणी सार र रहस्य यस्तो हुन्छ 'राजाले सपना देख्छन् अनि बिर्सन्छन् । दानिएलले सपनाको रहस्य बताइदिन्छन् । उनको सपनामा सालिक देखा पर्छ । टाउको सुनको वेवीलोनराज्य (इ.पू. ६०५-५३९) लाई जनाउँछ । वेवीलोनलाई जित्ने राज्य मादी र फारसराज्य (ई. पू.५३९-३३१) चाँदी, चाँदीको छाती र हात हो । मादी र फारसराज्यलाई जित्ने अलेक्जेण्डरको राज्य ग्रीस (इ.पू.३३१-१६१) चाहिँ काँसोको तिघ्रा हो । ग्रीसलाई पराजय गर्ने फलामचाहिँ पोपतन्त्र ( इ.पू. ४७६-येशूको आगमनसम्म) रोमी साम्राज्यपछि युरोपमा एकीकरणको अभियान EC (युरोपेली समुदाय) देखि EU (युरोपेली संघ) समेत निर्माण भएको छ । फलाम र माटो भन्नु चाहिँ एकता यिनीहरूबीच छैन भन्ने बुझिन्छ । साथै सजिलै टुक्रन सक्छ भनिएको हो ।

त्यस्तै दानिएल अध्याय ७ ले चाहिँ चार पशु (राज्यहरू) लाई सिंह (वेवीलोन) सिंहको पखेटा झर्नुलाई वेवीलोनको शक्ति कमजोर पतन संकेत गरेको छ ।

दोस्रो, पशु भालु (मादी-फारस), एकापट्टी खुट्टा उठाएको फारस बलियो राज्य, मुखमा तीन वटा कर- वेवीलोन, लिडियार मिश्र देशलाई जित्नु भन्ने संकेत दिएको छ ।

तेस्रो, पशु चितुवा ग्रीसलाई संकेत गरेको छ त्यसमा भएका पखेटाले छोटो समय (८ वर्षमा) ८००० कि.मी. विशाल भूमिलाई अलेक्जेण्डरद्वारा विजय गर्नुलाई संकेत गरेको छ । चारवटा टाउकोले अलेक्जेण्डरको मृत्युपश्चात् कासान्दार, लिसिभाकस, सेलिउकसर टोलेमीको शासनलाई बुझाउँछ ।

चौथो पशुचाहिँ रोमी साम्राज्यको व्याख्या गरेको छ । दश औँल, दश सिङ्गले दश राज्यको वर्णन गरेको छ । ओस्ट्रगोथ, स्वेमि, भिजगोथ, हेरूली, भ्यानडल्स, फ्राङ्क, लोम्वार्ड, बुर्गण्डियन्स, आलेमानि, एङ्लो र चाक्सनलाई जनाउँछ ।

फरक सिङ्ग पहिलेको भन्दा फरक अर्को राजा रोमन क्याथोलिक हो । यसले तीनराजा (हेरली, भ्यान्डल्स र ओस्तगोथ सबै रोमन क्याथोलिकमा परिवर्तन गरी पूर्ण अधिकार लियो) दबाउनेछ । (पवित्र बाइबल, दान ७:८, २३, २४) ।

सानो सिङ्गले (दान ७:२५) सानो सिङ्गले एरीसवादलाई विश्वास गऱ्यो । जसले आफ्नो पोपलाई परमेश्वर जतिकै सहमत गऱ्यो । धार्मिक अन्धकारको युगमा ५ करोड मानिसलाई माऱ्यो । उनीहरूको विरोध गर्नेलाई फाँसी दिन्थ्यो । ठहराइएको तीनचरणको सात चाडलाई फेऱ्यो । आइतवारको सेवा, डिसेम्वर २५मा क्रस पूजा, सन्तहरूको मूर्तिपूजा भित्र्यायो । यसले साढे तीन वर्ष शासन गऱ्यो । ४२ महिना हो अनि १२६० दिन भनेको १२६० वर्ष हो । ई.सं. ५३८ मा रोमन क्याथोलिकले तीन सिङ्गमध्ये अन्तिम सिङ्ग ओगट्रोगोलाई आफूमा समावेश गरेको बेलादेखि सन् १९९८ मा फ्रान्सको क्रान्तिले पोप पीउस छैठौँलाई गिरफ्तार गरी पोपतन्त्र हुँदा १२६० वर्ष बित्न पुग्यो । समग्रमा भन्दा दानिएलको अगमवाणीले के देखाउँछ भने रोमन क्याथोलिकलाई परमेश्वरको विरोध गर्ने सङ्गठनको रूपमा चिनाउँछ । रोमन क्याथोलिकको सिद्धान्त क्रुस, आइतबार सेवा क्रिसमसलाई अनुसरण गर्ने प्रोटेण्टेड मण्डली पनि शैतानले चलाएको मण्डली हो भनेर बाइबलले गवाही पेश गर्दछ ।

# रोमन क्याथोलिक पशु हो

रोमन क्याथोलिकको विषयमा बुझ्नको लागि परमेश्वरले आफ्नो अगमवक्ता दानिएलमार्फत दिनुभएको अगववाणी र प्रकाश १३ को वचनलाई गहिरिएर अध्ययन गर्न जरूरी देखिन्छ । अब हेरौं प्रकाश १३ को वचन र यसको अर्थ । यो समयमा प्रकाश १३ को अगमवाणी अध्ययन गरौं । परमेश्वरको दानिएल ७ द्वारा रोमन क्याथोलिकले परमेश्वरको विरोध गर्ने सङ्ठन हो भनेर जानकारी दिइएको छ र प्रकाश १३ मा पनि यस विषयलाई अझ विस्तृतरूपमा जानकारी दिनुभएको छ ।

समुद्रबाट एउटा पशु निस्किआएको मैले देखैं, जसका दशवटा सिङ र सातओटा शिर थिए । त्यसका सिङमा दशवटा मुकुट थिए र त्यसका शिरमा ईश्वर-निन्दाको नाउँ थियो । ( पवित्र बाइबल, प्रकाश: १३:१) ।

मैले देखेको त्यो पशु चितुवाजस्तै थियो, त्यसका खुट्टाहरू भालुका जस्ता थिए । त्यसको मुख सिंहको जस्तो थियो । त्यस अजिङ्गरले त्यस पशुलाई आफ्नो शक्ति, आफ्नो सिंहासन र ठूलो अधिकार दियो । ( पवित्र बाइबल, प्रकाश १३:२) ।

मानिसहरूले अजिङ्गरको पूजा गर्दथे, किनकि त्यसले आफ्नो अधिकार पशुलाई दिएको थियो । तिनीहरूले यसो भन्दै पशुको पूजा गरे, "यो पशुजस्तो अरु को छ ? यसको विरूद्धमा को लड्न सक्ने ? ( पवित्र बाइबल, प्रकाश १३:४) ।

त्यसलाई अहङ्कारी र ईश्वर-निन्दक शब्दहरू उच्चारण गर्ने मुख दिइयो । त्यसलाई बयालीस महिनासम्म अधिकार चलाउने अनुमति

दिइयो । परमेश्रको विरूद्धमा निन्दा गर्न, उहाँको वासस्थान र स्वर्गमा बस्नेहरूसमेत सबैको निन्दा गर्नलाई त्यसले आफ्नो मुख खोल्यो । अनि त्यसलाई सन्तहरूसँग लडाइँ गर्न र तिनीहरूलाई जित्न अनुमति दिइयो सबै कुलहरू, मानिसहरू, भाषाहरू र जातिहरूमाथि त्यसलाई अधिकार दिइयो । ( पवित्र बाइबल, प्रकाश १३:५-७) ।

समुद्रबाट निस्किएको दश सिङ र सातवटा टाउको भएको पशुलाई ४२ महिना १२६० वर्ष सन्तहरू विरूद्ध शासन गर्ने अुनमति पाएको अगमवाणी दानिएलको ७ को सानो सिङ्को पशु हो । उक्त पशु रोमन क्याथोलिकको सिद्धान्त ग्रीसको अरिस्टोटलको दर्शनमा आधारित थोमस एक्विनासको धर्मदर्शनको सङ्ग्रह हो । दानिएलका अगमवाणीलाई हेर्ने हो भने मादी र फारसमा सूर्य देवता मिथ्रालाई (आइतवार, क्रिसमस) लाई पूजा गरेको इतिहास छ । सिंहजस्तो मुखले वेवीलोनको मूर्तिपूजालाई संकेत गर्छ । रोमन क्याथोलिकमा क्रूस, मिरियम, सन्तहरूको मुक्ति पूजा हुन्छ । रोमन क्याथोलिक मुक्ति पूजाको जमघट देखिन्छ । यहाँ भनिएको शक्ति दिने अजिङ्गर (पवित्र बाइबल, प्रकाश १२:९) चाहिँ शैतान दियावलस हो । शक्ति पाउने पशुचाहिँ धार्मिक सङ्गठन रोमन क्याथोलिक हो ।

अझ अर्को प्रमाण सुन्दा नै शरीर उकुसमुकुस भएर आउँछ । पशुले (रोमन क्याथोलिकले) ६६६ संख्या लिएको छ । अझ एउटा प्रमाण ६६६अध्यायमा रोमन क्याथोलिक शैतानबाट शक्ति पाएको सङ्गठन हो भन्ने वास्तविकता जानकारी दिने अझ अर्को एउटा स्पष्ट प्रमाण पनि छ । (पवित्र बाइबल, प्रकाश १३) ।

बुद्धिमत्ता यसैमा छः जसको समझ छ, त्यसले त्यस पशुको संख्या जोडोस्, किनकि त्यो कुनै मानिसको संख्या हो । यो संख्याचाहिँ छ सय छयासी हो । ( पवित्र बाइबल, प्रका १३:१८) ।
यो पशु अर्थात् रोमन क्याथोलिकले ६६६ संख्या लिएको छ । ६६६ ले रोमन क्याथोलिकको परिचय दिएको छ ।

त्यसो भए क्याथोलिकको परिचय दिने ६६६ के हो ? १७ को अन्तिम भागलाई हेर्ने हो भने 'त्यस पशुको नाउँको संख्याभनिएको छ । पशुको नाउँ ६६६ भनिएकोले रोमन क्याथोलिकसँग अनिवार्य रूपमा यो नाउँ हुनुपर्ने देखिन्छ । रोमन क्याथोलिकको पोपले आफूलाई परमेश्वरको

पुत्रको प्रतिनीधि भन्ने उपाधि धारण गरेको छ, जसको आधिकारिक ( भ्याटिकन) ल्याटिन भाषामा "VICARIUS FILIIEI" यो भाषाको रोमन संख्यात्मक मान ६६६ हुन्छ । ल्याटिनभाषामा I=१, V=५ , X=१०, L=५०, C= १००, D= ५००, हुन्छ । अक्षर U चाहिँ स्वरवर्णको रूपमा प्रयोग गरिएको Uलाई विस्थापन गरिएको हो किनकि अक्षर V चाहिँ प्रकाशको पुस्तक लेखिएको समयमा थिएन ।

V(५)+I(१)+C(१००)+A(०)+R(०)+I(१)+V(५)+S(०)+F(०)+I (१)+L(५०)+I (१)+I (१)+D(५००)+E(०)+I (१)= ६६६ त्यसैले प्रकाश १३ को पशुचाहिँ निश्चय नै रोमन क्याथोलिक हो । परमेश्वरले दानिएलको अगमवणीमार्फत रोमन क्याथोलिक मण्डलीलाई परमेश्वरको विरोध गर्ने संगठन हो भनेर जानकारी दिनुभएको प्रष्ट हुन्छ । पछिल्लो समयमा विश्व शान्तिका लागि ई.सं. १९८६ अक्टोबर २७ तारिखदेखि रोमन क्याथोलिक चर्चले आफूलाई परिवर्तन गर्न लागेको देख्नु सबैका लागि गर्वको कुरो हुन आउँछ । परोपकार नै पुण्य हो भन्ने विचारले दिगो उन्नति, दीर्घकालीन शान्ति, भातृत्व र मुक्तिको विउ बोकेको छ भनेर जान्नु, त्यसकै भरपुर उपयोग गर्नु सबैमा समस्त मानवजातीको कल्याण हुन्छ भन्ने कुरा क्याथोलिक मण्डलीले समेत पछिल्लो समयमा अनुसरण गर्न थालेको देखिन्छ ।

# भूतको बासस्थान चर्च हो

खोजकले बाइबलको याक, प्रका, पत्र, का वचनलाई गहिरिएर अध्ययन, मनन् र चिन्तन गर्दा अचम्मको रहस्य लुकेको भेटैं । ती वचनहरूले चर्च नै भूतको बासस्थान भएको डरलाग्दो संकेत गरेको देखियो । यो गम्भीर रहस्य देखेपछि तिनका सार मानव समाजमा बाहिर ल्याउन कोशिस गरेको देखिन्छ ।

ती सात कचौरा लिने सात स्वर्गदूतहरूमध्ये एक जनाले मकहाँ आएर मलाई भने, "यता आऊ, म तिमीहरू धेरै पानीमा बसेकी त्यस महावेश्यालाई दिइएको इन्साफ देखाउनेछु ।"(पवित्र बाइबल, प्रकाश १७:१)

व्यभिचारी मानिस हो, संसारको मित्रता परमेश्वरसँगको शत्रुता हो भन्ने कुरा के तिमीहरूलाई थाहा छैन ? (याक ४:४)

ती स्वर्गदूतले मलाई भने, "तिमीले देखेका ती पानी, जहाँ त्यो वेश्या बसेकी छे, ती चाहिँ मानिसहरू, भीडहरू, जातिहरू र भाषाहरू हुन् ।" (वित्र बाइबल, प्रकाश १७:१५) ।

त्यससँग पृथ्वीका राजाहरूले व्यभिचार गरेका छन् । (पवित्र बाइबल, प्रकाशः १७:२) ।

अनि तिनले मलाई आत्मामा बोकेर एउटा उजाड स्थानभित्र लगे । त्यहाँ सातओटा शिर र दशवटा सिङ भएको ईश्वर-निन्दा नाउँहरूले भरिपूर्ण भएको चहकिलो रातो रङ्गको पशुमाथि बसेकी एउटी स्त्रीलाई मैले देखेँ । (पवित्र बाइबल, प्रका १७:३)

त्यस स्त्रीले बैजनी र चहकिलो रातो लुगा लगाएकी थिई, अनि त्यो सुन, रत्न र मोतीहरूले सिङ्गारिएकी थिई र घिनलाग्दा कुरा, अर्थात् त्यसका

व्यभिचारका अशुद्ध कुराहरूले भरिएको एउटा सुनको प्याला हातमा लिएकी थिई । (पवित्र बाइबल, प्रकाश १७:४) ।
त्यसको निधारमा एउटा नाउँ लेखिएको थियो : रहस्य पृथ्वीका वेश्याहरू र घिनलाग्दा कुराहरूकी आमा महान् बेविलोन । (पवित्र बाइबल, प्रकाश १७:५) ।
"यो सम्पूर्ण खीष्टियन समाजको आमामण्डली हो र दैवी प्रतिष्ठान हो, जो उन्नाइसौं शताब्दीभन्दा बढी समयसम्म अपरिवर्तित रूपले आएको छ ।"-द फेथ अफ मिलियनस ।

यसपछि ठूलो अधिकार भएका अर्को एउटा स्वर्गदूत स्वर्गबाट तल आइरहेको मैले देखेँ । तिनको वैभवले पृथ्वी उज्यालो भयो । तिनले यसो भनेर शक्तिशाली स्वरले कराए, "महानगरी बेबिलोनको पतन भयो, यो महानगरी भूतहरूको वासस्थान, हरेक अशुद्ध आत्मा र हरेक अशुद्ध तथा घृणित पंक्षीको अखडा भएको छ । किनकि सबै जातिहरूले त्यसको अशुद्ध कामवासनाको मद्य पिएका छन् । पृथ्वीका राजाहरूले त्यससँग व्यभिचार गरेका छन् । पृथ्वीका व्यापारीहरू त्यसको विलासिताको प्रभावले धनी भएका छन् । (पवित्र बाइबल, प्रका १८ :१-३) ।

तब मैले स्वर्गबाट यसो भनिरहेको अर्को आवाज सुनेः "हे मेरा मानिस हो १ त्यसबाट निस्केर आओ, नत्रता त्यसका पापहरूसँग तिमीहरूपनि सहभागी हुनेछौ । त्यसका विपत्तिहरू तिमीहरू भोग्नेछौ, किनकि त्यसका पापहरू स्वर्गसम्मै थुप्रो लागेको छन् । परमेश्वरले त्यसका अधर्महरू सम्फनु भएको छ । त्यसले जे गरेकी थिई त्यसलाई फर्काइदेओ त्यसले प्यालामा जे भरेकी थिई, त्यसको दोब्बर कडा हुनेगरी त्यसलाई देओ ।" (पवित्र बाइबल, प्रका १८ ४-६ ) ।

रोमन क्याथोलिक व्यभिचारी स्त्री 'वेश्यु हो भनिएको छ । यहाँ स्त्री भन्नाले चाहिँ मण्डलीलाई बुझाएको छ ।
१ पत्र ५:१३ अनुसार संसारको मित्रतालाई आत्मिक व्यभिचार भनी बाइबलले गवाही दिन्छ । धेरै पानीमा बसेको स्त्री (झुटो मण्डली) ले पृथ्वीका राजाहरू (विश्वका प्रमुख राष्ट्रहरू दशांशको चेन सिस्टमा गाँसेको) व्यभिचार गर्ने छ भनिएको छ । ईश्वर निद्राले भरिएको रोमलाई आफ्नो

कब्जामा लिएको रोमन क्याथोलिकमण्डलीसामु पुऱ्याए । जसले (पोप र पादरी) बैजनी र चम्किलो रातो लुगा लगाएर आराधनाको बेला सुनको प्याला प्रयोग गरी रहेको थिए । भव्य रूपमा रोमन क्याथोलिकहरू गिर्जाघर सुन, रत्न मोतीहरूले शोभायमान थिए । दशांशको नाममा पैसां उठाइरहेका (व्याभिचार गरिरहेका) छन् । अनि त्यसको निधारमा प्रष्टसँग वेश्याहरूकी आमा, २२०० प्रोटेस्टेण्टहरूको आमा, घिनलाग्दा कुरा ख्रीष्टमस, क्रुसपूजा, आइतवारको सेवा, दशांश संकलनजस्ता सिद्धान्तहरूको आमा महान् वेविलोन भनेर देखाइएको छ ।

"साँच्चै रोमन क्याथोलिक मण्डलीचाहिँ आफूलाई आमा हो भनी रहेको छ !"- द पेथ अफ मिलियन्स

पवित्र बाइबल, प्रकाश १८:१/६ लाई अध्ययन गर्दा महान् नगरी वेविलोन (रोमन क्याथोलिक) को पतन भयो । भूतहरूको वासस्थान अन्त्य हुनेछ । मैले स्वर्गबाट अर्को आवाज सुन हे मानिसहरू ! त्यसबाट निस्केर भाग नत्र त साना र ठूला सबै वेविलोन रोमन क्याथोलिक र त्यसका सिद्धान्त (दशांश उठाउने, क्रुस पूजा गर्ने, ख्रीष्टमस मनाउने आदि) पछ्याउने २२०० भन्दा बढी सम्प्रदायहरू सबैले महाविपत्ति भोग्नेछन् । त्यसका पापमा तिमीहरू सहभागी हुनेछौ भनी बाइबलले बताएको छ । यी सबै बाइबलीय वचनलाई हेर्दा चर्च नै भूतको बासस्थान हो भन्ने प्रष्ट हुन्छ ।

# नक्कली खीष्टहरूको बिग्बिगी

बाइबलमा नै नक्कली खिष्टीयनहरू पैदा हुने र शास्त्रविरूद्ध काम गर्ने बारेमा बयान पाइन्छ । बाइबललाई पवित्र ग्रन्थ मान्ने र येशूलाई परमेश्वरको पुत्र ठान्नेभित्र यति धेरै मतमतान्तर र विभेद छ कि त्यसको लेखाजोखा नै छैन । अन्तका दिनहरूमा "म खीष्ट हूँ भन्दै आउनेहरू देखा पर्नेछन्" भनी बाइबलले नै बताएको छ ।

याद राख मैले तिमीहरूलाई अघिबाटै भनिदिएको छु "यदि तिनीहरूले तिमीहरूलाई 'हेर, उनी उजाड स्थानमा छन्' भनी भन्छन् भने बाहिर निस्केर नजाओ ।

अनि "हेर, उनी भित्री कोठाहरूमा छन् ।' भन्ने पनि विश्वास नगर । किनकि जसरी बिजुली पूर्वबाट चम्कँदा पश्चिमसम्मै उज्यालो हुन्छ त्यसरी नै मानिसको पुत्रको आगमन हुनेछ ।"(पवित्र बाइबल, मत्ती २४:२५-२७) ।

तब तिमीहरूलाई कसैले "हेर, खीष्ट यहाँ छन् कि त्यहाँ छन् भन्यो भने विश्वास नगर किनकि झुटा खीष्टहरू र झुटा अगमवक्ताहरू खडा हुनेछन् ।" हुन सके चुनिएकाहरूलाई पनि भड्काउनलाई ठूलाठूला चिह्नहरू, आश्चर्यका कामहरू देखाउने छन्" भनिएकोले सत्यताभित्र भएका मानिसहरूमा चाहिँ यो वचन लागु हुँदैन । पहिले दोस्रो येशूखिष्टलाई ग्रहण गरेको अन्तिम सन्तहरूचाहिँ खीष्ट उजाड स्थानमा आउनुभए तापनि बाहिर जानु भएन र भित्री कोठामा हुनुहुन्छ भने तापनि विश्वास गर्नुहुँदैन भन्ने वचन हो । (पवित्र बाइबल, मत्ती २४:२३-२७) ।

अन्तका दिनहरूमा भुटा खीष्टहरू धेरै प्रकट हुने कुरा जान्नु भएको परमेश्वरले दिनु भएको मत्ती २४ को वचन हो । अहिले कोरिया

पनि झुटा खीष्ट करिब १५ नाघिसकेको छ । संसारभरि हजारौँ झुटा खीष्ट छन् । ( आन साङ होङ, परमेश्वरको रहस्य र जीवनको पानीको मूल पृ. २२७) ।

अहिले संसारभरमा २२ हजारभन्दा बढी खीष्टीयन संप्रदायहरू भएका छन् । नेपालमा मात्र १५ थरी भन्दा बढी संप्रदाय भएका छन् । कुनकुन सम्प्रदायका छन् ? यिनीहरूका कारण उत्पत्ति ३:१५ मा उल्लिखित स्त्रीको सन्तान र शैतानको सन्तानबारे भविष्यवाणी मानव इतिहासमा साकार हुँदै गएको देख्न र सुन्न पाउँछौं ।

# एक लाख चौवालीस हजारमात्र स्वर्ग जान्छन्

समयको अर्थ लगाउँदा, नयाँ तथा पुरानो करार बाइबलमा एक दिनलाई एक वर्ष वा एक दिनलाई हजार वर्ष भनी अर्थ लगाउन सक्ने गरेर लेखिएको छ । (पवित्र बाइबल, गन्ती १४:३४, इज ४:५-६, २ पत्र ३:८ ) ।

मानिसको संख्याको विषयमा भने एक जनालाई दस जना अथवा एक जनालाई हजार जना भनी अर्थ लगाइएको उदाहरण छैन । त्यसैले सम्पूर्ण बाइबलविद्हरूले एक लाख चौवालीस हजारलाई उल्लिखित संख्या जतिको - त्यति नै हो, भनेर अर्थ लगाएका छन् । विश्वासीहरूको संख्या धेरै भएका मण्डलीका पाष्टर र अगुवाहरूले चाहिं बाइबलमा भएको संख्यासँग आफ्नो मण्डलीको विश्वासीहरूको संख्या तुलना गरेर हेर्दा एकदमै ठूलो भिन्नता भएकोले, यो संख्यालाई बाइबलभन्दा भिन्नै प्रकारले अर्थ लगाउने कोशिश गरिरहेछन् । बाइबलबाट उत्तर नआएको कारणले आममानिसको सोचाई लिएर जबरजस्ती उल्टापुल्टा अर्थ लगाउने मानिसहरू धेरै छन् । कोहीचाहिँ सोच्दा-सोच्दा उत्तर नपाएर एक लाख चौवालीस हजारचाहिँ प्राकृतिक इस्राएल देशभित्रबाट मुक्ति पाउनेहरूको संख्या हो, भनेर टार्ने पनि छन् । यस्ता मानिसहरू बाइबल पनि नजान्ने र परमेश्वरको मुक्तिको प्रबन्ध पनि नजान्ने मानिसहरू हुन् । (परमेश्वरको रहस्य र जीवनको पानीको मूल-२०१२ पृ.७७आनसाङ्ग होङ्ग) ।

बाइबलको (एफि २: १२-१८) मा लेखिएको छ : पुरानो करारको समयमा चाहिँ इस्रायली र अन्य जातिबीचको त्यो पर्खाल भत्किएकोले यहुदी र अन्य जातिमा कुनै विभाजन छैन । किनकि तिमीहरूमध्ये जतिको खीष्टमा बप्तिस्मा भयो, तिमीहरू सबैले खीष्टलाई धारण गरेका छौ । अब

नता यहुदी छ, न ग्रीक, न कमारा, न फुक्का, न त पुरुष, न त स्त्री छ, किनभने खीष्ट येशूमा तिमीहरू सबै एउटा हौं । (पवित्र बाइबल, गला ३: २७-२८) ।

यहुदी र अन्य जातिमा केही भेद छैन । उहाँ एउटै प्रभू सबैका प्रभू हुनुहुन्छ । उहाँलाई पुकार्नेहरू सबैलाई आफ्नो प्रशस्त आशिष दिनुहुन्छ । (पवित्र बाइबल रोम १०:१२) ।

एउटै पवित्र आत्माद्वारा हामी सबैले एउटै शरीरमा बप्तिस्मा पाएका छौं - यहुदी वा ग्रीक, कमारो र फुक्का, हामी सबैलाई एउटै पवित्र आत्माबाट जिउन दिइयो । (पवित्र बाइबल, १ कोर १२:१३)ग्रीक र यहुदी, खतनामा र बेखतनाका, अशिक्षित, असभ्य, कमारा र फुक्काको भेद रहने छैन तर खीष्ट नै सबै कुरामा हुनुहुन्छ ।(पवित्र बाइबल, कल ३:११) ।

यसरी विभिन्न ठाउँमा स्पष्टरूपले प्रमाण दिइएको भए तापनि यहुदीहरूको मुक्ति अन्य जातिहरूको भन्दा विशेष छ भन्नु चाहिँ परमेश्वरको मुक्तिको प्रबन्ध के हो ? भन्ने नजानीकन बोलेको कुरा हो । क्रुसपछि यहुदी बेग्लै रअन्य जाति बेग्लै गरेर भेद गरिएको छैन भन्ने जान्नुपर्दछ । त्यसैले एक लाख चौवालीस हजारको विषयमा लेखिएको छ कि : "तब मैले मोहोर लगाइएकाहरूको संख्या सुनैं । तिनीहरू एक लाख चौवालीस हजार थिए र तिनीहरू इस्राएलका सन्तानको प्रत्येक कुलबाट थिए ।" ( पवित्र बाइबल, प्रकाश ७:४) ।

सिंहासनको र ती चार जीवित प्राणीहरूका र धर्म-गुरुहरूका अगाडि तिनीहरूले एउटा नयाँ गीत गाउँदथे । पृथ्वीबाट मोल तिरी छुटाएका एक लाख चौवालीस हजारले बाहेक कसैले त्यो गीत सिक्न सक्दैन्थ्यो । (पवित्र बाइबल, प्रकाश १४:३) ।

भनिएकोले, एक लाख चौवालीस हजारमात्र भन्ने अर्थ हो । पवित्र बाइबल, (प्रकाश ७: १-४ र प्रकाश १४:१-३) तुलना गरेर अध्ययन गर्ने हो भने निश्चित उत्तर प्राप्त हुन्छ ।

भविष्यवाणी भएअनुसार १ लाख ४४ हजारमात्र स्वर्ग जाने सिद्ध हुन्छ । पृथ्वीको सृष्टिदेखि नयाँ येरुशेलम जाँदासम्म खरबौं मानिसहरूबाट

१ लाख ४४ हजारमात्र स्वर्ग जाने भन्ने अर्थ हो भनी बुझ्न सकिन्छ । उनीहरूले बाहेक अरू कसैले सिक्न नसक्ने गीत गाइरहेको बाइबल बताउँछ । कुनै पनि गण, संघ, समूह वा मण्डलीलाई महत्व नदिई बाइबलीय वचनलाई अनुसरण गर्ने हो भने खरबौं मानिसहरूमध्ये १,४४,००० को लागि मात्र स्वर्गको ढोका खुल्ला छ । प्रकाशको वचनले भन्छ, कि मानवीय समझले लिएका निर्णयलाई होइन, परमेश्वरले लिएका निर्णयलाई हर्ष बढाई र प्रोत्साहन गर्न सक्नुपर्छ ।

# आनसाङहोङ जागृत मानिस हुन्

सुख, सम्पत्ति, सन्तान स्वर्ग आदिको प्रलोभन र डर देखाएर हजारौँ वर्षदेखि संसारमा नारीलाई पुरुषले जीवनभरि दासी बनाई सारा काम धन्दामा जोताउँछन् । रातभरि ओछ्यानमा आफ्नो वासना तृप्त गर्दछन् । अफ्रिकाका अधिकांश देशहरूमा पत्नीलाई मार्नु वैधानिक थियो । भेडा, बाख्राजस्तै आइमाईलाई बली दिइन्थ्यो । बेइमान पुरुषहरू नारीलाई शोषण गर्न अनेक कथाकहानी लेख्छन् । जसको आडमा शोषण गर्न पुग्छन् । शोषक र बेइमानी पाष्टरहरू बाइबलमा समेत नारीलाई बदनाम गरी अधिकारच्यूत गर्न सफल भए ।

येशू यहुदीको बाह्र कुलमा मात्र जन्म लिन्छन् । मुर्खताको पनि हद हुन्छ । योभन्दा अर्को पागलपनको नमूना के हुन सक्छ । यी कुराको गहिराईमा पुगेर हेर्दा कथित यहुदी र तीनको जुठोमा बिकेर तयार गरिएको षड्यन्त्र हो भन्ने बुझिन्छ । बिनापिता, बिनामाता, बिनावंशावली येशूको जन्म हुने अगमवाणीअनुसार येशू अन्य जातिमा जन्मने वचन हिब्रु ७:३ मार्फत देखाइदिए । हजारौँ वर्षसम्म जातिवादको नाममा अरबौं मानिसहरूको जिउने अधिकार लुटिएको छ । हजारौँ वर्षसम्म जन्मजात दासताको जन्जिर पहिर्‍याई शोषण गर्ने यी तथा कथित यहुदी खीष्टियनहरूले आफ्नो शोषणतन्त्रको जाल बाइबलमार्फत संसारभर फैलाएका छन् ।

येशू इजरायलमा मात्र जन्मे रे । योभन्दा हाँस्यास्पद कुरा अरु के होला । येशू कुनै प्रान्तको मात्र हकदार हुने यो सरासर झुट हो । यो यहुदी खीष्टीयन झुटलाई चिरी छाडे कोरियामा जन्मिएका आनसाङहोङले । उनी मौन भए तर प्रमाणित गरेर देखाइदिए । बौद्ध परिवार अनि इजरायलबाहेक अरु प्रान्तमा पति येशूको जन्म हुनेछ । पवित्र

बाइबल यशैयामार्फत येशू यरूशेलमबाहेक अरु प्रान्तमा जन्मन सक्ने अगमवाणी देखिन्छ ।

आनसाङहोङ जागृत मानिस हो । उनले शताब्दीदेखि चल्दै आएको झुटलाई चिर्ने काम गरे । स्वर्गीय राज्यमा महिला प्रवेश हुन सक्दैन, ऊ त पुरुषको रूपमा परिवर्तन भएर जान्छ भन्नेलाई यो झुटलाई झुट सावित गराइदिए । निरञ्जन रूपी यहोवाद्वारा तयार गरिएको स्वर्गीय संसारमा माता पनि छ भनेर गवाही दिए । विश्वभरका खीष्टियनहरू ( यहुदी) मा पीडा भयो । आनसाङहोङबाट प्रस्तुत सत्यवान अभिव्यक्ति सुनेर उनीहरूको रोजीरोटी र व्यापार बन्द हुने डर र त्रास फैलियो । रातारात विज्ञप्ति निस्कियो ; झुटो खीष्टियनमण्डली झुटा सन्देश बाहक भनेर । वास्तवमा यस्ता घातक बाइबलका वचन आध्यात्मिक संसारको क्यान्सर हो । यस्तो क्यान्सरको शिकार भएका छन् तथाकथित खीष्टीयनहरू ।

अर्को तीतो सत्य आज विवाहको विषयमा खीष्टीयनहरू गैह्रखीष्टियन र वैज्ञानिक दृष्टिकोणमा मूर्ख ठहरिएका छन् । खीष्टीयनहरूमा हाडताता र रगतको नातामा विवाह गर्न छुट दिइएको छ । यस्ता नाताबाट जन्मिएका बच्चाहरू रोगी, अपाङ्ग र मन्दबुद्धिलगायत तुच्छ विचारधाराका हुने कुरा वैज्ञानिक प्रयोगबाट सिद्ध भएका छन् खीष्टियनहरू बाइबलको लेवी १८:६-२१ सम्म विवाहको कोसँग गर्न हुने/नहुने ? प्रष्ट बताइएको छ भन्दै ठूलाबा र काकाको छोराछोरी, दाजुबहिनी, दिदीभाइबीच विवाह गर्न हुन्छ भनी रगतको नातामा विवाह गराएको देखिन्छ । यसरी घरभित्र नै विवाह गराउन बाइबलले छुट दिएको बताउँछन् । यसले खीष्टीयनसंस्कार र धर्ममा फुस्रोपन ल्याइदिन्छ । यो सबै बाइबलका अव्यवहारिक र अवैज्ञानिक पदलाई हटाउन आनसाङहोङ सफल भएका थिए ।

तिनै आनसाङहोङले सेभेन्थ डे चर्चको बारेमा बोलेर अगम्वाणी पूरा गरिदिए । रोमन क्याथोलिकको सिद्धान्तबाट छुट्टिएर खडा गरिएका सेभेन्थ डे चर्च नै पछिल्लो समयमा शवथको दिन पालना गर्ने चर्चको रूपमा चिनिन्थ्यो । दोस्रो येशूखीष्टले त्यही सत्यतालाई यहुन्नाको सत्यता मानेर वप्तीस्मा लिने बाइबलका अगमवाणी गरिएको छ । आफूसँग शवथ

दिनको पालनाको सत्यता भएको कारण ऊ धनी भएको र आफूलाई अरू कुराको खाँचो नभएको बताउनेछ (प्रकाश ३:७) ।

उसलाई थाहा थिएन ऊ दुःखी, दरिद्र, अन्धा र नाङ्गो थियो । किनकि उसँग आफ्नो नग्नताको शर्म ढाक्न सेतो वस्त्र थिएन, (वस्त्र = थुमाको रगतद्वारा किचिएको सेतो वस्त्र बुझिन्छ, (प्रकाश ७:१३-१४) ।

ऊसँग आँखामा लगाउने मलम (मलम = परमप्रभूको आज्ञा र व्यवस्थाका नियमहरू भजन १९:९) हरू थिएनन् सो किन्नको लागि आनसाङ होङले सल्लाह दिंदा सेभेन्थ डे चर्चले स्वीकार गर्ने छैनन् ।

दाउदको मूलले सेभेन्थ डे चर्चलाई मुखबाट ओकलिदिने अगमवाणी गरिएको छ । प्रकाश ३:१६) जसको कान छ त्यसले सुनोस्, पवित्र आत्माले मण्डलीहरूलाई के भन्नुहुन्छ ।

प्रकाश ३:१४-२१ सम्म जस्ताको तस्तै बाइबलका वचन अध्ययन गरौं- यो कुरा आमिन, विश्वास योग्य, साँचोसाक्षी र परमेश्वरका सृष्टिको शासकले भन्दछ । मलाई तिम्रा कामहरू थाहा छ । तिमी चिसो पनि छैनौ, तातो पनि छैनौ, चिसो कि तातो भए त हुने थियो । तिमी मनतातो छौ, न चिसो न तातो, म तिमीलाई मेरो मुखबाट उकेलिदिन्छु । "म धनी छु, मसित धन-सम्पत्ति छ र मलाई केही कुराको खाँचो छैन ।"

तिमी भन्दछौं तर तिमीलाई थाहै छैन कि तिमी दुःखी, दयनीय, दरिद्र, अन्धा र नाङ्गा छौं । त्यसकारण धनी हुनलाई आगोले खारेको सुन र आफ्नो नग्नताको शर्म ढाक्नलाई सेतो वस्त्र र तिमीले देख्न सक भनी तिम्रा आँखामा लाउनलाई मलम, यी सबै मबाट किन्ने म तिमीलाई सल्लाह दिन्छु । जत्तिलाई म माया गर्छु, त्यति नै तिमीहरूलाई हप्काउँछ र ताडना दिन्छु यसकारण उत्साहित होऊ । पश्चात्ताप गर । हेर, म ढोकामा उभिएर ढकढक्याउँछु । कसैले मेरो स्वर सुनेर ढोका खोलिदियो भने, म त्यसकहाँ भित्र पस्नेछु र त्यससँग भोजन खानेछु र त्यसले मसँग खानेछु । जसले जित्छ, त्यसलाई म मेरो सिंहासनमा आफूसँग बस्न दिनेछु, जसरी म आफैंले पनि जितैं । मेरा पितासँग उहाँको सिंहासनमा बसेको छु । जसको कान छ, त्यसले सुनोस्, पवित्र आत्माले मण्डलीहरूलाई के भन्नुहुन्छ ।

# येशूखीष्टको दोस्रो आगमन

वैदिक धर्म र बौद्धदीक्षा लिएर वेद, गीता र त्रिपिटकको अध्ययन गरी ध्यान एवं योगको उच्चतम ज्ञानसहित कुण्डलिनी जागरणको यात्रा येशूले गरे । उनले परमात्मासम्म पुगेर मोशाद्वारा सञ्चालित यहुदीधर्ममा नयाँ आयाम ल्याउन सफल भए । उनले बुद्ध, कृष्ण जस्ता महापुरूषको जन्मबाट प्रभावित भई त्यही अनुसार हिंडेर सफलता हात पारे । २००० वर्षपूर्व जन्मिएका जिसस भारतवर्षमा आएर ज्ञान प्राप्त गरी पश्चिमी देशहरूमा ज्ञानको आलोक फैलाएका थिए ।

ईसाको जीवनको १२ देखि ३० वर्षको महत्वपूर्ण समय भारत वर्षको जम्बुद्वीप खण्डमा बिताए जसमा भारत भ्रमण गरेका १८ वर्षको यात्रा वर्णन ईसा आफैँले गरेको विवरण हिमोस गुम्बाको बौद्धमन्दिरको चौधौँ प्रकरणको २४४ श्लोकमा वर्णन गरिएको छ । (Translator: Virchand R. Gandhi, The unknown life of Jesus Crist Kessinger Publishing ISBN 0766138984)

डा. नोटोविच र उनको खोज टोलीले ४० वर्षसम्मको खोज र अनुसन्धानबाट तिब्बतको हिमोस बोद्ध लामाहरूको गुम्बागुम्बामा पुगी तथ्यसत्य सार्वजनिक गरे । त्यहाँका लामाहरूले ताडपत्र, भोजपत्र आदिमा लेखिएको येशूखीष्टको जीवन चरित्रको सामग्री दिए । यति मात्र होइन, येशूखीष्टद्वारा लेखिएको प्रकरण पनि उपलब्ध भयो । हिमोस गुम्बामा बौद्धमन्दिरको चौध प्रकरणको २४४ श्लोकमा भएको वर्णनअनुसार येशूखीष्ट सिन्धु प्रदेशबाट आर्यावर्तमा पुगी केही दिन भिक्षु भएर जगन्नाथपुरीमा पुगे । ब्राह्मणहरूसँग सनातन वैदिक धर्मको शिक्षा लिएर वेद शास्त्रको अध्ययन येशूखीष्टले गरेका थिए । राजगिरी, कासी आदि तीर्थ भ्रमण गरी

साधु माहात्माहरूसँगै बसे । उनी बौद्धविहारमा ६ वर्षसम्म बसेर बौद्धशिक्षा लिइसकेपछि नेपालको बाटो भएर तब्बत गए ।

लामो समयको अध्ययन, अनुसन्धानपछि प्रकाशित पुस्तक Jesus in India मा येशूको यरूशेलमदेखि काश्मिरसम्मको जीवन वृतान्त वर्णन गरिएको छ । (Mirza Ghulam Ahmad, Ahmad Kadiyani, Jesus in India, English Edition 2003).

ईसाको १३ वर्षदेखि ३० वर्षसम्म धार्मिक शिक्षा लिनका लागि हिन्दू सन्यासी भएर काशी जगन्नाथ, नालन्दा आदिमा वैदिक धर्म शास्त्र पढ्दै गए । '(मिस्ट्रिकल लाइफ जिसस' डा. स्पेसर) ।
येशूको १८ वर्षको जीवनीको विषयमा इसाई पादरीहरूसँग सोध्दा उनीहरू बोल्न सक्दैनन् । उनीहरूले दाउदको मूल येशूखीष्टले ताडपत्र, भोजपत्रमा आफ्नो अट्ठार वर्षको विवरण लेखेको जानकारी छ । रूसी विद्वान् डा. निकोलस, निटोविचको शोधपत्रलाई थप अध्ययन र अनुसन्धान गर्दा स्मिथ विन्टरनिज, इलियट तथा अन्य विद्वान्हरूले यो तर्कलाई स्वीकार गरेका छन् ।

विभिन्न विद्वान्हरूको परीक्षणमा सोधखोज र अनुसन्धानलाई झुटो सावित गर्न कैयौं पादरीहरू नलागेको होइनन् । १८ वर्ष येशूखीष्टले गर्दै नगरेका झुटा कथा तयार पार्ने प्रयास गरेता पनि येशूखीष्ट स्वयम्को हस्तलिपि देखेपछि खीष्टीयन पादरीहरू मौन हुनुको अर्को विकल्प रहेन । सत्य त्यो थियो बौद्धविहारमा बौद्धशिक्षा र वैदिक धर्मको दीक्षाबाट येशू ध्यानमा प्रवेश गरेका थिए । कुण्डलिनी जागरणको अनुभवले परमात्मासम्म पुगेर रोकिए त्यही दिन उनी ब्युँझे । जब उनी ब्युँझे अनि उनले बुद्ध र कृष्णले जस्तै आफू आउनुको कारण बताए । (मगर जातिको इतिहास र संस्कृति-२०७४ शम्शेरबहादुर आलेमगर) ।

तात्कालिक खीष्टीयन पादरीहरूले उनका कुरा विश्वास गरेनन् । उनले धेरैपटक सम्झाए तैपनि उनीहरू मानेनन् । अन्तमा उनले आफू फेरि आउने बताए । कुण्डलिनीको यात्राबाट उनलाई जन्मभन्दा अगाडि र मृत्यु पछिको ज्ञान प्राप्त भएको थियो । सोही ज्ञानअनुसार उनले आफ्नो दोस्रो आगमनको चिह्न यसरी बताएका थिए ।

१. बहुधर्मवाद

२. लडाइँको हल्ला
३. अनिकाल
४. सतावट
५. पूर्वमा आउने
६. अन्जिरको बोटले पालुवा फेर्दा
७. अनन्त कुरार निस्तारको चाडको चिह्न लिएर आउने
८. नयाँ नाम सेतो पत्थरको रूपमा चिनिने
९. दोस्रोपल्ट आउँदा मल्किसेदेकको दर्जालाई पूर्णता दिन आउने
१०. राजा दाउदको जीवनमा लुकेको रहस्य पूरा गर्न आउने
११. सियोनको पुनः निर्माण गर्न आउने
१२. बादलमा (शरीरमा) आउने अगमवाणी बाइबलमा भए जस्तै कुरान हदिसमा इसामसीको दोस्रो आगमनबारे निम्न सङ्केत देखिन्छ ।
१. इसामसी जामे मस्जिद दमीस (यस) मस्जिदमा देखा पर्ने
२. क्रुसेड विरुद्ध उत्रने
३. शरीरमा आउने र सन्तान हुने
४. शारीरिक मृत्यु हुनेछ ।
४. इशामसी कानेदज्जाल (६६६) मारी दिनुहनेछ ।
५. इसामशीले ३३ वर्षको उमेरमा इमाम मोदीका बारेमा बोल्नुहुनेछ ।

यस्ता अनगिन्ती अगमवाणी कुण्डलीको जागरणसम्बन्धी ज्ञान दिने बौद्ध र वैदिक धर्म, शिक्षा सत्य थियो । त्यसैले येशू दोस्रोपटक फेरि आउँदा नयाँ नाम (सेतो पत्थर) लिएर प्रथम येशूजस्तै फेरि उनले बौद्ध दीक्षामार्फत कुण्डलिनीको यात्राबाट आफू आउनुको उद्देश्य बताई विश्वभरिका इसाई पादरीहरूले खोल्न नसकेको बाइबलका सत्यताको उजागर गरी गरिदिने अगमवाणी छ । यसले अन्य खीष्टीयनहरूले आफ्नो धार्मिक व्यवसाय धरापमा पर्ने देखेर दोस्रोपटक आउनु भएको खीष्टलाई विश्वास नगरी तिरस्कार गर्नेछन् । उल्टो पुरानैशैलीमा प्रथम येशूखीष्टको शारीरिक बनोटको तिरस्कार गरे जस्तै दोस्रो खीष्टको विरोध, गिल्ला, खिस्सी गर्नेछन् । यो विरोध गर्ने शैली पनि प्रथमपटक आएको येशूलाई जस्तै हुनेछ ।

रोमको प्राचीन चर्चका कलाकृतिहरूमा राखिएको तस्बिरमा रहेको चर्चभित्रको आकृति हेर्दा येशूको साथमा लौरो भएको देखिन्छ । सानपेट्रो गिर्जाघरमा १६ औं शताब्दीमा पुनः निर्माण गरिएको पवित्र मानिने चर्चहरूको चित्र र आकृतिमा येशू लौरो र क्रसको साथमा ठडिएको देखिन्छ । त्यस्तै येशू क्रुसमा टाँगिएर मारिएका होइन भनी मुसलमानको पवित्र ग्रन्थ कुरान सुरते निशापारा ६-१५७ सम्म लेखिएको छ । शम्शेरबहादुर आलेमगरद्वारा लिखित "मगर जातिको इतिहास र संस्कृति" नामक पुस्तकअनुसार येशू इजरायलबाट भारत आइपुग्दा दारी, कपाल लामा भएको देखिन्थे । लौरोको साहारामा हिड्ने येशूको शरीर दुब्लो र ख्याउटे बनेको थियो । साथै येशू वेश्या स्त्रीको नाजायज बच्चा हो भनी गवाही पेश गरेका छन् ।

बेलायती पुस्तकालयमा रहेको आरामी भाषामा लेखिएको बहुचर्तित हस्तलिखित ग्रन्थ 'लास्ट गोस्पेल' को अनुवाद गर्दा येशू वेश्यावृत्तिमा संलग्न माग्दालेनसँग विवाहित भई दुई सन्तानको बाबु भएको दावी गरेको छ ।

तात्कालिक समयका विश्व प्रसिद्ध धर्म गुरूहरूले येशूको गिल्ला गरे । त्यहाँबाट आउने जानेहरूले आ-आफ्नो मुन्टो हल्लाएर येशूको गिल्ला गरे । ए मन्दिर भत्काउने र तिनीदनमा निर्माण गर्ने आफूलाई बचा ! परमेश्वरको पुत्र होस् भने क्रसबाट ओर्लेर आइज ! डाँकाहरूसँग क्रसमा टाँगिएर मरेको सिकर्मीको छोरो इसामसी परमेश्वर पुत्र हुन सक्दैन । (पवित्र बाइबल, मत्ति २७: ३८-४०, मर्कस १५:२१, लुका २६:२६) ।

यी पुस्तकहरूका घटनाक्रम हेर्दा तात्कालिक समयका विश्व प्रसिद्ध धर्मगुरूहरू, राजा, महाराजाहरूले त्यो लौरो बोकेर हिंड्ने जगल्टे खान नपाएर डुल्दै हिंड्ने ख्याउटे बनेको येशू अनि क्रुसमा टाँगिएर शरीरमा मरेको सिकर्मीको छोरा इशामसि रे भनेर गिल्ला खिसी गर्दै येशूको विरोध गर्दथे । येशूको दोस्रो आगमनमा पनि बाइबलद्वारा घोषित दोस्रो येशूख्रीष्टको शारीरिक बनोटको बारेमा पुरानैशैलीमा विरोध गर्नेछन् ।

शरीरमा मर्ने दोस्रो येशू होइन भन्नेहरू चाहिँ त्यो बेलाका यहुदीका स्वभावसँग पूर्णतः मेल खानेहरू हुन् । पुरानो करारामा येशूको नाम कहाँ र कुन ठाउँमा उल्लिखित छ भनेर प्रश्न गर्ने यहुदीहरूले मसिह र इम्मानुएल शब्दको अर्थ  कहिल्यै बुझ्न सकेनन् वा बुझेर पनि बुझ पचाए । त्यसैले उनीहरूले अन्तत जीवन पाउन सकेनन । त्यस्तै इतिहास फेरि दोहोरिने बाइबलले गवाई दिएका छन् ।

दाउदको मूल दोस्रोपटक आउँदा उहाँको नाम कहाँ छ भनेर झुटो मण्डलीहरूले (प्रकाश ३:१२ र २:१७) थुप्रै बाइबलका वचनको अर्थ नबुझ्नु र बुझेर बुझ पचाउनुचाहिँ उनीहरूको इच्छा हुने छैन, शैतानको चलाखी हो भनी बाइबल गवाही  दिन्छ । यति मात्र होइन येशूले बाइबलमा आफ्नी आमा र भाइलाई  चिन्दैनन् । (बाइबल मत्ति १२:४६, लुका ८:१९) ।

दुई दिनसम्म येशू वेश्याको घरमा वेश्याहरूको बीचमा भोगविलास गर्ने खराब मानिस हो भन्ने गरेको पाइन्छ । असली विश्वासीहरू येशू कुमारीकन्याबाट जन्मिएको अनि क्रुसमा टाँगिएर मारिएको ३ दिनमा बौरिएर उठेको भनी विश्वास गर्छन् । यही येशू विरोधी कुरालाई विश्वास गरेर फर्की जानेहरू लुसिफरका आत्मिक सन्तान हुन्, चुनिएकाहरू होइन भनेर बाइबल गवाही दिन्छ । दोस्रो आगमनमा फेरि त्यस्तै आरोप लगाउने लुसिफरको आत्मा प्रवेश गरेको मण्डलीहरूमा जाने केही ख्रीष्टीयनहरूको शरीरमा प्रवेश गरेको बेला उनीहरूमार्फत माता यरूशेलम र पिता परमेश्वरको आत्मिक नातालाई संसारिक नातासँग जोडेर आरोप लगाउँदा विश्वासीहरूले त्यस्ता ख्रीष्टीयनहरूका मण्डलीभित्र शैतानको आत्मा प्रवेश गरेका रहस्य थाहा हुन्छ । यी शैतानी शब्द सुनेर जानेहरूको बारेमा थुप्रै वचनहरू बाइबलभित्र देखिन्छ ।

यहुदीहरू आजको दिनसम्म इशामसी वादलमा आउनुहुनेछ भनी प्रतीक्षा गरिरहेका छन् । बादलको अर्थ शरीर हो भनी बुझ्न नसक्नुको कारण उनीहरू अझै येशूलाई विश्वास गर्न सकेका छैनन् ।  त्यस्तै तीतो सत्य आत्मिक रूपमा अन्धा ठहरिएका झुटा मण्डलीहरूले (हिब्रु ९:२८) मा दोस्रोपटक बादल (शरीर) मा आउने अगमवाणीलाई बुझ्न नसक्नुचाहिँ बाइबलका अगमवाणी पूरा हुनको लागि हो भन्ने बुझिन्छ ।

पवित्र बाइबल, (मत्ति १३:३४-३५) उत्पत्तिदेखि लुकाइएको रहस्यको साथमा सेतो पत्थरको रूपमा जीवनको फल लिएर दोस्रोपटक आउँदा सयौँ झुटा मण्डलीहरूको निद्रा कैसाथ भङ्ग हुने बाइबलका अगमवाणी छ । दोस्रो येशूको समयमा त्यस्तै घटना झुठ्ठा ख्रीष्टीयनहरूले पुरानै शैलीमा पिता र माताको सम्बन्ध नबुझी आरोप लगाउनु चाहिँ २,००० वर्षअघिको यहुदीको इतिहास दोहोऱ्याउनु हो भनी बाइबल गवाही दिन्छ ।

धिक्कार छ तिनीहरूलाई जसले असललाई खराब र खराबलाई असल भन्छौं जसले अँध्यारोलाई उज्यालो र उज्यालोलाई अँध्यारो मान्दछ अनि मीठोलाई तितो र तितोलाई मिठोको निम्ति लिन्छ । धिक्कार तिनीहरूलाई ! जो आफ्नो दृष्टिमा बुद्धिमान र चलाख छन् भनिएकोले कसले यो महिमा (दाउदको मूल र यरूशेलमको महिमा ज्योति) को ज्योति सही तरिकाले चिन्न सक्ला र ?

क्रसरूपी सूर्यको आकृतिको प्रार्थना, क्रिसमससमा नर्मोदको पूजाको सम्झना गर्नेहरू, सूर्यको पवित्र जन्मवार आइतवार शवथका दिन मान्नेहरूको, अनि बाइबल कहीँ कतै उल्लेख नभएको इष्टर सन्डे, गुड फ्राइडे मान्नेहरू आफ्नै दृष्टिमा बुद्धिमान र आफ्नै नजरमा चालख छन् । धिक्कार छ तिनीहरूलाई ! तर यी सबै बुझेर सियोन भेला हुनेहरू चाहिँ धन्य हुनेछन् ।

येशूख्रीष्टलाई प्रथमपटक यर्दन नदीको किनारमा यहुन्नाबाट आत्मिक झरी खसाल्न वप्तीस्मा लिदाँ तात्कालिक विश्व प्रसिद्ध यहुदी धार्मिक अगुवाहरूले युहन्ना जाने गरेको मन्दिर र यहून्नाका साथीहरूको स्वभावको गलत रूपमा व्याख्या गरेको पाइन्छ । आफैँ शुद्ध नभएका यहून्ना र उनका साथीहरूले येशूलाई वप्तीस्मा दिएर पवित्र बनाइएको भनी गिल्ला गरिएको थियो । बाइबलका अगमवाणी पूरा गर्न येशूको दोस्रो आगमन रगतद्वारा किनिएको मण्डलीको स्थापना हुनेछ । दाउद राजाको अगमवाणी ३७+३ (४०) वर्ष राज्य शासन बराबरी शासन गर्न बाइबल र कुरान दुवैको अगमवाणी पूरा गरेर दाउदको मूल येशू स्वर्ग उचालिने अगमवाणी छ ।

# इजरायलीबाहेक सबै कुकुर

बाइबलका धेरै विद्वान्हरूका विचार छ कि येशूका १२ चेलाहरूमध्ये मत्ती नाउँ भएका कर उठाउने मानिस थिए । उनी एन्टी ओकिया शहरमा गएर यहुदीहरूका निम्ति सुसमाचार लेखेका थिए । उनको पुस्तक यहुदीहरूको लागि मात्र थियो । पावलले मुक्तिको लेख र येशूको भावनालाई अस्वीकार गरेका छन् । मत्तीका अनुसार येशूले अन्य जातिलाई कुकुरसँग तुलना गरेको पाइन्छ । मत्तीले आफ्नो सुसमाचारमा लेख्छन्, "रोग र भोकले तड्पिएको एक महिला येशूका सामु आएको" प्रसङ्ग देखिन्छ । त्यहाँ उल्टै येशूका चेलाहरूले अस्वीकार गरेका छन् । अन्य जाति र यहुदीका १२ कुलबीच दुरी व्यापक देखिन्छ । यहुदी सर्वश्रेष्ठ जाती हो भनी मानिएको देखिन्छ । अन्य जातिलाई तल्लोस्तरको मानिएको प्रष्ट हुन्छ । येशूले यहुदीहरूलाई बालकको संज्ञा दिएको र अन्य जातिहरूलाई कुकुरभन्दा तल दाँजेको देखिन्छ । बाइबलले जातीयवाद र प्रान्तवादको मुर्खतको ज्वलन्द उदाहरण पेश गरेको छ । यसलाई प्रष्टसँग बुझ्न कवीरको दोहा राख्न उपयुक्त देखिन्छ ।

जाकि गुरु अन्धला, चेला खरा निरन्ध ।
अन्धला अन्धको ठेल्यो, दोनो कुरा षडन्तः ॥

यस युगका धार्मिक गुरुहरू, पाष्टरहरू, मौलवी र बबताहरू सबै अन्धाहरू हुन् जसको कारण युग नै अन्योलमा रुमलिएको छ । खीष्टीयनहरू त किताबीय शास्त्र बाइबलमा देखिएका छन् । यसलाई लिएर आर्थिक प्रगतिको साधन र संसार हेर्ने चस्मा बनाएको बेला यिनले अरूलाई कसरी मार्ग देखाउन सक्लान् र ? बाइबलमा यस्ता कुरा छन् जो असामयिकमात्र होइन, द्योतक पनि देखिन्छ । यस्ता वचनलाई छोड्न सक्नुपर्दछ । पवित्र मानिने बाइबलको मत्तिमा लेखिएको छ । म इजरायल जातिको हराएको भेडाको निम्तिमात्र आएको हूँ ।

# बाइबलले भन्छ पृथ्वीको आकार चारपाटे छ

अचम्मको कुरा खीस्टियनहरू बाइबलमा लेखिएका हरेक वचनहरू आँखा चिम्ली, चिम्ली स्वीकार गर्दछन् । 'फेरि सैतानले उहाँलाई एउटा अग्लो पर्वतमा लगेर संसारका सबै राज्यहरू अनि तिनीहरूको वैभव देखियो' (पवित्र बाइबल, मति ४.८ र लुका ४.५) ।

अब एकैछिन तार्किक रूपले विचार गर्नुहोस् त १ के एउटा अग्लो पर्वतमा गएर हेर्दा संसारका सबै राज्यहरू, ठाउँहरू तथा वैभवहरू देख्न सकिन्छ त ? पृथ्वीको आकार भनेको गोलो छ । जति अग्लो स्थानमा गएर हेर्दा पनि पृथ्वीको पूरा राज्यहरू देख्न सकिँदैन । पृथ्वीको आकार कार्पेट जस्तो चेप्टो (flat) वा समतल हुने हो भने चाहिँ अवश्य देख्न सकिन्छ । त्यसकारण बाइबलको अनुसार पृथ्वीको आकार चेप्टो छ । फेरि हेर्नुहोस् 'यसरी मैले चारजना स्वर्गदूतलाई पृथ्वीको चार कुनाहरूमा (four corners) उभिरहेको देखेँ ।' (पवित्र बाइबल, प्रकाश ७:१) ।

आफैँ भन्नुहोस् त के पृथ्वीका चार कुनाहरू हुन्छन् त ? चार कुना त केवल समतल वस्तुको मात्रै हुन्छन् । यसर्थ बाइबलको प्रमाणअनुसार पृथ्वी चेप्टो छ । यहाँ कुना भन्नाले दिशा होइन कर्नर नै हो ।

Heliocentrism को कुरा गर्दा एउटा विशेष उल्लेख्य कुरा के छ भने कपर्निकसजस्तै महान् वैज्ञानिक ग्यालिलियो पनि पृथ्वीलगायतका अन्य ग्रहहरूले सूर्यको परिक्रमा गर्दछन् भन्ने मान्दथे । जब उनले यस कुराको प्रचार गरे तब खीष्टियन चर्च र धर्मगुरु पोपको निर्देशनमा Inquisition court अथवा धर्म निर्णायक समितिले १० वर्षको कठोर जेल सजाय दियो जसकारण उनको मृत्यु जेलमा भयो । त्यो धर्म निर्णायक समितिले प्रकाशन गरेको एक प्रतिवेदनमा यस्तो लेखिएको छ- अर्थात्, ग्यालिलियोद्वारा प्रतिपादित विचार थियो कि "सूर्य नै सबैको केन्द्र हो । पृथ्वीको चारैतिर घुम्दैन भन्ने कुरा मूर्खतापूर्ण र वाहियात सिद्धान्त हो किनकि यो हाम्रो

पवित्र धर्मग्रन्थ बाइबल शिक्षाको सर्वथा विरूद्ध हो ।" उनीहरूले यो वचनलाई सत्य मानेका थिए ।

सन् १६०९/१० को हिउँदतिर ग्यालिलियो ग्यालिलीले आफूले भर्खर तयार पारेको दूरदर्शक यन्त्र आकाशतिर घुमाएर हेर्दा चारवटा उपग्रहले वृहस्पति ग्रहलाई फन्को मारिरहेको देखे । यसले सबै आकाशीय पिण्डहरू ब्रह्माण्डको केन्द्र जगको रूपमा रहेको पृथ्वीलाई घुम्छ भन्ने खीष्टियनहरूको बाइबलका विचारलाई चकनाचुर पार्‍यो । चर्चहरूमा धेरै अघिदेखि पृथ्वी ब्रह्माण्डको केन्द्र वा जग हो भन्ने बाइबलका वचनलाई अकाट्य मानिन्थ्यो ।

अर्कोतिर बाइबलमा पृथ्वीको चारकुना भनेर उल्लेख गरिएको थियो । पृथ्वीको आकारलाई खामा चारकुना र जगमा प्रयोग गरिने ढुङ्गाजस्तो भन्ने पाष्टरको विचारसँग वैज्ञानिक प्रमाणको मेल नखाँदा धर्मविरोधको अभियोग लगाई ग्यालिलियोलाई रोमको धार्मिक अदालतसमक्ष हाजिर हुन बोलाइयो । नाना भाँती केरकार गरी धार्मिक अदालतले जवर्जस्ती आफ्नो अन्वेषणलाई भूल स्वीकार गर्न बाध्य गराई उनैको घरमा आजीवन नजरबन्दमा राख्यो । ग्यालिलियोको मृत्यु भएको झण्डै ३५० वर्षपछि १९९२ मा चर्चले आफ्नो भूल स्वीकार्यो । अन्तमा बाइबल झुटो बन्ने पक्का देखिएपछि उक्त शब्दलाई आलंकारी शब्द, बहुभाषिक शब्द हो भनी परिभाषित गरे ।

पृथ्वी ब्रह्माण्डको केन्द्र होइन अपितु सबै ग्रहहरू सूर्यको चारैतिर घुम्छ । यो सत्यलाई पत्ता लगाउनेहरूले ज्यान गुमाउनुपर्‍यो । असत्यले सत्यलाई कहिल्यै सहन गर्न सक्दैन । ग्यालोलियो र कपर्निकसकै कुरालाई समर्थन गर्ने अर्को वैज्ञानिक गिआर्डिनो ब्रनोलाई पनि रोमको चर्चले १६ फेब्रअरी सन् १६०० मा शरीरमा तेल छर्केर जिँउदै जलाएर मारेका थिए । चर्च तथा खीष्टियनहरू सत्य बोल्ने र भन्ने मान्छेमाथि कस्तो व्यवहार गर्थे भन्ने कुरा यसैबाट सिद्ध हुन्छ । अहिले नेपालमा यिनै खीष्टियन मिसिनरीहरू सोझासाझा जनतालाई सबै वैज्ञानिकहरू येशूको भक्त थिए भनेर प्रचार गर्दै हिँडेका छन् । यो बडा अचम्मको कुरा छ ।

वास्तविक विज्ञानलाई मध्ययुगीन खीष्टीयन धार्मिक सङ्घले घोरविरोध गर्दै सन्देहात्मक दृष्टिले हेर्ने गर्दथ्यो । स्वतन्त्र वैज्ञानिक अनुसन्धानका प्रयत्नहरूलाई उसका तर्फबाट घोर विरोध गर्ने गरिन्थ्यो किनकि तिनीहरूमा इसाई धार्मिक सङ्घका अधिकारीहरू साँच्चिकै बाइबलको प्रतिष्ठाको लागि खतरा देखिन्थे । पुनर्जागरणकालमा विज्ञानको दमन विशेषरूपले बढ्न पुगेको थियो । स्वतन्त्र ढङ्गले सोच्नेहरूलाई जेलमा कोचिन्थ्यो, मृत्युदण्ड दिइन्थ्यो वा डराउन दिएर, तर्साएर आफ्नो विश्वास परित्याग गर्न बाध्य पार्ने गरिन्थ्यो ।

अङ्ग्रेज दार्शनिक एवम् विद्वान् रोजर बेकन (१३ औं शताब्दी) लाई आफ्नो जीवनका धेरै वर्षहरू मठको जेलमा गुर्जानुपरेको थियो । कोपर्निकसको सिद्धान्तलाई निन्दित र प्रतिबन्धित गरिएको थियो । इटालीका विचारक र वैज्ञानिक ज्यार्दानो ब्रूनो र लुचिलियो बानिनीलाई मृत्युदण्ड दिइएको थियो ।

महान् खगोलशास्त्री ग्यालिलियोलाई सूर्यको वरिपरि पृथ्वी घुम्दछ भन्ने विषयसित सम्बन्धित आफ्नो सिद्धान्त परित्याग गर्न बाध्य बनाइएको थियो । अरु पनि अनगिन्ती विद्वान् दमनचक्रमा शिकार बन्ने गरेका थिए ।

सन् १५५९ देखि पोपको कार्यालयद्वारा 'प्रतिबन्धित पुस्तक सूची' नियमितरूबाट प्रकाशित गर्ने गरिँदैछ । त्यसमा स्वतन्त्र विचार हुने सबै वैज्ञानिक पुस्तकहरूलाई समावेश गर्ने गरिन्छ । वेदीमा बली दिने विद्वान्हरूको संख्या पहिलेका शताब्दीहरूमा इसाईधर्मको खातिर प्राणको आहुती गर्नेहरूको संख्याभन्दा कैयौं गुना बढी थियो । जसरी इसाईधर्मले विज्ञान र स्वतन्त्र चिन्तनलाई दमन गरेको थियो, त्यसरी विश्वको अरु कुनै धर्मले पनि दमन गर्ने गरेको छैन । (धर्मको इतिहास पृ.३४६से.तोकारेव ) ।

# त्रुटिको संग्रह हो बाइबल ?

बाइबलभित्र थुप्रै वैज्ञानिक रूपमा झुट ठहरिएका वचनले येशूलाई दिन प्रतिदिन दुनियाँको नजरमा कलंकित बनाउँदै लगेको छ । यस्तो प्रकारको दुस्साहस खीष्टीयन पाष्टरहरूले रोक्दै सत्यतालाई स्वीकारी येशूको असल चेला बन्नुपर्छ ।

यसरी बाइबलमा अनगिन्ती त्रुटिहरू हुनुको कारण के हो ? येशूको वचन सही थियो तर येशूको वचन त्यतिबेला लिपिबद्ध जतिबेला येशूको मृत्यु भएको लामो समय बितिसकेको थियो । अब सोच्नुहोस्, जुन वचन येशूद्वारा बोलिएको थियो ती वचन पक्कै रहेनन् । उनका चेलाहरू नयाँ व्यवसाय सञ्चालन गर्न आफूलाई स्थायित्व गर्न येशूको वचनलाई आफ्नो अनुकूलतामा मोडे । आफ्नो भाषामा ढाले । उनीहरूले हजारौं शब्द र वचन चयन गरे । येशूको वचनमा उनीहरूको वचनको लेबल टाँसिदै गयो, थपिदै गयो जसले गर्दा बाइबलमाथिको विश्वसनीयता नै समाप्त भएको छ । आज बाइबल अवैज्ञानिक सिद्ध भएको छ । यससम्बन्धी तथ्य सत्य उजागर गर्न निम्न पुस्तक अध्ययन गरौं ।

विश्वका सबैभन्दा ठूला ३२ जना Christian scholar हरूद्वारा निकालिएको भर्जन हो र यसलाई ठीक त्यस्तै अरु ५० वटा इसाई संगठनहरूको पनि समर्थन प्राप्त छन् । यी ३२ जना इसाई संगठन प्रमुखहरूको भेलाले भन्यो कि बाइबलको त्यो **कि. जेम्स भर्जनले** भनेझैं येशू, पिता र पवित्र आत्मा एकै हो भन्नु मुर्खता हो ।

३२ जना खीष्टीयनले **कि. जेम्स भर्जन** को युहन्ना ३.१६ मा भएको begotten भन्ने शब्दलाई पनि झिकेर फालिदिएका छन् । उनीहरूले पनि यो भने कि "त्यो शब्द पनि पछि थपएिको हो र मनगढन्ते हो ।"

बाइबलमा कति कुराहरू पछि परिवर्तन गरिएका छन् । के ईश्वरको वचन पनि कहिल्यै कसैले चाहेमा राखिने र कसैले नचाहेमा झिकिने न्याय संगत हुन्छ र ? पहिले राखेर जनतालाई झुक्याइयो अहिले झिकेर झुक्याइदैछ ।

खीष्टीयन धार्मिक सङ्घभन्दा बेग्लै मत राख्ने खीष्टीयनहरूलाई समेत सूचना पाउनेबित्तिकै तात्कालिक संघको अदालतसमक्ष सुम्पिदिने गरिन्थ्यो । अभियुक्तहरूलाई पाशविक यातनाहरू दिएपछि सिधै आगोमा फ्याँकिदिने गरिन्थ्यो । १३ औं शताब्दीदेखि सङ्घको जिम्मा डोमिनिकन साधुहरूले सङ्घलाई सुम्पिदिइएको थियो । सङ्घका अपधर्मीहरूको अतिरिक्त 'डाइनहरू' र 'कालोजादू' गर्ने कुरालाई समेत दमन गरिन्थ्यो । सन् १४८७ मा निकै घृणास्पद पुस्तक तयार गरिएको थियो । त्यसको नाम 'डाइनहरूको हथौडा' थियो तथा त्यसमा डाइनहरू र अरु इसाई धार्मिक सङ्घका शत्रुहरूको खोजी गर्ने र सजाय दिने तरिका बताउने गरिएको थियो । सङ्घको बोलबाला भएको बेला लाखौं निरीह, निरपराध मानिसहरूलाई आगोमा जलाइदिने काम गरिएको थियो । अमानवीय यातना दिने काम गरिएको थियो । तिनीहरूको नाङ्गो नाच विशेष गरेर स्पेनमा देखिएको थियो । (सेतोकारेव ३४५) ।

पछिल्लो समयमा बाइबल पाष्टरहरूका लागि रोजीरोटी खाने माध्यम बनेको छ । दशांश संकलनको लागि हतियार बनेको छ । अझ समय बाँकी छ, पाष्टरहरूले सत्यतालाई स्वीकार गरी बाइबलमा भएका अवैज्ञानिक अव्यवहारिक पद वचनलाई हटाउनुपर्दछ । आफ्नो व्यवसाय चलाउन नयाँ शब्द, आलंकारी अर्थ, बहुभाषिक शब्द भन्दै जाल बुन्ने कामलाई रोक्नुपर्दछ । तब मात्र येशूले देखाएको बाटो हिडेको सार हुनेछ ।

औद्योगिक विकास तथा वैज्ञानिक आविष्कारको कारण मानिसको सोच्ने क्षमतामा भिन्नता आएको छ । फलतः पृथ्वीभन्दा कैयौं गुना ठूलो असंख्या ताराहरू पृथ्वीमा खस्ने, अगमवाणी गर्ने, यहुन्नालाई पृथ्वी र आकाशीय पिण्डको आकार, तौलबारे ज्ञान नभएको प्रष्ट देखिन्छ । यसले गर्दा यहुन्नाको प्रकाशमाथि थप शंका जन्मिएको छ ।

नेभाराको रूखलाई बतासले हल्लाउँदा नपाकेको फल झरेझैं आकाशका ताराहरू पृथ्वीमाथि खसे । स्वर्ग (आकाश) चाहिँ पुस्तकको मुठा बेरिएझैं हटेर गयो । (पवित्र बाइबल, प्रकाश ६: १३-१४) ।

१९ औं र २० औं शताब्दीमा प्राकृतिक र विशुद्ध विज्ञानका महान् सफलताहरूले स्पष्टरूपमा के देखाइदिएका छन् भने उनीहरू र पुरानो बाइबलसम्बन्धी विश्व दृष्टिकोणबीच कुनै सङ्गति हुँदैन । यद्यपि इसाई धर्मशास्त्रीहरू र धर्माधिकारीहरूमा बाइबललाई शाब्दिक अर्थमा बुझ्ने र विज्ञानलाई कुनै पनि छुट नदिने जडसूत्रवादी प्रवृत्ति अझै पनि कायम छ (विशेष गरेर सं.रा. अमेरिकामा, जहाँ त्यसले १९१० को आसपासमा सङ्गठित आन्दोलनजस्तो रूप लिएको थियो) ।

धेरै दूरदर्शी धर्मशास्त्रीहरूले धेरै पहिले विज्ञानसित इसाईधर्मको सिद्धान्तको समन्वय गर्ने प्रयत्न गर्न थालेका थिए । मुख्यतः त्यो पुरानो बाइबल र नयाँ बाइबल (बाइबलको दोस्रो संस्करण) का पाठहरूको अर्कै व्याख्या गर्ने गरिन्छ । कतिपय क्याथोलिक र प्रोटेस्ट्यान्ट धर्मशास्त्रीहरूबीच व्यापकरूपले विरोध त्यही कारणले भएको थियो । प्रचलित 'आधुनिकतावाद' को उत्पत्ति त्यसरी नै भएको थियो । सोभियत सङ्घ र अरू समाजवादी देशहरूमा इसाई धार्मिक सङ्घले आफ्नो राजनैतिक दिशा बदलेको छ । त्यसले राज्यसित सहयोग गर्न थालेको छ, शान्ति र सामाजिक प्रगतिका निम्ति सङ्घर्ष गरिरहेको छ । सोभियत सङ्घ र अरू समाजवादी सरकारद्वारा शान्ति एवं मित्रताको लागि तथा साम्राज्यवादको चङ्गुलमा फँसेका औपनिवेशिक देशहरूको मुक्तिको खातिर गरिरहेको सङ्घर्षमा उनीहरूले साथ दिइरहेका छन् । (धर्मको इतिहास पृ. ३५१ से.तेकारेव) ।

१९ औं शताब्दीमा चार्ल्स डार्विनले वैदिक सनातन धर्मको जगमा टेकेर प्रादुर्भाव गरेको क्रम विकासको सिद्धान्तले खीष्टियन विश्वास र मण्डलीलाई ठूलो आघात पर्‍यो । यस सिद्धान्तबाट प्रभावित भएर धेरै मानिस सनातन धर्मप्रति आकर्षित भए । यस सिद्धान्तले पोप, खीष्टियन आश्यर्चको काम, येशूको आगमन आदिप्रति नै प्रश्न चिह्न खडा गरिदियो ।

औद्योगिक विकास र वैज्ञानिक आविष्कारहरू खीष्टियन मण्डलीका विरुद्ध थिए । ई.सं. १७०१ मा Jethro Tull ले खेतवारीमा काम गर्ने ड्रिल मेशिनको आविष्कार गरे । सन् १७३३ मा व्यजल ले कपडा बनाउने Flying Shuttle को आविष्कार गरे । सन् १७६४ मा James Watt ले बास्पइन्जिन बनाए । सन् १८१४ मा George Steren Son ले बास्पइन्जिन बनाए । Alexander ले टेलिफोनको आविष्कार गरे Thomas Edison ले विद्यूत र Wright दाजुभाइले हवाइजहाजको विकास गरे । यस्ता विकासका कामले खीष्टीयन मण्डलीमा प्रत्यक्ष प्रभाव परेको सुन्न पाइन्थ्यो ।

पाष्टर दिलकुमार तमाङ 'खीष्टीयन मण्डलीको इतिहास' नामक पुस्तक पृ. १५८ मा यसो लेख्छन् - आधुनिक आविष्कारले खीष्टियनमण्डलीलाई प्रत्यक्ष प्रभाव पार्‍यो तर पनि विकाससँगै विनाश भित्रिएको सत्य पनि इन्कार गर्न सकिँदैन ।

'त्यसपछि परमेश्वरले ठूलाठूला प्रकाशपुञ्ज बनाउनुभयो । दिनको निम्ति ठूलो (सूर्य) प्रकाशपुञ्ज बनाउनुभयो । भने रातको निम्ति सानो (चन्द्रमा) प्रकाशपुञ्ज बनाउनुभयो ।' (पवित्र बाइबल, उत्पत्ति १:१४-१६)

त्यस्तै वैज्ञानिक खोजले सूर्यको प्रकासवाट चन्द्रमाको प्रकाश आउने तथ्य बाहिरिएपछि बाइबलका वचनमाथि प्रश्न चिन्ह खडा भएको छ । "त्यस समय चन्द्रमाको प्रकाश सूर्यको भन्दा चहकिलो हुनेछ ।" (पवित्र बाइबल, यशैया, ३०:२६) ।

बाइबलको उपर्युक्त कथनंबाट सिद्ध हुन्छ कि बाइबलले चन्द्रमाको प्रकाश भनेको आफ्नै प्रकाश हो भन्ने ठहर गरेको छ तर अहिलेको विज्ञानले चन्द्रमाको प्रकाश भनेको सूर्यको प्रकाशको परावर्तन हो भन्छ । यदि बाइबल परमेश्वरको वचन भएको भए चन्द्रमाको प्रकाश उसको आफ्नो होइन भन्ने लेखिनुपर्ने थियो । के परमेश्वरलाई आफूले सृष्टि गरेको वस्तु कुन, कस्तो छ त्यो नै थाहा हुँदैन र ? परमेश्वरलाई थाहा थिएन कि चन्द्रमा सूर्यबाट प्रकाश प्राप्त गरेर मात्र चम्कन्छ भनेर ? त्यसैले बाइबल परमेश्वरको वचन हुन सक्दैन भन्ने स्पष्ट हुन्छ ।

# बाइबललाई नै येशूको वंशावली थाहा छैन

बाइबलअनुसार येशूको पिता अन्जान व्यक्ति (पवित्र आत्मा) भएपछि योसेफको वंशावली नै येशूको वंशावली हो भनेर लेख्नु बाइबलका त्रुटि हो । येशूको यही वंशावली सही हो भने उनको जन्म योसेफबाट नै हो भनी लेख्न जरूरी छ । त्यसो होइन भने मरियम हुँदै उनकी आमा-बाको वंशावली तयार गर्नुपर्ने हुन्छ ।

लुकाको पुस्तकमा दाउदका छोरा नातानको वंशावली दिइएको छ । योसेफका पिताका नाम एली बताइएको छ । मत्तीको पुस्तकमा दाउदका छोरा सोलोमनको वंशावली दिइएको छ, जसमा योसेफका पिता नाम याकुव छ । यहाँ पनि एउटा इमान्दार र सोझो प्रश्न उठ्छ खासमा योसेफ कसका छोरा थिए ? एलीका अथवा याकुवका ? येशू कसका नाति थिए ? एलीका अथवा याकुवका ? कि एली र याकुबले एकै जना स्त्रीसँग विवाह गरेका थिए ? यी प्रश्नको जवाफ बाइबलमा कतै लेखिएको छैन ।

(मत्ती १:१-१७) अब्राहम इसहाकका पिता थिए । इसहाक याकुबका पिता थिए, याकूब युहुदा र तीनका दाज्यू-भाइहरूका पिता थिए । यहुदा फारेस र जाहेरका पिता थिए । तिनीहरूकी आमा तामार थिइन् । फारेस हेस्रोनका पिता, हेस्रोन आरामका पिता, आराम अम्मिनादाबका पिता, अम्मिनादाब नहशोनका पिता, नहशोन सल्मोनका पिता, सल्मोन बोअजका पिता, तिनकी आमा राहाब थिइन । बोअज आवेदका पिता थिए । तिनकी आमा रूथ थिइन् । ओवेद यिशैका पिता, यिशै दाउद राजका पिता थिए । दाउद सोलोमनका पिता थिए । तिनकी आमा उरियाहकी पत्नी थिइन् । सोलोमन रहबामका पिता रहबाम अबियाका पिता, अबिया आसाकापिता, आसा यहोशापातका पिता, यहोशापात यहोरामका पिता, यहोराम उज्जियाहका पिता, उज्जियाह योतामका पिता, योताम आहाजका

पिता, आहाज हिजकियाका पिता, हिजकिया मनश्शेका पिता, मनश्शे अमोनका पिता, अमोन योशियाहका पिता, योशियाह यकोनियास र तिनका भाइहरूका पिता थिए । तिनीहरू बेबिलोनमा यहुदीहरूलाई बन्दी बनाएर लगिने समयअघि जन्मेका थिए ।

बेबिलोनमा बन्दी बनाएर लगिएपछि यकोयिस शालतिएलका पिता थिए, शालतिएल यरुबाबेलका पिता, यरुबाबेल अबिउदका पिता, अबिउद एल्याकीमका पिता, एल्याकीम आजोरका पिता, आजोर सादोकका पिता, सादोक आखिमका पिता, आखिम एलिउदका पिता, एलिउद एलाजारका पिता, एलाजार मत्तानका पिता, मत्तान याकूबका पिता थिए । याकूब तिनै योसेफका पिता थिए । जसकी पत्नी मरियम थिइन् । यिनै मरियमबाट येशूको जन्म भयो, जो खीष्ट कहलाइन्छ ।

# बाइबलभित्रका केही चाप्लुसीहरू

पवित्र र विज्ञानसम्मत भनिएको बाइबलभित्र प्रशस्त्र मात्रमा व्यक्तिविशेषको चाकडी चाप्लुसीका पाठहरू रटाइएका छन् । बाइबलको शुरूदेखि अन्तसम्म थुप्रै अनुच्छेदहरूमा यहोबाको चाकडी र चाप्लुसीलाई प्रश्रय दिएको पाइन्छ । हब्बाले असल र खराब ज्ञान दिने फल खाइन् । यसको अर्थ चाकडी गरिनन् त्यसकारण सजाय पाइन् । मोसा, नोहा, अब्राहम, दाउदले चाकडी गरे र यहोबाको पद पाए भनी लेखिएको छ । पाष्टर र पादरीको चाकडी गर्न बाइबले सिकाएको छ । चाकडी र चाप्लुसी नगर्नेहरूलाई यहोबाले अग्निकुण्डमा नष्ट गराइदिने बाइबलले बताउँछ । संसारका आराध्यादेव भनी बताइएका यहोबा नै चाकडी र चाप्लुसीमा रमाउँछन् तर यस्तो चाप्लुसीले भरिएको बाइबललाई हेर्ने केही आँखाहरू यस्ता छन् ।

"तपाई इसाई बनेपछि हरिबाट ह्यारीमा, प्रतापबाट पिटरमा र परशुरामबाट पर्लमा चेन्ज हुनुहुन्छ । दशैंको साटो क्रिसमस मनाउन थाल्नुहुन्छ, बुद्ध जयन्तिको साटो येशू चिहानबाट वैरिएको दिन उत्सव मान्नुहुन्छ । जनै वा मालाको साटो घाँटीमा क्रुस झुण्ड्याउन थाल्नुहुन्छ र शंख-घण्ट बजाएर आरती गर्नुभन्दा गीतार बजाएर प्रे गर्नु होला खै कहाँ रह्यो नेपाली संस्कृतिको निरन्तरता नि ? भाषादेखि लिएर भावसम्म सबैमा पराइपन आइगयो नि"। (ब्राह्मणवाद विरूद्ध घृणावाद, निरन्तर प्रकाशन प्रा.लि., काठमाडौं, २०६५:१३८-३९) ।

भारतवर्षको र बाइबलको तुलनात्मक महत्व बुझ्ने महाकवि लक्ष्मीप्रसाद देवकोटाको भनाई यहाँ स्मरणीय छ - "मलाई बाइबल

साहित्यजस्तो लाग्छ, अलि मिठो तर धर्म पुस्तक मेरा लागि वेद नै हुन् । हामीलाई स्वदेशी भाइहरूसँग घमण्ड गर्न मन लाग्छ, अङ्ग्रेजी साहेब देख्नासाथ ग्रयाजुएटका ठाडो शिर नुन खाएको कुखुराको सिउर जस्तै झुक्तछन् । अङ्ग्रेजी बोल्न र अङ्ग्रेजसँग हाल मिलाउनु नै आर्य जातिका सदस्यको शिक्षाको पराकाष्ठा सम्झिन्छ । हाम्रो ध्येय नुनरोटी शिवाय छैन । हामी पैसाका निमित्त बेचिन्छौं र दुनियाँमा आत्मा बेचिरहेछौं" भन्ने सन्दर्भ अहिले हाम्रा लागि झनै सान्दर्भिक छ (देवकोटा, लक्ष्मीनिबन्ध संग्रह, २०६७ : १२८,४८,४९) । यो बुझ्ने बौद्धिक जमात के अहिले हामीसँग छन् ?

यसैगरी लिम्बूपरिवारमा जन्मिएर नेपालीभाषा साहित्यमा आफ्नो बेग्लै पहिचान बनाउनु भएका, नेपाल प्रज्ञा प्रतिष्ठानका कूलपति बैरागी काइँलाको भनाई उल्लेखनीय छ "क्रिश्चियन हुनेलाई सारा चिजमा सघाउँछ, आर्थिक सहयोग पनि दिन्छ । तर ऊ मर्दा एउटा तामाङलाई घेवा गर्न दिँदैन, तराईमा लिम्बूलाई आफ्नो संस्कारअनुसार गर्न दिँदैन । उनीहरूकै हिसाबले क्रुस राखिदिएर कफिन बनाएर गाड्न लगाउँछन् । यसरी क्रिश्चियनले त संस्कृति नै सखाप गऱ्यो । यो सबभन्दा खतरनाक छ ।

सर आइज्याक न्यूटन(क्याथोलिक चर्च द्वारा प्राचीन सत्य धर्मलाई भ्रष्ट गरिएको छ । यी पादरीहरू नग्न महिलाहरूलाई हेरेर किन उनीहरूलाई प्रताडित गर्दछन्?“
जर्ज बर्नाड शा जसको शिक्षाको आधार बाइबल छ ती मानिसहरू पूर्णतः कुसूचित छन् र सबै प्रकारले अयोग्य छन् ।"

जोमो कन्याटा (केन्याका पूर्वराष्ट्रपति) जब इसाईमिसिनरीहरू अफ्रिका आए त्यतिबेला उनीहरूसँग बाइबल थियो र हामीसँग जमिन । उनीहरूले हामीलाई आँखा चिम्लेर प्रार्थना गर्न लगाए । पछि आँखा खोल्दा हाम्रो हातमा बाइबल थियो उनीहरूको हातमा जमिन ।"

डा. सर्वपल्ली राधाकृष्णन् (भारतका पूर्वराष्ट्रपति)... "धर्मपरिवर्तनका लागि कसैसँग पनि बल प्रयोग तथा प्रलोभनको के औचित्य छ ? जबकि जुन धर्ममा कुनै ब्यक्तिलाई धर्मान्तरण गरिदैंन त्यस धर्मले स्वयंमा पूर्णताको दावा गर्न सक्दैन । यसकारण धर्मान्तरको निन्दा गरिनुपर्छ तथा यसलाई अवैध घोषित गरिनुपर्छ ।)"

स्वामी [illegible] समाजको एउटा सदस्य धर्मान्तरित हुन्छ तब समाजको एक संख्या कम मात्र हुँदैन किन्तु समाजमा एउटा शत्रु पनि बढ्छ ।"

थोमस जेफर्सन (अमेरिकी पूर्वराष्ट्रपति)..."इसाईधर्मले शुरुवातदेखि नै सबैलाई जेलनेल ठोकियो... कैयौँलाई ज्यूँदै आगोमा होमियो... कयौँलाई मानिसक यातना प्रगति भएन । यस्तो बिनाअर्थको जोरजबर्जस्ती र हिंसाको के प्रयोजन ? जनसंख्यालाई ढाँटेर, छलेर, दिग्भ्रमित पारेर मूर्ख बनाउने दुष्प्रयास भयो भने आधा जनसंख्यालाई पाखण्डी बनायो ।"

महागुरू फाल्गुनानन्द (राष्ट्रिय विभूति)किरातीहरूलाई कसैले सूर्यवंशी भन्नु, मार्गी सोधे शिवमार्गी भन्नु । अर्काको नक्कल गर्दा आफ्नो संस्कृति, पहिचान हराउने भएकोले आफ्नो इतिहास, धर्म, संस्कृति, संस्कार, लिपि र कर्ममा अडिग रही बस्नु ।"

बर्टेण्ड रसेल (why I am not a chrisitian) का लेखक, एंव महान् चिन्तक) "म इसाईहरूलाई संसारकै सर्वश्रेष्ठ तथा बुद्धिमान् थिए भन्ने कुरा कहिल्यै पनि मान्न सक्दिनँ । यीमाथिका प्रसङ्गहरू हेर्दा बाइबल स्वीकार गरेपछि मानिसले मानव हितभन्दा पर गएर यहोवाको नाममा पाष्टर र पोपको चाकरी गर्नुपर्ने देखिन्छ ।"

# पोप र तोपले फैलिए खीष्टीयनहरू

धर्मभित्रको अन्तरवस्तुलाई बुझेर त्यसतर्फ आकर्षित हुन् आफैँमा गर्व लाग्दो विषय हो । तर सुसमाचार सुनाउने निहुँमा, लोभानीपापानी देखाएर फसाउँदै धर्ममा तान्नु महाभूल होइन पाप नै हो । खीष्टीयन धर्मशास्त्र बाइबल महामानव येशूको वचन समेटिएको ग्रन्थ हो भन्नेले यसलाई पोप र तोपको आडमा फैलिएको तथ्य बुझ्न आवश्यक छ । हाल आममानिसहरूको गुनासो छ कि संसारभरी खीष्टीयनहरू यसरी बढ्नुको पछाडिको प्रमुख कारण येशूको नाममा व्यापार, डर, लोभ झुट्टा नै हो । बाइबलको केही अंश येशूको वचन विपरीत छ । हाल विश्व बजारमा पाइने बाइबलभित्र तलवार युद्ध हिंसाको लागि घनीभूत जग बसाइएको छ । यसै जगको सहारामा विश्वमा तीब्रगतिमा खीष्टियनहरू फैलन पुगेका छन् ।

जिसस क्राइष्ट भन्छन्: म पृथ्वीमा शान्ति ल्याउन आएको हूँ भनी नठान । शान्ति ल्याउन होइन तर तरवार चलाउनलाई म आएको हूँ, किनकि म मानिसलाई उसका बाबुको विरुद्ध, छोरीलाई तिनकी आमाको विरुद्ध र बुहारीलाई तिनकी सासूको विरुद्ध आएँ । मानिसका शत्रु उसको आफ्नो परिवार भित्रकैहरू हुनेछन् । (पवित्र बाइबल, मत्ती १०:३४-३६) । इसाईहरू कसरी आक्रामक रूपमा प्रस्तुत हुन्छन् भन्ने कुराका केही उदाहरणहरू उल्लेख गर्नु सान्दर्भिक हुन्छ । "परमप्रभू तिमीहरूका परमेश्वरले तिमीहरूलाई बस्न दिनुहुने कुनै पनि सहरमा कतिपय दुष्ट मानिसहरू गएर त्यहाँका बासिन्दाहरूलाई कहिल्यै नचिनेका देवताहरूलाई पुजौं भनी बहकाएका तिमीहरूले सुन्यौ भने सोध-खोज गरेर केरकार गर्नु र त्यस्तो घृणित काम भएकै रहेछ भनी प्रमाण मिल्यो भने तिमीहरूले त्यस सहरका बासिन्दाहरूलाई अवश्य काट्नु । त्यस सहरलाई नाश पार्नु, त्यहाँ भएका

गाई-वस्तुसमेत सबैलाई तरवारले मार्नु । त्यहाँका सबै मालमत्तासमेत त्यस सहरलाई जलाई दिनु र परम प्रभू तिमीहरूका परमेश्वरका निमित्त त्यो होम बलिभैं हुनेछ ।"(बाइबल व्यवस्था पुस्तक) ।

"मलाई साँच्चै नै भन्न मन लागेको छ कि चर्चहरूमा संगठित इसाईधर्म संसारमा विकास हुने नैतिकताको शत्रुका रूपमा देखिएको छ । अब पनि मुख्य दुश्मनका रूपमै रहेको छ ।"

परमप्रभूले भन्नुभयो "सहर अर्थात् यरूशेलमभित्र चारैतिर जा र त्यसमा गरिएका सबै घिनलाग्दा कामहरू देखेर शोक र विलाप गर्ने सबै मानिसहरूका निधारमा चिह्न लगा । ....तिमीहरूले कसैमाथि दया नगर्नू । बूढा मानिस, तरूणी, तन्नेरी, बालकहरू र स्वास्नीमानिसहरू सबैलाई खतम पार । त्यो चिह्न भएको कसैलाई पनि नछोड । मेरो पवित्र स्थानदेखि नै शुरु गर । ....भवन बिटुलो पारिदेऊ । चोकहरू मारिएका लासहरूले भरिदेऊ । जाऊ यसकारण तिनीहरूले गएर नाश पारे ।" (पवित्र बाइबल, इजकिएल ९:४-७) पवित्र बाइबल भन्छ, विपत्ति मर्नेहरू चौबीस हजार थिए ।

"त्यस मानिसका सातजना छोराहरूलाई हामीकहाँ सुम्पिदिनुहोस् र परमप्रभूका चुनिएका राजा शाऊलको गिबामा परमप्रभूको सामुने हामी तिनीहरूलई तल हुत्याई दिएर मार्नेछौं । ....तिनले उनीहरूलाई गिबोनीहरूका हातमा सुम्पिएर, ..र तिनीहरूले उनीहरूले उनीहरूलाई परमप्रभूको सामने पहाडदेखि तल हुत्याई दिए । ती सातै जना एकसाथ तल खसे । तिनीहरू जौको कटनीको शुरूमा फसलको पहिलो दिनमा मारिए । एयाहकी छोरी रिस्पाले भाङरा लिएर कटनीको शुरूदेखि जबसम्म आकाशबाट पानी तिनीहरूका मृत-शरीरमा तबसम्म आफ्नो निमित्त त्यस चट्टानमा ओछ्यानजस्तै बनाई । त्यसले दिनमा आकाशका पंक्षीहरू र राती जङ्गलका पशुहरूलाई ती लासहरू खान दिइन्" (पवित्र बाइबल, २ शमूएल २१:६-१०) यी तमाम बाइबलीय वचनलाई हेर्दा खीष्टीयनहरू खीष्टीयनिटीको प्रचार पोपवाद र तोपको कारण फैलिएको प्रष्ट हुन्छ । बाइबलीय कतिपय वचन यस्ता छन् जसले मानिसलाई युद्ध र अपराध गर्न उक्साइरहेका हुन्छन् ।

# बाइबलले स्त्रीलाई यातना दिन सिकायो

बाइबललाई अध्ययन गर्दा नारीहरूमाथि भएको शोषण र दमनबारे प्रष्ट हुन्छ । पुरानो करारमा नारीको स्थान अत्यन्तै न्यूनस्तर भएको पाइन्छ । बाइबलले नारीवर्गको निन्दा गरेको छ । उनीहरूलाई धार्मिक रूपमा नै दासी बनाइएको छ । पुरुषहरूको समकक्ष हुन खोज्ने नारीलाई नरकको भय देखाइएको छ । नारी जातिको सन्दर्भमा धर्म, संस्कृति र राजनीतिको प्रमुख लक्ष्य नै उनीहरूलाई मनोवैज्ञानिक रूपमा अपाङ्ग बनाउनु हो । पुरुषमा नारीलाई निर्भर बनाउन विभिन्न मनोवैज्ञानिक उपाय अपनाइएको पाइन्छ । पुरुषहरूले नारीहरूलाई मनोमानी गर्न खासै कठिन भएको देखिन्न । पुरुषहरूले नारीलाई कहिल्यै शिक्षा र अवसर दिएनन् । सिङ्गो बाइबलको इतिहासमा नारी जति शोषित भए यिनीहरूमाथि जति शोषण, दमन, अन्याय र अत्याचार भयो यस्तो बर्बरतापूर्ण व्यवहार अरु कसैमाथि भएन । हब्बादेखि अहिलेसम्म ठगिएको वर्ग नै नारी हुन् । बाइबलको इतिहास हेर्ने हो आदिमकाल (हब्बा) देखि स्त्रीहरूको अपमान गरिन्थ्यो । परमप्रभू परमेश्वरले उनी (पुरुष) निदाएको बेला उनका करङहरूमध्ये एउटा निकाल्नु भई त्यसको ठाउँमा मासु भरिदिनुभयो । जुन करङ परमप्रभू परमेश्वरले मानिसबाट निकाल्नु भएको थियो, त्यसबाट एउटी स्त्री बनाउनु भई मानिसकहाँ ल्याउनुभयो । (पवित्र बाइबल, उत्पत्ति २:२१,२२) ।

जुन ईश्वरले आदमलाई धुलोबाट बनाए भने उनकी (उसकी) नारीलाई किन धुलोबाट बनाएनन् ? त्यस्तै नारीलाई हड्डीबाट बनाए भने आदमलाई हड्डीबाट किन बनाएनन् ? त्यस्तै नरबाट उत्पत्ति हुनाले नारी नाम भएको हो भने नारीबाट निस्केर नर पनि हुनुपर्दथ्यो । त्यस्तै उनीहरूमा परस्पर प्रेम रह्यो । जस्तै स्त्रीसँग पुरुषले प्रेम गर्छन् । त्यस्तै

नारी पनि पुरुषसँग प्रेम गरुन् । ईश्वरको कस्तो पदार्थ विद्या (फिलोसोफी) छ । जुन आदमको एउटा करङको हड्डी निकालेर नारी बनाइयो भने सबै पुरुष (मनुष्य) हरूको एउटा हड्डी किन कम हुँदैन ? र, स्त्रीको शरीरमा एउटा हड्डीमात्र हुनुपर्दछ, किनकि उनी एउटा हड्डीबाट मात्रै बनेकी हुन् । के जुन सामग्री सबै जगत् बनाइयो, त्यसै सामग्रीबाट स्त्रीको शरीर बन्न सक्दैनथ्यो ? त्यसैले यो बाइबल सृष्टि क्रम वा सृष्टि विद्याको विरुद्ध छ । (सत्यार्थ प्रकाश, पृ ४०४महर्षि दयानन्द सरस्वती) ।

त्यसपछि आदमलाई उहाँ भन्नुभयो, "तैंले तेरी पत्नीको कुरा सुनेर मैले नखानु भनेको रूखको फल खाएको हुनाले भूमि तेरो कारण श्रापित भएको छ । तेरो जीवनभरि दुःखसँग त्यसको उब्जनी तैंले खानेछस् । त्यसले तेरो निमित्त काँडा र सिउँडीहरू समात्नेछन् । तैंले खेतको सागपात खानेछस् । (पवित्र बाइबल, उत्पत्ति३ः१-७ १४-१८) ।

यसैगरी बाइबलमा ईश्वरले आफ्नो आज्ञा नमानेको दण्ड नारीलाई दिए । उहाँले स्त्रीलाई भन्नुभयो, "तेरो सुत्केरी-वेदना म ज्यादै गरी बढाइदिनेछु । दुःखसँग बालक जन्माउनेछस् । तेरो इच्छा पतितर्फ नै हुनेछ र त्यसले तँलाई अधीनमा राख्नेछ ।" (पवित्र बाइबल,उत्पत्ति ३ः१-७, १७-१८) ।

मोशाले तिनीहरूलाई भने "के तिमीहरूले सबै स्वास्नी मानिसहरूलाई जिउँदै राख्यौ । हेर, यिनीहरूले नै बिलामको युक्तिद्वारा अपराध गर्न लगाएका थिए । यसै समुदायको बीचमा विपत्ति पनि आएको थियो । यस कारण सबै नाबालिकहरूमध्ये केटा जत्तिलाई र पुरुषको सम्पर्कमा आएका स्त्रीहरूलाई मार ।"(पवित्र बाइबल गन्ती, ३१:१-१७) ।

• "तिमीहरूले यो बुझ भन्ने म चाहन्छु कि हरेक मानिसको शिर ख्रीष्ट हुनुहुन्छ, स्त्रीको शिर तिनको पति हो, ख्रीष्ट शिर परमेश्वर हुनुहुन्छ । प्रार्थना गर्दा वा अगमवाणी बोल्दा आफ्नो शिर ढाक्ने मानिसले आफ्नो शिरको अपमान गर्दछ । तर शिर खुला राखेर प्रार्थना गर्ने अथवा अगमवाणी बोल्ने स्त्रीले आफ्नो शिरको अपमान गर्दछे, किनकि यो तिनले आफ्नो केश खौरेको जस्तो हो । किनकि कुनै स्त्री शिर ढाक्दिन भने बरु तिनले केश काटोस् । केश काट्नु कि खौरनु स्त्रीको निम्ति सर्मको कुरा हो भने तिनले शिरमा घुम्टो हालोस् । किनकि पुरुषले स्त्रीबाट बनिएको

होइन, स्त्रीचाहिँ पुरुषबाट बनिएकी हो । स्त्रीको निमित्त पुरुष सृष्टि भएको होइन, तर स्त्री पुरुषको निमित्त हो । यसै कारण स्वर्गदूतहरूका खातिर स्त्रीले आफ्नो शिर घुम्टोले ढाकेको (पवित्र बाइबल १-कोरन्थी ११:३-१०) ।

- "स्त्रीले चुप रहेर अधीनतामा बस्न सिक्नुपर्छ । म स्त्रीले पुरुषलाई सिकाउने अनि अधिकार गर्ने अनुमति दिन्नँ । ऊ चुप नै रहोस् किनकि पहिला आदम बनाइएका थिए, तब हव्वा किनकि आदम छलिएका होइनन् तर स्त्री पो छलिएर पापी भएकी हुन् ।"
- "तिमीहरूले आइमाईलाई तन्त्रमन्त्र गर्न दिनुहुँदैन । यदि उसले तन्त्रमन्त्र गर्छे भने उसलाई मार्नुपर्छ ।" (पवित्र बाइबल, प्रस्थान, २२:१८)
- "यदि कुनै स्त्रीले पशुसँग सम्भोग गरे त्यस स्त्री र पशुलाई मार्नपर्छ । तिनीहरू आफ्नो मृत्युका निम्ति आफैँ जिम्मेवार हुन्छन् ।" (पवित्र बाइबल लेवी, २०:१६)
- "एउटी स्त्री आफ्नो पति बाचुँन्जेल उसको अधीनमा हुन्छे ।" (पवित्र बाइबल १ कोरिन्थी, ७ :३९)
- "स्त्रीहरू मण्डलीमा चुप रहुन् । तिनीहरूलाई बोल्ने अनुमति छैन तर अधीनमा बसून् (पवित्र बाइबल भन्छ ।)

"यदि तिनीहरूले कुनै कुराबारे सोध्न चाहन्छन् भने तिनीहरूले घरमा पतिहरूलाई सोध्नुपर्छ किनकि स्त्रीहरूले मण्डलीमा बोल्नु शरमको कुरा हो ।" ९पवित्र बाइबल, १ कोरिन्थी, १४:३४-३५)

नारीका सन्दर्भमा चर्चको नैतिक प्रभावलाई उनी नकारात्मक मान्दछन् । उनका अनुसार नारीको दासता, उसलाई पापको भावनाले जोड्नु, विवाहेत्तर यौनसम्बन्धलाई भयङ्कर अपराधको दर्जा दिनु, नारीको सौन्दर्यलाई पुरुष पतनको मुख्य कारण सम्झनु आदि कुराहरू चर्चका नकारात्मक प्रभावका परिणाम हुन् । यसै गरी इसाईमतमा रसेलले गुणको अनुपातमा अवगुणको मत (मात्रा) धेरै पाए । यो मतको आलोचना गर्ने क्रममा उनले ईसा मसीहसमेतलाई छोडेनन् । उनी हाम्रो ध्यान यो तथ्यतिर तान्छन् कि अहिंसाको पाठ ईसाभन्दा धेरै वर्षअगाडि बुद्ध तथा लाउत्सेले ५-६ सय वर्षअघि नै प्रयोग गरेका थिए । उनको विचारमा कसैले तिम्रो गालामा एक थप्पड हान्यो भने तिमी अर्को गाला थापिदेउ भन्ने

भनाई कुनै नयाँ कुरा होइन । यो त, वास्तवमा इसाईहरूले स्वीकार गरेको सिद्धान्त होइन, अनुकरणमात्र गरेको हो । (विश्वप्रसिद्ध लेखक एवं महान् चिन्तक वट्राण्ड रसेल) ।

ईसाको आलोचना गर्दै उनी भन्छन् "अनन्तकालसम्म चल्ने दण्डमा विश्वास गर्ने मानिस त्यही हुनसक्छ, जसमा मानवताको गहिरो अभाव छ ।"

रसेल येशूलाई एक साधारण मानिसको रूपमा हेर्छन् र सुकरातसँग उनको तुलना गर्दै भन्छन् "सुकरातले ती सबै व्यक्ति जसले उनलाई दण्ड दिए तथा जो उनको मतसँग असहमत थिए, तिनीहरूलाई क्षमा गरिदिएका थिए ।"

पाँचौं शताब्दीको शुरूमा सेन्ट अगस्टाइनले भनेका थिए- 'जसरी आत्माले मांसपेशीमाथि अधिकार राख्दछ त्यसैगरी पतिले पत्नीमाथि अधिकार राख्दछ ।- We must conclude that a husbands is mean to rule over his wife as like spirit rules over the flesh.

सेन्ट पौलको भनाई कोरिन्थिन ११.८.९ मा उल्लेख भएअनुसार - "पुरुष स्त्रीबाट उत्पन्न हुँदैनन् अपितु स्त्री पुरुषबाटै उत्पन्न हुन्छे । पुरुषको सिर्जना महिलाका लागि होइन अपितु पुरुषका लागि नै महिला भएका हुन् ।"- For a man did not oroginally spring from woman, but woman was made out of a man, and was not created for woman's sake, but woman for the sake of man.

वि.सं. २०३४ (१९७७) मा पोप लाल छैठौंले भनेका थिए - "महिलालाई पूजा गर्ने अधिकार छैन किनभने हाम्रा ईश्वर पुरुष हुन् ।"- Women have no right to worship God. Because our God is a male.

पोप लाल पहिलोले टिमोथिलाई लेखेको पत्रमा उल्लेख छ -"म कुनै महिलालाई शिक्षिका बनाउने आदेश दिन सक्तिनँ, न त उसलाई पुरुषमाथि हालीमुहाली गर्ने अधिकार दिन सक्तछु । महिला शान्तिसँग चुपचाप बस्नुपर्दछ ।"- Let a woman learn in silence with all submissiveness. I permit to woman to teach or to have authority over man, she is to keep silent.

तेस्रो शताब्दीका टर्टलिअलनले भनेका थिए -"स्त्री पुरुष समान कहिल्यै हुन सक्दिन । स्त्रीमा स्वतन्त्र विवेक हुँदैन । अतः ऊ आफ्ना

लागि निर्णय लिने अधिकारी होइन । ऊ व्यक्तिगत निर्णय लिने अधिकारिणी पनि होइन । ईश्वरले सृष्टिको मूल विचार योजनामा नारी जाति नै नभएकाले ऊ एक गौण विचारकी परिणति मात्र हो । नारी सैतानको द्वार हो । (शास्त्रदत्त पन्त - नेपालमा इसाईको चलखेल पृ नं. ७३) ।

विश्वमा इसाई एउटा यस्तो धर्म हो जसले स्त्रीलाई कहिल्यै पनि उदार रूपमा लिएन किनकि बाइबलमा पुरुष सृष्टि pre-planned हो भने स्त्री सृष्टि after-planned हो । विश्वमा एउटा बाइबल नै यस्तो धर्मशास्त्र हो जहाँ नारीको पक्षमा एउटा पनि पद छैन । बाइबलको हरेक ठाउँमा नारीलाई पुरुषभन्दा निकै पछाडि राखिएको छ । सायद त्यही भएर नै होला कि रोमतिरका चर्चका महाअत्याचारी पादरीहरूले स्त्री जातिलाई अति नै शोषण गर्दथे, एउटी दासीभन्दा पनि नराम्रो तरिकाले हेर्दथे । चर्चका पादरीहरूले भनेको मानेनन् भने नारीमाथि विभिन्न आरोपहरू लगाएर जिउदै जलाउने, उम्लिरहेको तेलमा जिउदै हाल्ने, जिउदै गाड्नेजस्ता क्रुर एवम् अमानवीय सजायहरू दिन्थे । (विज्ञानको नजरमा वेद र बाइबल-२०७३, सुरेन्द्र गौतम/नवराज पनेरु) ।

अन्तमा एउटै प्रक्रियाबाट नौ महिना गर्भमा राखेर हुर्काइएका दुई बच्चाबीच लैङ्गिक आधारमा एक बच्चालाई बाइबलले चरम यातना दिन छुट दिएको देख्दा खोजकलाई बाइबलको यी अनुच्छेदहरू परमेश्वरको अदालतसमक्ष पेश गर्ने अनुमति माग गर्दछ ।

# राष्ट्र संघको घोषणा पत्र विरुद्ध बाइबल

संयुक्त राष्ट्र संघद्वारा सन् १९४८ मा सम्पूर्ण मानव जातिको नैसर्गिक अधिकारका सम्बन्धमा एक दस्तावेज बाहिरियो जसलाई Universal Declaration of Human Rights भनिन्छ । संयुक्त राष्ट्र संघको महासभाले १० डिसेम्बर १९४८ मा सर्वसम्मत पारित गरिएको सवै मानवजातिको साझा दर्शन सवै सदस्य राष्ट्रहरूले आफ्ना नागरिकहरूलाई दिनुपर्ने पहिलो कर्तव्य हो ।

घोषणा पत्रको धारा १ अनुसार सवै मानिस स्वतन्त्र जन्मिएका हुन्छन् । इज्जत तथा अधिकार पनि समान हुन्छ । यस बुँदामा उल्लिखित सबै शब्दहरू महत्वपूर्ण छन् । यो वाक्यले नारी र पुरुषको समानताको वकालत गरेको छ । इज्जत र अधिकार बराबरी भएको बताएको छ । त्यस्तै घोषणा पत्रको धारा १६ अनुसार बालिग महिला पुरुषलाई जातीय राष्ट्रिय वा धार्मिक बन्धनरहित भएर विवाह गर्ने अधिकार हुनेछ । तिनीहरूलाई विवाह र विवाहविच्छेदमा समान अधिकार हुनेछ । दुवै पक्षको स्वतन्त्र सहमतिद्वारा मात्र विवाह र विवाहविच्छेद हुनुपर्ने छ ।

अब हेरौँ बाइबलतर्फ बाइबलको व्यवस्था अध्याय २४ को पद १ को ४ "आफ्नो विवाह गरेकी स्त्री केही खोट पाएर त्यससँग असन्तुष्ट भई त्यसलाई त्यागपत्र लेखिदिएर कसैले आफ्नो घरबाट निकालिदियो भने र यदि घर छोडेपछि त्यो अर्को मानिसको पत्नी भई र दोस्रो लोग्ने पनि असन्तुष्ट भई त्यसलाई त्यागपत्र लेखिदिएर त्यसलाई आफ्नो पत्नी तुल्याउन पाउने छैन । परमप्रभूको नजरमा यो एक घृणित काम हो । परमप्रभू तिमीहरूका परमेश्वरले तिमीहरूको अधिकारमा दिनुहुने देशमा पापको कलंक (स्त्री पापको कलंक) नल्याउनु" ।

यसरी अन्तराष्ट्रिय कानुनमा स्वतन्त्रता र बाइबलका कानुनले पराधीन देखाएपछि लेखकले अन्तराष्ट्रिय कानुन र बाइबलका कानुनलाई परमेश्वर अदालतमा पेश गरेका हो ।

# बाइबल अश्लील साहित्य पनि हो

नेपालमा प्रेस तथा प्रकाशनसम्बन्धी ऐनअनुसार अश्लील साहित्यमाथि कानुनी तवरबाट रोक लगाइएको छ । यस्ता अश्लील साहित्य प्रकाशन एवम् बिक्रीवितरण गर्नु अपराध हो । बाइबल हरेक हप्ता चर्चहरूमा पढाइदा त्यहाँ गएका बालवालिका र नारीहरूलाई कस्तो असर पर्ला ? बालबालिकाहरूको कलिलो मस्तिस्कमा यस्ता अश्लील प्रसंगले कस्तो विकृति पैदा होला ? निम्न लिखित बाइबलका प्रसङ्ग मैले परमेश्वरको अदालतमा पेश गरैं ।

बाइबलले वर्णन गरेको सभ्यता र त्यहाँ बसोबास गर्ने नारीहरूको अवस्था हेर्दा त्यस समयमा एउटा पुरुषलाई आफ्नो पत्नीको जीवन खोस्न अधिकार पनि थियो । वेश्यावृत्ति तथा नग्नता सामान्य थियो । मिश्री मानिसहरूले स्त्रीलाई सैतानको रूप मान्दथे । युनानी समाजको प्रत्येक वर्गमा वेश्यावृत्ति एउटा सामान्य परिपाटी नै बनेको थियो ।
खीष्टीयन ग्रन्थ बाइबलमा आफ्नै बाबुसँग मद्यपान गरी (रक्सी पिएर) संभोग गर्ने कुरालाई खुलमखुल्ला मान्यता दिइएको छ ।

"हामी आफ्नो बुबालाई मद्य खुवाएर उहाँसँग सुतौं र आफ्नो पिताबाट सन्तान खडा गरौं । त्यसै रात तिनीहरूले आफ्नो पितालाई दाखमद्य खुवाए र जेठीचाहिँ आफ्नो पिताकहाँ गएर सुती । त्यो सुत्न आएको र उठेर गएकी लोत (पिता) लाई केही अत्तोपत्तो भएन । भोलिपल्ट जेठीले कान्छीलाई भनी "हेर हिजो राति म बुबासित सुतें । आज राति पनि उहाँलाई मद्य खुवाऔं र तँ गएर उहाँसित सुत् । हामी आफ्नो पिताबाट सन्तान खडा गरौं ।"

यसरी तिनीहरूले त्यस रात पनि आफ्नो पितालाई दाखमद्य खुवाए र कान्छीचाहिँ गएर उहाँसित सुती । त्यो सुत्न आएको र उठेर गएकी लोतलाई केही थाहा भएन । यसरी लोतका दुबै छोरीहरू आफ्नो पिताबाट गर्भवती भए"(पवित्र बाइबल, उत्पत्ति १९:३२-३६) ।

"धेरै क्रिश्चियनहरू माछाले जस्तै धेरै पिउँछन् र शनिवार राती आफ्नो श्रीमतीहरूलाई पिट्छन् । त्यसपछि आइतवार धर्मको मुकुण्डो ओढेर चर्चमा उपस्थित हुन्छन् ।"(हिमालयका चित्कारहरू : नेपाली संस्करणबाट, डी.बी. गुरूङ) ।

बाइबलमा व्यभिचारको प्रसङ्गमा केवल नारीलाई मात्र दोष दिई पुरूष दोषको चर्चा कमै पाइन्छ । मानौं वेश्यावृत्ति पुरूषविना नै होस् । परमप्रभूको यो वचन मकहाँ आयो, हे मानिस ! कुनै समय दुई स्त्री थिए- एउटै आमाका दुई छोरीहरू । तिनीहरूले मिश्र देशमा वेश्यावृत्ती गरे । तरूणी अवस्थामा हुदाँहुदै तिनीहरूले वेश्यावृत्ति गरे । त्यहाँ तिनीहरूका स्तन मिचिए र तिनीहरूको कुमारी अवस्थाको स्तन माडिए । तिनीहरूमा दिदीचाहिँको नाउँ ओहोला र बहिनीको नाउँ ओहोलीबा थियो । .....मेरो हुँदाहुँदै पनि ओहोलाले वेश्यावृत्ति गरी । आफ्नो प्रेमी असूरहरूसित त्यो मोहित भई । तिनीहरू सबै बैजनी वस्त्र लाउने योद्धा राज्यपाल र सेनापतिहरू थिए । ती सब सुन्दर जवान मानिसहरू घोडामा सवार गर्ने घोडचढीहरू थिए । त्यसको कुमारी अवस्थाको स्तनमा हात लगाएर आफ्नो काम वासना त्यसमाथि पोखाए । ...यस्ता प्रेमीहरूसित त्यो मोहित भई, जसका लिङ्ग गधाहरूका जस्ता थिए र वीर्यचाहिँ घोडाहरूका झैँ निस्कन्थ्यो । यसरी मिश्रीहरूले तेरो छातीमा हात लगाएका तेरा युवावस्थाका स्तन माडेका कुरा सम्झेर तँ आफ्नो युवावस्थाको कामुकताको कुइच्छा गर्दछेस् । "(पवित्र बाइबल, इजकिएल २३: १-२१) ।

यो पुस्तकको व्याख्याले कामशास्त्रलाई नै लज्जित लुत्याएझै लाग्छ । त्यसैले होला, उन्नाइसौँ शताब्दीमा बाइबलको अनुवाद चीनमा हुँदा अश्लील साहित्य भनी निन्दा र प्रचार प्रसारमा रोक लगाइएको घटना स्मरणीय छ ।

मोशाले तिनीहरूलाई भने "के तिमीहरूले सबै स्वास्नी मानिसहरूलाई जिउँदै राख्यौ ? हेर, यिनीहरूले नै विलापको युक्तिद्वारा इस्राएलीहरूलाई पारेमा परमप्रभूको विरूद्धमा अपराध गर्न लगाएका थिए । यसै कारण सबै नाबालिकहरूमध्ये केटी जति पुरूषको सम्पर्कमा आएका स्त्रीहरूलाई मार (पवित्र बाइबल, गन्ती ३१ :१५-१७)

"परमप्रभूले यो पनि भन्नुभयो सियोनका छोरीहरू अहंकारी छन्, मुन्टो ठाडो गर्दै, आँखा तर्काउँदै, कल्की पहिरी छमछम गर्दै स्वाँग पारेर हिँड्छन् । यसप्रकार परभप्रभूले सियोनका छोरीहरू टाउकोमा लुतैलुतो भरिदिनु हुन्छ । परमप्रभूले गुप्त अङ्गहरू नाङ्गो गराउनुहुन्छ । त्यस दिन परमप्रभूले तिनीहरूका श्रृङ्गारका गहनाहरू अर्थात् शिरबन्दी, चन्द्रहार, झुम्का, चुरा, पछ्यौरा, मुकुट, घुम्टो, बाजु, पटुका, अत्तरदानी र जन्तर, औंठी र नत्थी, उत्सवका वस्त्र अलखा, शाल र थैली, हाते-ऐना र मसिनो मलमल, मजेत्रो र घुम्टोहरूको शोभालाई हटाउनुहुनेछ । सुगन्धित मसलाको सट्टामा सडेको दुर्गन्ध हुनेछ र पटुकाको सट्टामा डोरी राम्ररी बाटेको कपालको सट्टामा मुडुली हुनेछ, सुन्दर वस्त्रको सट्टामा भाङ्गको पटुका र सुन्दरताको सट्टामा डामैडाम हुनेछ । तेरा मानिसहरू तरवारले मारिने छन् । तेरा वीरहरू लडाइँमा नाश हुनेछ । सहरका मूल-ढोकाहरू विलाप गर्नेछन् । तिनीहरू सहर उजाड भएर जमिनमा सोत्तर हुनेछ । (पवित्र बाइबल, यशैया १६:२५)

बाइबल हेर्नै नसकिने अश्लील दृश्य देखेर पनि पवित्र शास्त्र हो भन्ने पास्टर र अगमवक्तालाई देख्दा खोजकारलाई आश्चर्य लाग्छ । यही आश्चर्यलाई दूर गर्न बाइबल अश्लील साहित्य हो की होइन भनी परमेश्वरको अदालतसमक्ष खोजकार पुगेको छ ।

# पोप र पापमोचन पत्र

इसाई धार्मिक संघका धार्मिक सिद्धान्त विशेषताहरू निम्नअनुसार छन् : तिनले धर्मको मामिलामा सर्वोच्च प्रमाण बाइबललाई मान्ने गर्दछन् । (क्याथोलिक र अर्थोडक्समतमा इसाई धार्मिक सङ्घको सत्तालाई धेरै महत्व दिने गरिन्छ, उनीहरूले आस्था र विश्वासद्वारा पापमोचन सम्भव ठान्छन्) क्याथोलिकमत त्यसको लागि पवित्र कार्य अर्थात् इसाई धार्मिक सङ्घलाई दान दिनु समेत आवश्यक मान्दछ । सातको साटो केवल दुई संस्कारहरू वपतिस्मा र यूखारिस्तमा विश्वास गर्ने गर्दछन् अनि तिनलाई समेत त्यतिबेला प्रभावकारी हुने मान्दछन्, जतिबेला तिनका पछाडि विश्वासको शक्ति पनि हुन्छ । क्याथोलिकहरूले जस्तै उनीहरूले तिनलाई स्वतः प्रभावकारी हुने ठान्दैनन् । (धर्मको इतिहास, पृ. ३४७ से.तोकारेव) ।

१३ औँ शताब्दीमा खीष्टीयहरूले स्वतन्त्र ढङ्गमा सोच्नेहरूलाई जेलमा कोचिदिन्थे मृत्युदण्ड दिन्थे, डर-त्रास देखाएर आफ्नो विश्वास परित्याग गर्न बाध्य पारिन्थ्यो । (से. तोकारेव धर्मको इतिहास)
पोप लियो दसौँले रोमबाट पापमोचन पत्र जारी गरे । पापमोचनपश्चात् जुन पापी पनि मुक्त हुन सक्छन् भनी धेरै रकम उठाइयो । विश्वको इतिहास (२०७०, पृ. १०८, प्रा. डा. श्रीरामप्रसाद उपाध्याय)
इसाईधर्मले विज्ञान र स्वतन्त्र चिन्तनलाई दमन गरेको थियो, त्यसरी विश्वको अरू कुनै धर्मले दमन गर्ने गरेको छैन । ( धर्मको इतिहास पृ.२४६से. तोकरेव) ।

पादरीहरूले कुनै काम गर्दैनथे तर यिनीहरू भोगविलासमा प्रशस्त खर्च गर्दथे । (विश्वकै इतिहास, २०७० पृ. १०८, प्रा. डा. श्रीरामप्रसाद उपाध्याय) ।

इसाई धार्मिक सङ्घका धार्मिक सिद्धान्तानुसार तिनीहरूले धर्मको मामिलामा सर्वोच्च प्रमाण वाइबललाई मान्ने गर्दछन् । उनीहरूको आस्था र विश्वासअनुसार पापमोचन हुन्छ भन्ने ठान्दछन् । उनीहरू इसाई धार्मिक

संगठनलाई दान दिनु आवश्यक ठान्दछन् । खीष्टीयनद्वितीयले सबैको सम्पत्ति खोसेर पद्च्यूत गरे किनकि उनीहरू अति नै भ्रष्ट थिए । (मण्डलीको इतिहास पृ. १२६) ।

ए.डी. १५१७ मा मार्टिन लुथरलाई खीष्टीयनको विरोध गरेका कारण तिनलाई मार्ने प्रयत्न गरे । यसकारण पोप पत्रुसको मेचमा बसेर कुनै शब्द बोल्छ भने त्यो शब्द मानिसको होइन परमेश्वरको हो भनी उनीहरू विश्वास गर्दछन् । (खीष्टीयन ईश्वरशास्त्रको महत्त्वपूर्ण शिक्षा-२००५ ई.सं., पृ. २२, डा. थोमस ह्वाङ ) ।

चर्चमा अनेक किसिमका कुरीतिहरू देखा पर्न थाले । पोप तथा पादरीहरूमा व्याभिचार र भ्रष्टचार बढ्न थाल्यो । यिनीहरूले पापमोचन पत्र बेचेर जबरजस्ती पैसा असुली गर्दथे । (विश्वको इतिहास-२०७०, प्रा. डा. श्रीरामप्रसाद उपाध्याय) ।

इसाई सम्प्रदायमा पोप विश्वको सबैभन्दा ठूलो सम्प्रदाय अधिकारी (धर्माधिकारी) मानिन्छ । पोपले आफूलाई ईश्वरको दूत, धर्माधिकारी आदि पदवीमा राख्छन् । उनलाई दैवी शासन अधिकारी (डिभाइन रूल) पनि भन्दछन् । लामो समयसम्म पोपले शासन पनि गरेका छन् । अहिलेसम्म भेटिकनसिटीराज्यका प्रमुख शासक पोप नै छन् । पोप धर्मगुरु नभएर सम्प्रदाय-शासन हुन् । पोप आदर्श र नैतिक शासन गराउन राज्यका सहयोगी नभएर आफैं क्रूर, अवैज्ञानिक र रूढीवादी शासक हुन् एउटा तानाशाह शासक । पोपको तानाशाहीको अगाडि इदिअमिन, हिटलर, मुसोलिनी, हुसेन वा गद्धाफी कोही पनि गोराबाहिरको व्यक्ति पोप भएको छैन ।

पोपले इसाई सम्प्रदायलाई क्याथोलिक भन्दछन् । ईशु जेरूसेलमको बेथ्लेहाममा जन्मेका हुन् तर पनि पोपले रोमको भेटिकनसिटीस्टेटलाई इसाईको पवित्र तीर्थस्थल मान्दछन् । यो सम्प्रदाय विशेषको इतिहास नभएर पोपको आदेशले बनेको हो । इसाईको भेटिकनसिटी मुसलमानको मक्काको रूपजस्तै मानिन्छ । पोपले ईशामसिहको सादा जीवन र उच्च विचारलाई मान्दैनन् । रोमको रीतिरिवाज आधारित, स्वच्छन्द, बासनायुक्त, मोजमस्तीले भरिएको ऐयासी जीवन प्रणाली अपनाउँदछन् ।

पठाइन्छ । तीबाहेक अरूलाई तल्लो तहमा राखिन्छ । दक्षिण अफ्रिकाको रङ्गभेद नीतिको शासन पोपको तानाशाहबाटै बनेको हो । त्यहाँ पोपले नियुक्त गर्ने पादरी पनि गोरामात्र हुन्छन् । संसारमा पोपको प्रत्यक्ष शासन हट्दै गए पनि पोपले अब पादरीबाट विश्वभर इसाई सम्प्रदायका राजदूतबाट शासन गरिरहेको छन् । नेपालमा धर्मनिरपेक्ष घोषणा गरे लगत्तै पोपले इसाई राजदूत नियुक्त गरेका छन् । (नेपालमा इसाईको चलखेल पृ. नं. ८३,डा. शास्त्रदत्त पन्त) ।

# खीष्टीयनभित्रको डरलाग्दो भेदभाव

धर्मबाट निर्देशित पवित्र र अपवित्रजस्ता भेदभावलाई छुवाछुत भनिन्छ । खीष्टियन समाजमा जातीय भेदभावले चर्को जरा गाडेको छ । खीष्टीयनधर्मभित्र थुप्रै छन् । रोमन क्याथोलिक, अर्थोडक्स रसियन अर्थोडक्स, एलिंकन, प्रोटेटेष्ट, पमेश्वरको मण्डली, योहोवाको साक्षी, अनुग्रहको मण्डली, विश्वासको मण्डली आदि । तपाईंलाई अचम्म लाग्न सक्छ, पोटेस्टेड मण्डलीभित्र २२,००० जात (उपसम्प्रदाय) हरू छन् । तिनीहरूले एक जातले अर्को जातलाई यति तल्लो व्यवहार गर्छन् कि उनीहरू मानिस नै होइनन् भन्ने सोच्दछन् । झुटो मण्डली, सैतान भनेर घृणा गरिन्छ । यतिमात्र होइन आफ्नो मण्डली वा सम्प्रदायभित्र पनि निग्रो र हब्सीलाई अत्यन्तै तल्लो जातिको रूपमा राखेको पाइन्छ । कथित हिन्दू पुरोहितहरूले दलितलाई गरिने व्यवहार र सियाले शुन्नीलाई गर्ने व्यवहारभन्दा कयौं गुणा बढी एउटा खीष्टीयनले  अर्को सम्प्रदायलाई घृणा र दुर्व्यवहार गर्दछन् । उनीहरूलाई मानवको संज्ञा पनि दिंदैनन् । झुटो मण्डली, सैतान, लुसीफर आदिको दर्जा दिइन्छ । मोशालाई स्वर्गदूतले दिएको ज्ञानको प्रकृति र त्यसको प्रभावलाई गहिराईमा पुगेर अनुसन्धान र विश्लेषण गर्ने हो आश्चर्य नै लाग्छ । यहोवा परमेश्वरको नाममा बाइबलभित्र जुन प्राणी हत्या, व्याभिचार र जातीय भेदभाव (मण्डलीको विभाजन) देखिन्छ यी सबै अशोभनीय भएको प्रष्ट हुन्छ । इसाई धर्ममा जातीय भेद्भाव, दासप्रथा र मुसाईको अपहरण हत्या, बलत्कार लुटजस्ता कारणले पछि यी धर्मजस्ता नभएर अपराधिक संगठन जस्त ाबने ।

यसबारे भारतको संविधान निर्माता दलित भनिने अम्वेडकरका अनुसार "भारतमा अङ्ग्रेजले उपनिवेश बनाएपछि धर्मपरिवर्तन गरी बनेका इसाईमध्ये ६० प्रतिशत अस्पृश्य समूहकै छन् । इसाई हुनुभन्दा पहिले र इसाई बनेपछिको उनीहरूको अवस्थामा कुनै सुधार आएको छैन बरु

पहिलेको भन्दा झन् नाजुक भएको छ । पहिले दलित जातिभित्र स्पृश्य थिए तर इसाई नबनेका सबै हिन्दू र दलितले समेत इसाई बनेकालाई अप्रिय व्यवहार गर्न थालेका छन् । आजसम्म पनि देशबाट पाइने सामाजिक अधिकारबाट समेत उनीहरू बञ्चित भएका छन् । इसाईले पनि उपेक्षित दृष्टिले हेर्दछन् । चर्चमा प्रार्थना गर्दा पछिल्लो लहरमा छुट्टै रेलिङ राखेर बसाउँदछन् र फरक व्यवहार गर्दछन् ।

अमेरिकामा बसेका गोरामा पनि यो विभेदको कारण राष्ट्रपति बन्ने कुरामा समेत प्रभाव परेको हुन्छ । ओबामाबाहेक अरु सबै राष्ट्रपतिमा यो कुरा लागु भएको पाइन्छ । त्यसबाहेक इसाई सम्प्रदायभित्रका अरु उपसम्प्रदायका बीचमा सानो र ठूलोको विभेद टड्कारो रूपमा देख्न पाइन्छ । रूपान्तरित इसाईहरू हेलाका पात्र हुन्छन् । यस्ता इसाईलाई सुसम्पन्न हुन नसक्ने अवस्था बनाइन्छ । रेडइन्डियन, एबोरिजन, अफ्रिकन, ल्याटिन अमेरिकनका इसाईलाई हेरेपछि यो कुरा बुझिन्छ । पछिल्लो परिवर्तन फिलोपिनोलाई लिन सकिन्छ । यहाँ धर्मान्तरण गरिसकेपछि चटक्क छाडिएकाहरू गरीब भन्दा गरीब बनेर जीवन बिताइरहेका छन् । (नेपालमा इसाईको चलखेल पेज नं. ७६ डा. शास्त्रदत्त पन्त )

स्पेन र फ्रान्समा पानी नचल्ने अछुत जातीका रूपमा काग्रोड जातीलाई लिइएको इतिहास पाइन्छ । यस जातीले विभेदबाट बाहिर निस्कन आफ्नो जात छोडी उच्च जातीको जात लेखेका थिए । यस जातीलाई चर्चभित्र पस्न अनुमति थिएन । उनीहरूले निर्माण गरेका छुट्टै चर्चमा समेत टाउको निहुर्‍याएर बस्नु पर्दथ्यो । एक पटक यस जातीको बालक उच्च जातीको चर्चमा प्रवेश गरि भित्तामा छोइदिएको कारण उनको हात काटेर फालिदिएका थिए ।

मिकाएल डेन्निनो भन्छन् "नेहरू कारण औपनिवेशिक भारतमा तिनीहरू सलबलाउन सकेका हुन् । उनले बेलायतीले भन्दा नकारात्मक भूमिका खेलेका हुन् ।"

नेपालको सम्बन्धमा खीष्टीयनहरूबीचका उपसम्प्रदाय तथा जातहरूले धर्मान्तरण गरेको पाइन्छ । उनीहरू आफ्नो जात (उपसम्प्रदाय) ठीक र अरु मण्डली (खीष्टीयन सम्प्रदाय) झुट भन्छन् । यहोवाको साक्षी आफ्नो

जातमात्र उच्च र यरूशेलम प्रवेश गर्ने बताउँछन् भने परमेश्वरको मण्डली १ लाख ४४ हजार स्वर्ग जाने समूह आफ्नो जातको हो भनी गवाही दिन्छ । अनुग्रह, विश्वास रसियन अर्थोपडस आदि २२,००० जातजातिहरू धर्म परिवर्तनको यो रोग अत्यन्तै बढ्दो छ । यसबाट खीष्टीयनहरू नै असन्तुष्टि देखिन्छन् । वास्तवमा भन्नुपर्दा धर्म परिवर्तन अन्य धर्महरूको तुलनामा भन्दा खीष्टीयनहरूको लागि घातक मानिन्छ ।

यी माथिको लेखोटहरू हेर्दा मानिस भएर जन्मेपछि आफूजस्तै अर्को मानिस दास कसरी हुन सक्छ ? एउटा मानिस परमेश्वरको सन्तान अनि उस्तै प्रकृतिको अर्को मानिस कसरी सैतान हुन सक्छ ? भन्ने प्रश्नहरू रिगंटा लाग्ने गरी मनमा उठिरहन्छन् । यो अवस्थाको कारण खोजकार परमेश्वरको अदालतसमक्ष खीष्टीयनभित्रको जातीय भेदभावलाई बोकेर आइपुगेको देखिन्छ ।

# बाइबलले नै परमेश्वरको उपहास गरेको छ

सर्वज्ञ परमेश्वरलाई बाइबलले अज्ञानी र मुर्ख सावित गरिदिएको छ । परमेश्वरलाई उज्यालो देख्नुपूर्व नै उज्यालोको बारेमा ज्ञान थियो । बाइबलमा परमेश्वरले उज्यालो हेरिसकेपछि मात्र असल भएको भन्दै परमेश्वरको उपहार गरेको हुँदा यस पङ्क्ति सच्याई पाऊँ भनी परमेश्वरको अदालतमा राखिएको छ । पानी कहाँ थियो स्पष्ट छैन । पहिले पानी बनाइएको भए पानी कहाँ रहन्थ्यो ? पहिले आकाश बनाइएको हो भने बाइबलमा आकाश पहिले बनेको वचन थप्न जरूरत छ ।

"...... दोस्रो दिन......" सूर्यको सृष्टि नै नभई साँझ-बिहान, दिन-रातको बयान गरिएको छ । यस्तो असम्भव र बकवास विषयलाई बाइबलमा राख्दा परमेश्वको महिमा घटाएको छ । परमप्रभूले धुर्त साप वा शैतान नबनाएको पूर्वजन्म वा कर्मको आधारमा लुसीफर, आदम, हब्बा र अन्य मानिसले प्रतिफल भोगिएको भए तापनि बाइबालमा यी पद हटाई आदम र हब्बाको कारण सबै मानिसले पापी बनेको वचत राख्नु चाहिँ अशोभनीय देखिन्छ, त्यसो होइन भने परमेश्वर अल्पज्ञानी भएको (बाइबलको उत्पत्ति ३:१-१८) बताउँछ ।
६:१-७ सम्म हेर्दा पनि आफ्नो सृष्टिदेखि आफैँलाई अफसोच लाग्यो भन्नु परमेश्वर सर्वज्ञ नभएको थप पुष्टि गर्दछ ।

परमेश्वरले भन्नुभयो "पानीका बीचमा एक अन्तर होस् र त्यसले पानीलाई दुई भाग गरोस् । परमेश्वरले अन्तर बनाएर अन्तरमुनिका पानी र अन्तरमाथिका पानीलाई अलग-अलग गर्नुभयो । तब त्यस्तै भइहाल्यो । परमेश्वरले यस अन्तरलाई आकाश तथा स्वर्ग भन्नुभयो । साँझबिहान-दोस्रो दिन भयो । (पवित्र बाइबल, उत्पत्ति १: ६-८)
परमप्रभू परमेश्वरले बनाउनुभएका वनपशुहरूमध्ये साँप धूर्त थियो । त्यसले स्त्रीलाई भन्यो,"के परमेश्वरले तिमीहरूलाई बगैँचाको कुन रूखको फल नखानू भनी भन्नुभएको छ ?"।

स्त्रीले सॉंपलाई भनिन् "बगैंचाका रूखहरूका फल हामी खान सक्छौं ।"
बगैंचाको बीचमा भएको रूखको फलको विषयमा परमेश्वरले भन्नुभएको छ, "त्योचाहिं नखानू र नछुनू, नत्र तिमीहरू मर्छौ ।"
सॉंपले स्त्रीलाई भन्यो, "तिमीहरू कदापि मर्दैनौं । किनकि परमेश्वर जान्नुहुन्छ कि जुन दिन तिमीहरू त्यो खान्छौ, त्यही दिन तिमीहरूका आँखा खुल्नेछन् र असल खराबको ज्ञान पाएर तिमीहरू पनि परमेश्वरजस्तै हुनेछौ"।

अनि जब स्त्रीले त्यस रूखको फल खानलाई मिठो र हेर्नमा रहरलाग्दो, कसैलाई बुद्धिमान्, बन्नलाई सो रूखको चाह गर्नुपर्न रहेछ भनी थाहा पाइन्, तब तिनले त्यस रूखको फल टिपेर खाइन् । आफ्ना पतिलाई दिइन् र तिनले पनि खाए । अनि दुवैका आँखा खुले र 'नाङ्गै पो रहेछौं' भनी तिनीहरूले थापा पाए । अनि निभाराका पातहरू गाँसेर आफ्ना निम्ति तिनीहरूले वस्त्र बनाए ।

परमेश्वरले सॉंपलाई भन्नुभयो, "तैंले यसो गरेको हुनाले तँ सबै पाल्तु पशुहरू र सबै वनपशुहरूभन्दा ज्यादा श्रापित हुनेछस् । पेटको बलले तँ हिड्नेछस् । तेरो सन्तान र स्त्रीको सन्तानको बीचमा म दुश्मनी हालिदिनेछु । त्यसले तेरो शिर कुच्याउनेछ र तैंले त्यसको कुर्कुच्चो डस्नेछस्"।

स्त्रीलाई उहाँले भन्नुभयो, "तेरो दुःख र सुत्केरी वेदना म ज्यादै गरी बढाइदिन्छु । दुःखसँग तैंले बालक जन्माउनेछेस् ता पनि तेरो इच्छा पतितर्फ हुनेछ र त्यसले तँलाई अधीनमा राख्नेछ ।"

त्यसपछि आदमलाई उहाँले भन्नुभयो "तैंले तेरी स्वास्नीको कुरा सुनेर मैले नखानू भनेको रूखको फल खाएको हुनाले भूमि तेरो कारण श्रापित भएको छ । तेरो जीवनभरि दुःखसँग त्यसको उब्जनी तैंले खानेछस् । त्यसले तेरा निम्ति काँडा र सिउँडीहरू उमार्नेछ । तैंले खेतको सागपात खानेछस्"। (पवित्र बाइबल, उत्पत्ति ३: १-७, १४-१८) ।
परमप्रभू परमेश्वरले भन्नुभयो, "मानिस हामीजस्तै असल र खराबको ज्ञान जान्ने भएको छ । अब त्यसले जीवनको रूखको फल टिपेर खाला र सधैंभरि जीवित रहला"।

यसै कारण उहाँले मानिसलाई धपाइदिनुभयो । जीवनको रूखतर्फको बाटो पहरा गर्नलाई उहाँले अदनको बगैंचाको पूर्वपट्टि करूबहरू, स्वर्गदूतहरू र चारैतिर घुमिरहने ज्वालामय तरवार राखिदिनुभयो । (पवित्र बाइबल, उत्पत्ति ३:२३/२४) ।

जब मानिसहरू पृथ्वीमा बढ्दै गए, तिनीहरूका छोरीहरू जन्मे तब परमेश्वरका छोराहरूले मानिसका छोरीहरूलाई सुन्दरी देखे । आफ्ना-आफ्ना रुचिका पत्नीहरू ल्याए । त्यसबेला पृथ्वीमा नपीलहरू बडेबडे कदका मानिसहरू वा दैत्य- दानवहरू थिए । त्यसपछि पनि परमेश्वरका छोराहरू मानिसहरूका छोरीहरूकोमा जान लागे । तिनीहरू (परमेश्वरका छोरा र मानिसका छोरीबाट जन्मेका बालक) दुष्टता बढी भएको र तिनीहरूको हृदयको विचारको जुनसुकै भावना निरन्तर खराबैमात्र भएको परमप्रभूले देख्नुभयो ।

पृथ्वीमा मानिसलाई बनाउनु भएकोमा परमप्रभूले अफसोस गर्नुभयो । उहाँ मनमा साह्रै दुःखित हुनुभयो । तब परमप्रभूले भन्नुभयो, "मैले सृष्टि गरेको मानिसलाई पृथ्वीबाट म मेटिदिनेछु-के मानिस, के घस्रने जन्तु, के आकाशका पक्षी, सबैलाई किनभने ती बनाएकामा मलाई अफसोस लाग्यो ।"(पवित्र बाइबल, उत्पत्ति ६: १-२, ४-७) ।

यहोवा सर्वव्यापक, सर्वज्ञ ईश्वर हो कि एक साधारण मनुष्य ? के एक ठाउँमा बसी बसी सदोम र गमोराको कुरा जान्न सक्दैन? त्यो ठाउँको कुरा जान्न त्यहीँ जानै पर्छ उसलाई ? एकै ठाउँमा बसेर थाहा पाउन सक्दैन ? यो बाइबलको ईश्वरभन्दा त आजकालको वैज्ञानिक शक्तिशाली रहेछन् किनकि यिनीहरूले एक ठाउँमा बसी जताको पनि कुरा थाहा पाउने यन्त्रको आविष्कार गरिसके । तसर्थ बाइबलको ईश्वर एक साधारण मान्छे हो भन्नुमा कुनै सन्देह छैन ।

व्यवस्था (८।२) पनि यहोवा सर्वज्ञ होइन भन्ने कुरा बुझिन्छ । त्यहाँ भनिएको छ "उहाँले तिमीहरूको हृदयको सब कुरा जान्न चाहनुहुन्यो, तिमीहरू उहाँको आज्ञा पालना गर्छौ कि गर्दैनौ भनेर जान्न चाहनुहुन्यो ।" (विज्ञानको नजरमा वेद र बाइबल-२०७३, सुरेन्द्र गौतम/नवराज पनेरु)

ईश्वरको मनसाय आफूजस्तै मानिस बनाउनेछ होला, भेदभाव र दुर्व्यवहारको दिनहरू दोहोऱ्याउने कदापि होइन होला । अहिले मानवजातिले देखिरहेका बाइबलभित्रका अधिकांश घटनाले परमेश्वरको उपहासमात्र गरेको छैन, वर्तमान र आगत दुवैलाई निरन्तर सताइरहेको छ भनी परमेश्वरको अदालतमा गवाही पेश गरेको छु ।

# बाइबलका ईश्वरको मानव स्वभाव

पूर्ण परमेश्वरचाहिँ यहोवा होइन भन्न तलका प्रसङ्गहरूले प्रमाणित गरिदिन्छ । पवित्र बाइबल (उत्पत्ति ५:२२,१२:११-१३, १८:१-८, ६:१-७) लगायतका थुप्रै अनुच्छेदको गहिराईमा पुगेर हेर्दा बाइबलले यहोवालाई छली मानिसको रूपमा चित्रण गरेको पाइन्छ । यसरी यहोवालाई पूर्ण परमेश्वर होइन भनी सिद्ध गर्न बाइबलका वचन सोचनीय छन् ।

मतुसेलह जन्मेपछि हनोक तीनसय वर्षसम्म परमेश्वरको साथासाथ हिँड्दैरहे । (पवित्र बाइबल, उत्पत्ति १: २२) ।

दिउँसोको गर्मीमा उम्रेको फलाँटका रूखहरूनिरको आफ्नो पालको ढोकामा बसिरहँदा परमप्रभूले अब्राहमलाई दर्शन दिनुभयो । तिनले आफ्ना आँखा उठाएर हेरे । आफ्नोसामु तीनजना मानिसहरू उभिरहेका देखे । उहाँहरूलाई देखेर तिनी पादको ढोकाबाट भेट गर्नलाई कुदेर गए । भुईसम्म निहुँरेर दण्डवत् गरी भने- "हे मेरा स्वामी ! ममाथि तपाईहरूको निगाह हुन्छ भने कृपागरी आफ्नो दासकहाँबाट त्यसै नजानुहोस् । म केही पानी ल्याउनेछु र तपाईहरू आफ्ना पाउ धुनुहोस् तब यही रूखमुनि आराम गर्नुहोस् । म गएर केही रोटी ल्याउनेछु र खाएर तपाईहरू थकाई मार्नुहोस् । थकाई मारिसकेपछि जानुहोस्, किनभने यसैको निम्ति तपाईहरू दासकहाँ आउनुभएको होला ।"

उहाँहरूले भन्नुभयो, "जाऊ, तिमीले भनेअनुसार गर ।"

तब अब्राहम झट्टै पालमा साराकहाँ गएर भने, "तुरून्तै तीन माना मसिनो पिठो तयार गरी मुछेर रोटी बनाऊ ।"

अब्राहम आफैँचाहिँ बथानतिर कुदेर गए र एउटा कलिलो असल बाछो छानेर आफ्नो नोकरलाई दिए अनि त्यसले तुरून्तै त्यो पकायो । तब तिनले दही, दूध र त्यो पकाएको बाछाको मासु लगेर उहाँहरूको सामु टक्र्याए । उहाँहरूले खाइनसकुञ्जेल तिनी उहाँहरूकै नजिक उभिरहे । (पवित्र बाइबल, उत्पत्ति १: १-८) ।

याकुबचाहिँ एक्लै रहे । एकजना व्यक्ति उज्यालो नहोउञ्जेल तीसँग कुस्ती लड्नुभयो । उहाँले याकुबलाई जित्न नसकेको देखेर याकुबको जाङ्को गेडी फुस्क्यो, तब उहाँले भन्नुभयो, "उज्यालो हुन लाग्यो । मलाई जान देऊ ।"

याकुबले भने, "मलाई आशीर्वाद नदिउञ्जेल म तपाईंलाई जान दिन्नँ"।

उहाँले तिनलाई भन्नुभयो, "तिम्रो नाम के हो ?"

तिनले भने "याकूब"

होइन,

तर इस्राएल परमेश्वरसँग लडन्त गर्यौ, अनि विजयी भयौँ ।

तब याकुबले उहाँलाई सोधे, "बिन्ती छ, मलाई भन्नहोस्, तपाईंको नाम के हो ?"

तर उहाँले भन्नुभयो, "मेरो नाम किन सोध्यौ ?"

अनि उहाँले तिनलाई आशीर्वाद दिनुभयो । यसैकारण याकुबले त्यस ठाउँको नाम पनि एलपरमेश्वरको दर्शन राखे, किनकि 'परमेश्वरका सम्मुख परे तापनि मेरो ज्यान बाँच्यो' भनी तिनले भने ।

जाङ्ले गर्दा तिनी खोच्याई सोच्याई हिँडेर पनीएल नाघिसक्दा सूर्योदय भयो । उहाँले तिनको फिलाको खोपिल्टामा जाङ्को नसो छोइदिनु भएको हुनाले आजसम्म ईस्राएलीहरूफिलाको जाङ्को नसो खाँदैनन् । (पवित्र बाइबल, उत्पत्ति १: ११-१३) ।

पवित्र मानिने बाइबलका यी वचनलाई गहिरिएर हेर्ने हो भने बाइबलको ईश्वर कुनै आलौकिक शक्ति नभई सामान्य मानिस रहेको तथ्य सार्वजानिक हुन्छ ।

# दाउद र अब्राहमको कर्म नै मिथ्या

पवित्र बाइबल (उत्पत्ति १२/१३ अध्याय)लाई गहिरिएर अध्ययन गर्ने हो भने अब्राहम फिरन्ते र स्वार्थी मानिस थिए भन्ने बुझिन्छ । उनी जतिबेला बेथेलियममा बसेका थिए, त्यतिबेला त्यहाँ भोकमरी लाग्यो अनि उनी इजिप्ट छिरे । आफ्नो बहिनीसँग विवाह गरेर इजिप्टमा पुगेपछि आफ्नो श्रीमती सारालाई बहिनी भन्न लगाए । इजिप्टका मानिसहरूले सारालाई राजाकहाँ पुऱ्याइदिए । राम्री सुन्दरी सारालाई राजाले लिएर जान्छन् बदलामा सुन, चाँदी सम्पति गाईवस्तु दासदासीसमेत दिन्छन् । तब उनी धनी बन्न पुग्दछन् । त्यसपछि उनले धनी बन्ने उपाय थाहा पाउँछन् । फेरि अब्राहम गरार भन्ने देशमा सारालाई लिएर जान्छन् । त्यहाँ पनि मेरी बहिनी हो भनेर राजासित पठाउँछन् र पैसा, सुन, चाँदी धनसम्पत्ति संकलन गर्दछन् । यसरी थुप्रै देशहरूमा अब्राहम पुगेको इतिहास पाईन्छ ।

तिनी मिश्रमा पस्नै लाग्दा तिनले आफ्नी स्वास्नी साराईलाई भने "हेर, तिमी हेर्नमा सुन्दरी छौ भन्ने मलाई थाहा छ । मिश्रीहरूले तिमीलाई देख्दा 'यो ता त्यसकी स्वास्नी रहिछ' भन्नेछन् । मलाई मारेर तिमीलाई चाहिँ जीवित राख्नेछन् ।
'म तिनकी बहिनी हूँ भनी तिमीले भनिदेऊ र तिम्रा कारण मलाई भलो हुनेछ । तिम्रै कारण मेरो ज्यान जोगिनेछ"। (पवित्र बाइबल, उत्पत्ति १: ११-१३) ।

उत्पत्ति, २५ ।१ अब्राह्मले फेरि विवाह गरे अनि तिनको नयाँ लोको नाम कतुरा थिथो ।"

१ इतिहास, १ ।३२ "कतुरा अब्राहमको उपपत्नी (concubine) जसको अर्थ श्रीमती होइन अपितु प्रेमिका हुन्छ, जो विहे नगरीकन नै प्रेमीसँग बस्ने गर्दछिन् ।"

२५।१,२ अब्राहमले फेरि विवाह गरे अनि तिनकी पत्नीको कतुरा थियो । कतुराले जिम्रान, योक्षान, मदान, मिद्यान, यी वाचक र शुहालाई जन्माइन् ।

११।२,४ "साँझमा तिनी (दाउद-इसाईहरूको परमेश्वरको दूत वा पैगम्बर) ओछ्यानबाट उठे र राजभवनको कौसीमा टहल्न थाले । त्यही समय दाउदले कौसीबाट एउटी स्त्रीलाई नुहाउँदै गरेको देखे । तिनी साह्रै सुन्दरी थिइन् । दाउदले तिनको बिषयमा जान्नको निम्ति आफ्ना अधिकारीहरू पठाए । एकजना अधिकारीले बुझेर खबर दिए, त्यो स्त्री एलिआमको छोरी र हित्तिका उरियाहकी पत्नी बेतशेबा हो । दाउदले उसका दूतहरूलाई त्यो स्त्रीलाई बोलाउन पठाए । जब ती स्त्री आइन् दाउदले तिनीसँग सहवास गरे ।" (पवित्र बाइबल, २ शमुयल ११:२४) ।

दाउदका सन्तानका योग्यताबारे २ शामुएल १३ अनुसार यस्तो देखिन्छ, "दाउदको छोरो अमनोनले आफ्नो बहिनीको रूप र यौवनको मोहमा फसेर विरामी भएको अभिनय गरी बोलाउन पठाउँछन् । आफ्नी बहिनीसँग जबरजस्ती यौनशोषण गरी नोकर लगाएर घरबाट निकाला गरिदिन्छन् ।
त्यस्तै २ शामुएल १६:२१ अब्शोलमले आफ्नो पिता दाउदका सबै पत्नीहरूसित सहवास गर्दछन् । यी प्रसंग हेर्दा दाउद परमेश्वरको अगमवक्ता भएतापनि असल र आदर्श बाबु बन्न सकेको देखिँदैन ।

माथिको प्रसंगलाई गहिरिएर अध्ययन, अनुसन्धान गर्दा बाइबलद्वारा सम्मान गरिएको अगमवक्ता भनिने दाउद र अब्राहमको कर्म गलत भएको देखिन्छ । यस्ता गलत कर्म गर्नेहरूलाई खोजकारद्वारा परमेश्वरको अदालतमा पेश गरिएको छ ।

# बाइबलका परमेश्वर जादुगर

यहोबा (येशू) ले आत्मिक आँखा खोलिदिने, आत्मिक स्वस्थता प्रदान गर्ने, बाइबलका दृष्टान्तलाई तोडमोड गरेको पाइन्छ । रोग निको र चंगाइको नाममा बाहिरने ठूला-ठूला कथा र जादुगरी अभ्यासले येशूको परिचय दिएको छ ।

तब परमप्रभूले तिनलाई भन्नुभयो, "तेरो हातमा के छ ?"
तिनले भने "लट्ठी"।
उहाँले भन्नुभयो, "त्यो भुइँमा फाल् ।"

तिनले त्यो भुइँमा फालिदिए । त्यो एउटा सर्प भयो । मोसा त्यसदेखि डराएर भागे । तब परमेश्वरलाई मोसाले भन्नुभयो, "तेरो हात लम्काएर त्यसको पुच्छरमा समात् ।
तिनले हात लम्काएर च्याप्पै समाते । त्यो तिनको हातमा लट्ठी नै भइहाल्यो । तब परमप्रभूले तिनलाई अझै यसो भन्नुभयो, "तेरो हात खोकिलामा हाल् ।"

तिनले खोकिलामा हाले । जब खोकिलाबाट फेरि निकाले, तब त्यो आफ्नो शरीरको अरु मासुजस्तै भइहाल्यो । तँ नील नदीको पानी लिएर सुक्खा जमिनमा खन्याइदे । तैँले नील नदीबाट लिएको त्यो पानी सुक्खा जमिनमा रगत हुनेछ । अर्को प्रसङ्ग पनि पेश गर्न चाहन्छु ।
येशूले तिनीहरूलाई भन्नुभयो, "तिमीहरूसित कतिवटा रोटी छन् ?"
तिनीहरूले भने, "सातवटा र अलिकता ससाना माछाहरू ।"

उहाँले भिडलाई भुईमा बस्ने आज्ञा गर्नुभयो । उहाँले सात रोटी र माछाहरू लिएर धन्यवाद चढाएपछि भाँचेर चेलाहरूलाई दिनुभयो । चेलाहरूले भीडहरूलाई दिए । अनि तिनीहरू सबैले खाएर तृप्त भए । उब्रेका टुक्राहरू तिनीहरूले सात टोकरी भरी उठाए । खानेहरू, स्त्रीहरू र

केटाकेटीहरूबाहेक, चार हजार पुरुषहरू थिए । (पवित्र बाइबल, मत्ती १५: १-३६) ।

एउटा कोरीले उहाँकहाँ आएर यसो भनी प्रणाम गर्‍यो, "हे प्रभू १ तपाईंको इच्छा भए मलाई शुद्ध गर्न सक्नुहुन्छ"।
उहाँले यसो भन्दै हात पसारेर त्यसलाई छुनुभयो, "म इच्छा गर्छु, तिमी शुद्ध भइजाऊ"। तुरुन्तै त्यसको कोर शुद्ध भइगयो । (पवित्र बाइबल, मत्ती ८:२-३) ।

तब भूतहरूले ग्रस्त पारेका दुईजनाले चिहानबाट निस्केर उहाँलाई भेट गरे । जो यति डरलाग्दा थिए कि कोही पनि त्यहाँबाट ओहोर-दोहोर गर्न सक्दैनथे । तिनीहरू यसो भन्दै चिच्याए, "हे परमेश्वर पुत्र ! हाम्रो तिमीसँग के सरोकार ? के तपाईं बेला नपुग्दै हामीलाई सताउन यहाँ आउनुभएको हो ?

भूतहरूले उहाँलाई यसो भनेर बिन्ति गरे, "यदि तपाईंले हामीलाई निकाल्नुहुन्छ भने, हामीलाई सँगुरको बगालमा पठाइदिनुहोस् ।"
उहाँले तिनीहरूलाई भन्नुभयो, "जाओ"
तब तिनीहरू निस्केर सँगुरहरूमा पसे । अब हेर, सँगुरको जम्मै बगाल वेगसित भिरतिरबाट समुद्रमा दुगुरे र पानीमा नष्ट भए । (पवित्र बाइबल, मत्ती ८:२८-३२) ।

मानिसहरूले खाटमा पल्टिरहेको एक जना पक्षघात भएको बिरामीलाई उहाँकहाँ ल्याए । येशूले तिनीहरूको विश्वास देखेर पक्षघातीलाई भन्नुभयो, "हे पुत्र, साहस गर । तिम्रा पाप तिमीलाई क्षमा भयो"।
"म धर्मीलाई होइन तर पापीहरूलाई बोलाउन आएँ"। (पवित्र बाइबल, मत्ती ९: २,१३) ।

उहाँले आफ्ना बाह्र चेलाहरूलाई बोलाएर अशुद्ध आत्माहरू निकाल्ने र हरेक किसिमका रोग र बिमारहरू निको पार्ने अधिकार तिनीहरूलाई दिनुभयो । (पवित्र बाइबल, मत्ती १०:१,२०,३४,३५,३६) ।

यी सबै सोझा मानिसलाई फँसाउने कुरा हुन् । इसाईहरू यी विद्या, सृष्टिक्रम विरुद्ध कुरालाई सत्य मान्दछन् भने पुराण र महाभारत आदिमा लेखिएका शुक्राचार्य, धन्वन्तरी, कश्यप आदिका कथालाई किन

मिथ्या बताउँछन् ? जस्तै शुक्राचार्यले दैत्यहरूको मरेको सेनालाई ब्यूँताइदिए । बृहस्पतिका पुत्र कचलाई टुक्रा-टुक्रा पारेर जनावर र माछा आदिलाई खुवाए, फेरी पनि शुक्राचार्यले ब्यूँताइदिए । पछि कचलाई मारेर शुक्राचार्यलाई खुवाए,फेरि पनि कचलाई पेटमै ब्यूँताएर बाहिर निकाले । आफू मरेर उनलाई चाहिँ कचले ब्यूँताए । तक्षकबाट मनुष्यसहित वृक्ष भस्म भएपछि कश्यप ऋषिले वृक्ष र मनुष्यलाई फेरि जीवित तुल्याए । धन्वन्तरीले लाखौं मुर्दालाई ब्यूँताए । लाखौं कोरी आदि रोगीलाई स्वस्थ पारे लाखौं अन्धा र बहिरालाई आँखा र कान दिए, आदि कुरा झुटा हुन् भने ईसाको कुरा झुटो किन होइन ? अनि अरूका कुरालाई झुटा र आफ्ना कुरालाई चाहिँ साँचो बताउने व्यक्ति हठी किन होइन ? यसकारण इसाईहरूका कुरा केवल हठका र अल्लारे केटाहरूका जस्तै हुन् । (सत्यार्थ प्रकाशन २०६५, दयानन्द सरस्वती) ।

अन्तमा, बाइबलमा भएका चमत्कार र परमेश्वरले गरेको कार्यहरू हेर्दा परमेश्वरलाई वर्तमान समयको जादुगरको स्वभाव भेटियो । आफैँले तयार गरको प्राकृतिक नियम र सत्यताबाट बाहिरिएको यहोवाले यस्ता अप्रमाणित कार्यमा जोड दिनुले बाइबलीय सत्यतामाथि नै शंका उब्जिएको हुँदा खोजकारले बाइबलमा भएका यी वचनलाई परमेश्वरको अदालतमा पेश गरेको छ ।

# दन्त्यकथाजस्तै बाइबलका वचन

बाइबलमा भनिएको स्वर्ग, दूत, थुमाका कथाहरू दन्त्यहरूको कथाभन्दा पनि बढी हास्यास्पद अविश्वसनीय छ । यहोबाको क्रोधले कालकुण्ड भरिपूर्ण छन् । पानीजस्तो अति सय कोष रगत बग्दा पनि रगत नजम्नु, व्यक्ति बिना वचत हुन सक्दैन, यदि ईश्वरसँग वचन थियो भने यो भन्नु व्यर्थ छ । अर्को कुरा सृष्टिको कारण नभई वचन असम्भव छ, वचन, ईश्वर, आदम, जीवन सबै काल्पनिक छ । खगोल र भूगोलका अल्पज्ञानको कारण कथाहरू तयार गरिएको छ ।

ती संकटका दिनको तुरून्त पछि सूर्य अँध्यारो हुनेछ र जूनले आफ्नो चमक दिनेछैन र ताराहरू आकाशबाट खस्नेछन्, तथा स्वर्गका शक्तिहरू डगमगाउनेछन् । (पवित्र बाइबल, मत्ती २४: २९) ।

आदिमा वचन थियो, वचन परमेश्वरसँग थियो, वचन परमेश्वर नै थियो । उहाँ आदिमा परमेश्वरसँग हुनुन्थ्यो । सबैथोक उहाँबाट हुनआए, हुन् आएको कुनै एक थोक पनि उहाँबिना हुन आएन । उहाँमा जीवन थियो र त्यो जीवन मानिसहरूको ज्योति थियो । (पवित्र बाइबल, युहन्ना १: १-४) ।

अनि अब थुमाले ती सातमध्ये एउटा छाप खोल्नुभयो, तब मैले हेरैं र ती चारमध्येका एउटा जीवित जीवातले गर्जनको आवाज जस्तै, 'आउ र हेर' भनेको मैले सुनैं । सेतो घोडा र त्यसमाथि बस्नेले एउटा धनु लिएको मैले देखैं । तिनलाई एउटा मुकुट पनि दिइयो, औ तिनी विजय गर्दै र विजय गर्नलाई निस्के । जब उहाँले दोस्रो छाप खोल्नुभयो । अर्को एउटा उज्वल रातो घोडा निस्केर आयो र एउटाले अर्कोलाई काटमार गराई पृथ्वीबाट शान्तिहरण गर्ने अख्तियार त्यस घोडामाथि चढ्नेलाई दिइयो । अब उहाँले तेस्रो छाप खोल्नुभयो र एउटा कालो घोडा देखैं । जब

उहाले चौथो छाप खोल्नुभयो । पहेँलो घोडा देखेँ र त्यसमाथि चढ्नेको नामचाहिँ 'मृत्यु' इत्यादि । (पवित्र बाइबल, प्रकाश, ६: १-५,७,८)

अनि मैले बादल ओढेको अर्को एउटा बलवान् दूतलाई स्वर्गबाट ओर्लेको देखेँ । तिनको शिरमा इन्द्रेणी थियो । तिनको मुख सूर्यजस्तो र खुट्टाहरू आगाका खाम्बाहरूजस्ता थिए । तिनले आफ्नो दाहिने खुट्टा समुद्रमा र देब्रे खुट्टा पृथ्वीमा राखे । (पवित्र बाइबल, प्रकाश १०:१,२) । ... र त्यसलाई परमेश्वरको क्रोधको ठूलो कोलमा फ्याँकिदिए । कोल सहरबाहिर कुल्चियो र कोलबाट रगत घोडाहरूका लगामसम्मै र सय कोससम्मै पुग्नेगरी बगेर निस्क्यो । (प्रकाश, १४: १९, २०) ।

बाइबलको यो प्रस्तुतीले के देखाउँछ भने, दन्त्यकथाभन्दा यहोवाका बढेचढेका यी काल्पनीक कथाहरूको धरातल झुट देखाईदिन्छ । यहाँ उल्लेख गरिएका वचनहरू दन्त्यकथाहरू पनि बढचढ छन् । खीष्टीयन ईश्वर क्रोधका काल (कुण्ड) भरिपूर्ण छन् भने के परमेश्वरको क्रोध पानी हो र ? परमेश्वर कुनै द्रवित पदार्थ हो, जसबाट कुण्ड भरिएका छन् ? अनि सय कोससम्म रगत बग्नु असम्भव छ ? किनकि रगत हावा लाग्दा तुरुन्तै जन्मन्छ, अनि कसरी बग्नसक्छ ? यस कारण यस्ता कुरा मिथ्या हुन्छन् । यी सबै बाइबलीय वचनहरू हेर्दा विज्ञानको सृष्टि सम्बन्धी अनुसन्धान गरिएका खोज विपरित बाइबलीय प्रसङ्ग भेटिन्छन् ।

# बाइबलमाथि उब्जिएका प्रश्न

पवित्रता, शुद्धता, पूर्णता, प्रेम, शान्ति, अहिंसाको पर्यायवाची हो तर बाइबलको उत्पत्ति (१९:२४-२५, ३८:७-१०, १२:२८-३०, १७-१८, २१:१५ मह:१८-१९) लाई निर्दोष मानिस, अवोध बालबालिका र असहाय महिलाहरूलाई हत्या गरेको पाइन्छ । मानिसको हत्याले मात्र उसको मन शान्त भई निर्दोष अज्ञानी पशुको समेत बध गराएको छ ।

यतिमात्र होइन, आफ्नो भोक मेट्न नपाउँदा बनस्पतीलाई समेत क्रूर स्वभावको शिकार बनाएको बाइबलमा वर्णन गरिएको छ । यी सबै वचनको गहिराईमा पुगेर हेर्दा कि त यहोबा बाइबलले भने जस्तो शैतान हो, कि त बाइबलका वचन मिथ्या हो भन्ने पुष्टि हुन्छ । पुराण र भाटहरूमा भनिएका भगवान्हरूको शैतानी व्यवहारमा यहोबाको स्वाभावसँग पूर्णतः मेल खाएको देखिन्छ । त्यसकारण उत्तम पुरुष परमेश्वर परब्रह्माको विषयमा बाइबलका वचनहरू बाइबलभित्र समेट्नुपर्ने देखिन्छ ।

तब परमप्रभूले आकाशबाट सदोम र गमोरामाथि आगो र गन्धक बर्षाउनुभयो । उहाँले ती सहरहरू र जम्मै बैंसी र सहरहरूका सबै बासिन्दाहरू र जमिनमा उम्रेका सबैथोक सर्वनाथ पारिदिनुभयो । (पवित्र बाइबल, उत्पत्ति १९: २४,२५)

तर यहुदाको जेठो छोरो एर परमप्रभूको दृष्टिमा दुष्ट थियो । परमप्रभूले त्यसको प्राण लिनुभयो । तब यहुदाले ओनानलाई भने, "तेरी भाउजूकहाँ जा र देवरले गर्नुपर्ने कर्तव्य गर र तेरा दाजूका निम्ति सन्तान उत्पन्न गर । तर सन्तान आफ्नो नहुने देखेर ओनानले भाउजूकहाँ जाँदा वीर्यचाहिँ भुईमा पतन गर्थ्यो । त्यसले गरेको काम परमप्रभूको दृष्टिमा खराब ठहरियो । उहाँले त्यसको पनि प्राण दिनुभयो"। (पवित्र बाइबल, उप्पत्ति ३८:७-१०) ।

मध्यरातमा सिंहासनमा बस्ने फेरि उहाँको जेठा छोरादेखि लिएर कैदखानामा हुने कैदीको जेठो छोरो र सबै गाईवस्तुहरूका पहिले जन्मेका समेतलाई गरी मिश्रमा सबै पहिले जन्मेकालाई परमप्रभूले मार्नुभयो । तब फिरउन, तिनका सबै भारदारहरू र सारा मिश्रीहरू राति नै उठे । मिश्रमा ठूलो रूवाबासी भयो, किनकि त्यहाँ एक जना पनि नमरेको कुनै घर थिएन । (पवित्र बाइबल, उत्पत्ति १२: २८,३०) ।

किनकि म परमप्रभू तेरा परमेश्वर डाह गर्ने परमेश्वर हूँ, पितापुर्खाले गरेको अधर्मको दण्ड दिन राम्रो ठान्नु आखिर कुन घरको न्याय हो ? के असल पिताका खराब र खराबका असल सन्तान हुँदैनन् ? यसो हो भने चौंथो पुस्तासम्म दण्ड कसरी दिन सक्ला ? अनि पाँचौं पुस्तापछि दुष्ट भएमा उसलाई दण्ड दिन सक्नेछैन ? कसैलाई अपराधविना नै दण्ड दिनु अन्यायकारीको कामकुरा हो ।

यसै कारण सबै नाबालिगहरूमध्ये केटाजत्तिलाई र पुरूषको सम्पर्कमा आएका स्त्रीहरूलाई मार । तर सबै कन्याकेटीहरूलाई चाहिँ तिमीहरूले आफ्ना निम्ति जिउँदै राख । (पवित्र बाइबल, उप्पत्ति ३१:१७-१८) । यसकारण परमप्रभूले इस्राएलभरि नै एउटा विपत्ति पठाउनुभयो र इस्राएलका सत्तरी हजार मानिसहरू मरे । (पवित्र बाइबल, उप्पत्ति २१: १५) ।

बिहान सहरतिर फर्कनुहुँदा उहाँ भोकाउनुभयो । बाटोको किनारमा नेभाराको एउटा रूख देखेर त्यहाँ आउनुभयो । त्यसमा पातबाहेक अरु केही पाउनु भएन । तब उहाँले त्यसलाई भन्नुभयो, "अब उप्रान्त तँबाट कहिल्यै पनि फल नफलोस्" त्यो नेभाराको रूख तुरून्तै ओइलायो ।

विचारणीय कुरा के छ भने सारासँग भेटेर गर्भवती हुने यो काम कसरी भयो ? परमेश्वर र साराबाहेक गर्भस्थानको अरु कोही तेस्रो कारण देखिन्छ र ? सारा परमेश्वरको कृपाबाटै गर्भवती भई भन्ने नै विदित हुन्छ । २४ । (दयानन्द सरस्वती, सत्यार्थ प्रकाशन) ।

बाइबलका यी वचनहरू हेर्दा काल्पनिक कथाहरूजस्तो देखिन्छन् । यी वचनहरूलाई पुष्टी गर्ने कुनै ऐतिहासिक आधार भेटिएका छैन । अर्कोतिर कतिपय वचनहरू वर्तमान विज्ञान सम्मत नभएको भेटियो जसले गर्दा बाइबलीय सत्यतामाथि शंका र प्रश्न उब्जिएका छन् ।

# स्वर्गसम्बन्धी बाइबलका भ्रम

बाइबलले धेरै स्वर्गहरू छन् भनेर सिकाउँछ । जुन कुरा २ को. १२:२ मा पाइन्छ । पावलले तीनवटा स्वर्गको बारेमा वर्णन गरेका छन् । एसिफी २:२ अनुसार पहिलो स्वर्ग हामी बसेको वायुमण्डल हो । दोस्रो स्वर्ग यो विशाल ब्रह्माण्ड, तेश्रो स्वर्ग परमेश्वरको सिंहासन रहेको स्वर्ग हो भनी बाइबलमा व्याख्या गरेको छ । पावल, यशैवा, यहुन्नाले स्वर्गको बारेमा व्याख्या गरेका छन् तर ती विज्ञानसम्मत कोरा कल्पना देखिन्छ । (उत्पत्ति १:६-८) मा आकाशलाई पूरै स्वर्ग भनिएको छ ।

(प्रकाश २१:१६) मा स्वर्गको लम्बाई, चौडाई त कल्पना गरेको पाइन्छ । त्यतिमात्र उचाई साढे सात कोश भनेर मिथ्या कल्पना गरिएको छ । अनि स्वर्गभित्र पनि ईश्वर सिंहासनमा र दास, उनको सेवा गरिरहेको कुरा वर्णन गरिएको छ । यसले के सिद्ध गर्छ भने स्वर्गमा पनि बन्धन छ, सानो ठूलोमाथि भेदभाव छ । एउटै सहरमा बसिरहनुपर्छ । वास्तवमा यो कुरा साँचो हो भने स्वर्गमा पनि दुःख छ भन्ने हुन्छ । यी कथन हेर्दा बाइबल लेखकलाई यहोबा र स्वर्गको बारेमा अल्पज्ञान भएको देखिन्छ ।

...... तिनले त्यस टाँगोले (त्यस सहरलाई) नाप्दा साढे सातसय कोसको रहेछ । लम्बाई, चौडाई र उचाई बराबर रहेछ । अनि तिनले त्यसको पर्खाल नापे; मानिस अर्थात् दूतको नापबमोजिम एकसय चौवालीस हातको रहेछ । त्यो पर्खाल स्फटिकको बनेको थियो र सहरचाहिँ कञ्चन ऐनाजस्तै निख्खुर सुनको थियो । पर्खालका जगहरू अनेक किसिमका बहुमूल्य पत्थरहरूले सिंगारिएका थिए । पहिलो जग स्फटिकको, दोस्रो नीरको, तेस्रो लालको, चौथो पन्नाको, पाँचौ गोमेहको, छैटौं सारडियसमणिको,

सातौँ पीतमणिको, आठौँ पिरोजाको, नवौँ पुष्पराजको, दशौँ लहसुनेको, एघारौँ धूमकान्तको, बाह्रौँ मूतिसमणिको थियो । ती बाह्र ढोकाचाहिँ बाह्र मोतीका थिए । प्रत्येक ढोका एक-एक मोतीको थियो । त्यस सहरको सडक छर्लङ्ङै देखिने ऐनाजस्तो निख्खुर सुनको थियो । (पवित्र बाइबल, प्रकाश २१:१६-२१) ।

त्यहाँ फेरि श्रापित कुरा हुनेछैन । परमेश्वरको र थुमाको सिंहासन त्यसभित्र हुनेछ । उहाँका दासहरूले उहाँको सेवा गर्नेछन् । तिनीहरूले उहाँको मुहार देख्नेछन् । उहाँको नाम तिनीहरूका निधारमा हुनेछ । त्यहाँ फेरि रात हुनेछैन । तिनीहरूलाई न त बत्तीको उज्यालोको, न सूर्यको उज्यालोको खाँचो हुनेछ, किनकि परमप्रभू परमेश्वरले नै तिनीहरूलाई उज्यालो दिनुहुनेछ । तिनीहरूले सदासवैदा राज्य गर्नेछन् । (पवित्र बाइबल, प्रकाश २२: ३-५)

स्वर्गसम्बन्धी बाइबलीय ज्ञानबाट सार भूत वा सत्यतथ्य निकाल्ने प्रक्रिया थालनी गर्न सकिँदैन । जब यसभित्रको सार भूतको खोज सुरु हुन्छ, तब बाइबलीय लेखकले गरेका स्वर्गसम्बन्धी भ्रम र कल्पना छरपष्ट हुन्छ । जसको कुनै ऐतिहासिक प्रमाण र वैज्ञानिक आधार भेटिँदैन । यसको गहिराई प्रवेश गर्ने हरेक मानिस नास्तिक भएर बाहिरिन्छ । चैतन्य क्षेत्रमा सफलताको मूलभूत तत्वको प्रकास बाइबलीय स्वर्गभित्र भेटिँदैन ।

# औषधि विज्ञानका विरूद्ध बाइबलीय वचन

बाइबलका वचनले औषधि विज्ञानको विषयमा पूर्णरूपमा जानकारी दिन सकेको छैन । उपदेश ३ः १-३ ले सबै कुराको समय भएको बताएको छ । साथै निको पार्ने एउटा समय हुन्छ भनी औषधि विज्ञानको विषयमा बताउन नसक्नु चाहिँ लज्जाजनक देखिन्छ ।

मर्कुस ७ः ३२-३४, यहुन्ना ८ः २२-२६ रोग निको पार्न येशूले थुकेको बताएको छ । पछिल्लो समयमा विभिन्न चिकित्सक र वैज्ञानिकहरूले आफ्नो प्रयोग एवं अनुसन्धानबाट थुक, खकार, दिसा, पिसाबमा सबैभन्दा बढी रोगका किटाणु तथा सरुवा रोगका जीवाणु हुने पुष्टि गरेका छन् ।

यो तथ्य सत्य बाइबलका लेखकलाई थाहा नहुनुको कारण उनीहरूले येशूले थुक र हकारेको कारण रोग भगाएको झुट बाइबलमा समेटिएको हुनुपर्छ अन्यथा यस्तो कार्यलाई खीष्टीयन औषधि विज्ञानमा सामेल गरिनु लज्जास्पद देखिन्छ ।

बाइबलका प्रसंग २ राजा ५ः १-१४ बालुवा र पानीबाट कुष्टरोगबाट उपचार हुन्छ भनी वास्तविक औषधिको बारेमा ज्ञान दिन नसक्नुले बाइबलका औषधि विज्ञानप्रति शंका उब्जाइदिन्छ ।

"यदि एकजना मानिसलाई हानिकारक चर्मरोग लाग्छ, उसले आफ्नो लुगाहरू च्यात्नुपर्छ अनि शिरको केश छरपष्ट राख्नुपर्छ । अनि उसले आफ्नो माथिका ओठ छोपेर 'अशुद्ध'अशुद्ध भन्दै कराउनुपर्छ ।" (पवित्र बाइबल, व्यवस्था १३:४५) ।

चराको रगतले घर सफा हुन्छ रे, (लेबी १४:४९-५३) ।

घर शुद्ध पार्न पुजारीले दुईवटा चराहरू, धूपीको काठ, हिसोफ, रातो धागो र जिउँदो चरा लानुपर्छ । ती दुई चरामध्ये एउटालाई माटोको भाँडामाथि भएको पानीमा उसले मारोस् । अनि धुपीको काठ, हिसोफ र रातो धागो र जिउदो चरा लिएर बग्दै गरेको पानीमाथि मारेको चराको रगतमा चोपेर उसले सातपल्ट घरमा रगत छर्कनु पर्छ । यी सबै धुपीको काठ, हिसोफ र रातो धागो र जिउँदो चराद्वारा घर शुद्ध बनाइने यति गरेपछि त्यो जिउँदो चरालाई मैदान छोडिदियोस् । यसरी उसले त्यो घर शुद्ध पार्ने छ, घर पनि शुद्ध हुनेछ ।

मरेको चराले घर सफा हुन्छ त ? विज्ञानले त भन्छ कि रगत त रोगका किटाणु, विषाणु, आदि सर्ने माध्याम (media) हो । रगतको माध्यमबाट रोगका किटाणुहरू सर्दछन् तर बाइबलले चराको रगतबाट नै घर सफा हुन्छ भनेको छ ।

यहुन्ना (८: २२-२६) मा माटोको लेप प्रयोग गरी दृष्टि प्रदान गुर्नभएको भनी वास्तविक दृष्टिप्रदायक औषधि, औषधिको सेवन, मात्रा, प्रयोगबारे जानकारी नदिनुले बाइबलका औषधि विज्ञान पूर्णतः अपाङ्ग भएको पुष्टि गर्दछ । यी सबै बाइबलीय वचनलाई हेर्दा बाइबलका औषधि विज्ञाले येशूको औषधि विज्ञान भनी परमेश्वरको उपहास गरेको छ ।

# के भन्छ रजस्वलाबारे बाइबलले ?

पवित्र बाइबल (लेबी १२:१-५) मार्फत परमप्रभूले मोशालाई भन्नुभयो, "इजरायलका मानिसहरू भन, यदि कुनै स्त्री गर्भवती हुन्छे र एउटा छोरा जन्माउँछे तब ऊ सात दिनसम्म अशुद्ध रहन्छे, जस्तो ऊ रजस्वला समयमा अशुद्ध हुन्छे । अनि आठौँ दिनमा नवजात बालकको खतना गरिनुपर्दछ । सुत्केरी आइमाईले पर्खनुपर्दछ शुद्धीकरणका निम्ति ३३ दिन । आइमाईले तबसम्म कुनै पवित्र चिज छुन हुँदैन तथा पवित्र स्थानतिर जानुहुँदैन जबसम्म उसको शुद्ध हुने दिन पूरा हुँदैन । यदि कुनै स्त्रीले छोरी जन्माई भने त्यो स्त्री स्वाभाविक रजस्वलाको दिनमा झैँ दुई हप्तासम्म अशुद्ध रहन्छे । अनि उसले आफ्नो रजस्वलाबाट शुद्धीकरणका निम्ति ६६ दिनसम्म पर्खनुपर्दछ ।"

विज्ञानले छोरा जन्मिँदाचाहिँ कम दिन अशुद्ध हुन्छ र छोरी जन्मिँदाचाहिँ ठीक त्यसको दोब्बर दिन अशुद्ध हुन्छ भन्ने कुरा अन्धविश्वास मात्र हो भनी सिद्ध गरेको छ ।

त्यस्तै यदि एकजना स्त्रीको मासिक रजस्वला छ उसको रजस्वलाको अशुद्धताको सात दिनसम्म रहनेछ । यदि कसैले उसलाई छुन्छ, ऊ सात दिनसम्म अशुद्ध हुन्छ ।" (पवित्र बाइबल, लेबी १५:१९) ।

कुनै स्त्री रजस्वला भएको समय कसैले उससित सहवास गरे त्यो पुरुष सात दिनसम्म अशुद्ध रहन्छ । (पवित्र बाइबल, लेबी १५:२४) ।

यिनै बाइबलका अवैज्ञानिक वचनका कारण आइन्स्टान हिन्दूधर्मप्रति विश्वाससहित गहिरो सम्मान राख्दथे । यिनै आइन्स्टानले बाइबलका ईश्वरलाई सिधै अस्वीकार गरेका छन् ।

# बाइबलले समयको गणना गर्नै जानेन

ईश्वरीय शास्त्रको रूपमा परिचित खीष्टीयन धर्मको पवित्र मानिने बाइबलमा समयको गणना स्पष्ट रूपमा भएको देखिएन । बाइबलीय शास्त्रमा वैदिक शास्त्रमा जस्तो विभिन्न समयमा लाग्ने ग्रहण त्यसको प्रभाव, विभिन्न ग्रह, ताराको व्याख्यार अनुसन्धान गरिएको भेटिएन । अझ एउटा आश्चार्यलाग्दो वचन भेटियो जहाँ बाइबलले समय गणना गर्न नै जानेन । किनकि जसरी योना एउटा ठूलो माछाको पेटमा ३ दिन ३ रात रहेका थिए, त्यसरी नै मानवपुत्र (येशू) पनि पृथ्वीको गर्भमा ३ दिन ३ रात रहनेछ । (पवित्र बाइबल, मत्ति १२:४०) ।

'छैटौ घडीदेखि नवौँ घडीसम्म देशभर अँध्यारो भयो । अनि जब चर्को स्वरले फेरि कराउनुभयो, उहाँले आफ्नो प्राण त्याग्नुभयो ।' (पवित्र बाइबल, मत्ती, २७:४५-५०) ।

'त्यो दिन तयारीको दिन थियो, अनि भोलिपल्ट विशेष विश्रामको दिन थियो ।' (पवित्र बाइबल, युहना, १९।३१)

येशू शुक्रवार लगभग १२ देखि ३ बजेको बीचतिर मरेका थिए । हप्ताको पहिले दिन आइतवार विहान अँध्यारैमा मरियम मग्दालिनी चिहानमा गईन् र चिहानको मुखको ढुङ्गा एकातिर पन्छाइएको भेट्टाइन (पवित्र बाइबल, युहना, २०:१) अर्थात् येशू त्यहाँ थिएनन् मतलव येशू शनिवार राति नै त्यहाँवाट गायव भएका थिए या त विहान ४/५ बजेतिर नै किनकि त्यतिबेला देशभरी अँध्यारो थियो भनिएको छ ।

अव गरौं दिन र रातको गन्ति, तीन दिन तीन रात पुग्छ कि पुग्दैन कतिपय इसाई पवित्र जनहरूले भनेका छन् त्यति वेलाको हिब्रु

समयअनुसार ६ बजेदेखि बेलुका ६ बजेसम्मलाई दिन भनिन्थ्यो । त्यसभन्दा बाँकी समयलाई रात भनिन्थ्यो । अब गरौं समयको गणनामा,

शुक्रवार विहान ६ बजेदेखि वेलुका ६ बजेसम्म - १ दिन

शुक्रवार वेलुका ६ बजेदेखि शनिवार विहान ६ बजेसम्म - १ रात

शनिवार विहान ६ बजेदेखि वेलुका ६ बजेसम्म - १ दिन

शनिवार वेलुका ६ बजेदेखि आइतवार विहान ६ बजेसम्म - १ रात

शनिवार विहान ६ बजेमाथि (तर यो गणना नगर्दा पनि हुन्छ किनभने एकाविहानै अध्यारोमा भनेर भनिएको छ) देखि वेलुका ६ बजेसम्म - १ दिन

जम्मा- ३ दिन २ रात

यी बाइबलका वचन हेर्दा परमेश्वरको समयको गणना भनेर बाइबलले १ रात नै गायव गराइदिएको छ, तर वास्तवमा येशूको मृत्यु शुक्रवार नभएको यर्थाथ परमेश्वरको अदालतबाट फैसला हुने आशा गर्दै गवाही पेश गरेको छु ।

# बाइबलले मद्यपान गर्न सिकाउँछ

क्रिश्चियनहरूले आफूलाई सभ्य, वैज्ञानिक र संस्कारी बताए पनि बाइबललाई अध्ययन गर्दा यी विषय आफैं खण्डित हुन्छन् ।

Matthew: 11.19, when the Son of man came, he ate and drank, and everyone said, 'Look at this man! He is a glutton and wind drinker, a friend of tax collectors and other outcasts!' God's wisdom, however, is shown to be true by its results.

माथिको पवित्र वचन हेर्दा परमेश्वर पुत्र येशूले मदिरा पिउँदै आएको तथ्य मत्ति ११:१५ ले गवाही पेश गरेको छ ।

त्यस्तै उत्पत्ति १४:१८, २७:२५, दानिएल १०:२-३ को बाइबलका वचनले पनि मदिरा खाने अनुमति दिएको छ ।

पवित्र बाइबल १ तिमोथी ५:२३ अघिजस्तो पानीमात्र पिउने नगर तर तिम्रो पेटको लागि र घरीघरी बिरामी भएकाले गर्दा अलि-अलि दाखमद्य (अंगुरको मदिरा) पिउने गर ।

पवित्र बाइबलमा पावलले तिमोथीलाई औषधिको प्रयोग गर्ने सल्लाह दिएका छन् । पवित्र बाइबलको थुप्रै अनुच्छेदमा मदिरा खान परमप्रभूले अनुमति दिएको पाइन्छ । (पवित्र बाइबलको उत्पत्ति अध्याय १९:३२-३६ सम्म) छोरीहरूले आफ्नो बाबुलाई दाखमद्य खुवाइएको छ ।

जब नोआले दाखमद्य पिए, तब तिनी मात्तिए र आफ्नो पालभित्र नाङ्गै सुतिबसे । कनाकका पिता हामीले आफ्नो पिताको नाङ्गोपन देखेरबाहिर आई आफ्ना दुबै दाज्यूहरूलाई बताइदिए -(पवित्र बाइबल, उत्पत्ति ९:२१-२२) ।

त्यसैले अब हामी आफ्ना मद्य खुवाएर उहाँसित सुतौं र आफ्ना पिताबाट सन्तान खडा गरौं । यसै रात तिनीहरूले आफ्ना पितालाई

दाखमद्य खुवाए र जेठीचाहिँ आफ्ना पिताकहाँ गएर सुती । त्यो सुत्न आएकी र उठेर गएकी लोतलाई केही अत्तोपत्तो भएन । भोलिपल्ट जेठीले कान्छीलाई भनी, "हेर हिजो राती म बाबुसित सुतेँ । आज राती पनि उहाँलाई मद्य खुवाऔँ र तँ गएर उहाँसित सुत् । हामी आफ्ना पिताबाट सन्तान खडा गरौँ ।" यसरी तिनीहरूले त्यस रात पनि आफ्नो पितालाई दाखमद्य खुवाए र कान्छीचाहिँ गएर उहाँसित सुती"(उत्पत्ति १९:३२-३५) नयाँ करारमा येशूले निस्तार चाडको समयमा रोटीलाई आफ्नो शरीर र दाखमद्य (मदिरा) लाई आफ्नो रगतको हो भनी सो खाने र पिउनेहरू स्वर्गीय राज्य पुग्ने बताइएको छ ।

बाइबलद्वारा घोषित दोस्रो येशू आन साङ होङ आफ्नो पुस्तक मोशाको व्यवस्था र खीष्टको व्यवस्था, पृष्ट नं. १६५ मार्फत यस्तो लेख्छन्, 'उघ्राउने अर्थात् आज्ञालाई मात्र जोडा दिने विश्राम मण्डली, सुँगुर अर्थात् विश्वासलाई मात्र जोड दिने प्रेस्विटेरियन र मेथोडिष्ट मण्डली र मुसाजस्तै घृणित सिद्धान्त लिएका सम्पूर्ण मण्डलीहरू जसले अशुद्ध शिक्षा र सिद्धान्त सिकाउँछन् । तिनीहरू सबैको अगमवाणीअनुसार इन्साफ हुनेछ । अहिले हामीलाई खान निषेध गरिएको भनेको शुरूको मण्डलीको यरूशेलम महासभाले निर्देशन गरेको 'मूर्तिलाई बलि चढाएको थोक रगत र गला अठ्याएर मारेको पशुको मासु' हो । निषेधित भोजनको विषयमा प्रेरितको पुस्तकमा तीनपटक दोहोऱ्याएर लेखिएको छ । (पवित्र बाइबल, प्रे. १५:२०-२९) ।

खानेकुरासम्बन्धी निर्णय गर्दा त्यहाँ पवित्र आत्मा हुनुहुन्थ्यो भनिएको छ । कसैले यसमा केही थप्यो भने प्रकाशको पुस्तकमा अगमवाणी गरिएजस्तै बाइबलमा लेखिएका सम्पूर्ण विपत्तिहरू त्यसमाथि थपिनेछ ( पवित्र बाइबल, प्रका २२:१८-१९) ।

सर्प अथवा मुसा खानु र मद्यपान वा धुमपान गर्नु हुन्छ कि हुँदैन भनेर वाक्छल गर्ने मानिसहरू पनि छन् । हामीले दैनिक जीवनमा नखाने खानेकुराको विषयमा विचारविमर्श गरिरहनु आवश्यक छैन । शाकाहारीवाद या मासु खाने सिद्धान्तमा नअड्किी आफ्नो इच्छाअनुसार मासु खान चाहन्छ भने मासु खाए पनि हुन्छ अनि सागसब्जी खान चाहन्छ भने सागसब्जी खाए पनि हुन्छ । (पवित्र बाइबल रोम १४:२-३) ।

प्रसिद्ध लेखक गुरूङ डी.वी. 'हिमालयको चित्कार' नामक पुस्तकमार्फत इसाईहरू शनिवार माछाले जस्तै दाखमद्य पिउने गरेको कुरा उल्लेख गर्नुहुन्छ । त्यस्तै विश्व प्रसिद्ध धर्मगुरु पोप छैठौं हरेक दिन दाखमद्य पिउने तथ्य सार्वजनिक भएको छ । विश्वमा धेरै औषधिहरू छन् जसमा दाखमद्य (लागूपदार्थ) प्रयोग गरेको पाइन्छ । वर्तमान समयमा विश्वमा गुणस्तरीय दाखमद्य (मदिरा) उत्पादनको कार्यमा इसाई राष्ट्र सफल बन्नुमा पवित्र बाइवलीय आशिषलाई श्रेय जान्छ ।

त्यस्तै प्रसिद्ध प्रोष्ट्रेट मण्डली रेभ शुकदेव गिरिद्वारा लिखित "बाइबल औषधिको रहस्य" नामक पुस्तकको पृष्ठ २५ मा "दाखको प्रयोगले पेट र रगत सफा हुन्छ । शरीरमा यसले ऊर्जा दिन्छ, धेरै चिसो सयमयमा शरीरमा ताप पैदा गर्छ" भनेका छन् । तर पछिल्लो समयमा पवित्र बाइबलको प्रकाशको वचन विपरीत 'दाखमद्य' शब्दलाई हटाई 'दाख' मात्र लेखी गलत व्याख्या गर्नेहरूलाई मैले परमेश्वरको अदालतमा पेश गरेको छु ।

# बाइबलले मुखमैथुन जायज मान्छ

वैदिक संस्कृतिभित्र मैथुन कार्यलाई छुट दिन्छ तर खुल्ला र सामुहिक संभोगलाई घृणित मानिन्छ । हिन्दू संस्कृतिभित्र केही व्यक्तिले बहुविवाह गरे तापनि कसैले पनि मुख मैथुनको समर्थन गरेको भेटिँदैन । वैवाहिक सम्बन्धलाई जीवनको अपरिहार्यता मान्ने हिन्दू सन्तहरूले मुख मैथुनलाई छिः छि गर्ने परम्परा बसाएकै कारण भारतवर्षमा यसको गहिरो प्रभाव देखिन्छ । अझै पनि केही ठाउँहरूमा सामुहिक र खुल्ला संभोगभित्र मुख मैथुन लुकेको भेटिन्छ । यी सबै बेबीलोनी सभ्यता र बाइबलभित्रको संस्कृतिको गहिरो प्रभावको निरन्तरता हो । मुखमैथुन हिन्दू र बौद्ध संस्कृतिभित्र अस्वीकृत छ । जैनधर्मले नियम नबनाएको भए पनि मुख मैथुनलाई अस्वीकार गर्दछ । यी सबै बाइबल विरोधी कुरा हो । बेवीलोनी र मिश्रको सभ्यतामा वर्णन गरेको प्राचीन इतिहासको पुस्तकले पश्चिमी परम्परालाई देखाइदिएको छ । बाइबलका थुप्रै हरफहरूमा शोलोमनले मुखमैथुनको महिमा वर्णन गरिदिएका छन् । बाइबलीय यी हरफले वेद, त्रिपिटक, पुराणलाई जिस्काइरहेका छ ।

पवित्र बाइबल (उत्पत्ति २:१८-२५) को भाव हेर्ने हो भने यो पुरूष र स्त्रीका बीचमा हुने विवाह एउटा पवित्र करार हो । जुन कुरा परमेश्वर स्वयंले आदनको बगैँचामा सम्पन्न गरिदिनुभयो । बाइबलले विवाहलाई एउटा गम्भीर रहस्य हो भनेको छ ।

यसकारण मानिसले आफ्ना आमा, बुवालाई छोडेर आफ्नो पत्नीसँग मिलिरहन्छ र ती दुवै एउटै शरीर हुनेछ । यो एउटा गम्भीर रहस्य हो । (एसिफी ५:३१-३२) ।

पवित्र बाइबलका पदहरू (उत्पत्ति २:१८-२५ १ कोरन्थी७:१५) र श्रेष्ठ गीतमा यौनको बारेमा चर्चा गरिएको छ । मानवमा भएको यौन इच्छा पूरा गर्न बाइबलले अनुमति दिन्छ । बाइबलले पति, पत्नीबीच एकमात्र सम्भोग गर्न छुट दिएको छैन त्यो हो सदोमी जुन गुदा सम्भोग हो ।

(१ कोरन्थी ५:१) पतिले आफ्नो स्वास्नीको यौन आवश्यकता पूरा गर्नुपर्दछ । पत्नीले आफ्नो पतिलाई आफ्नो शरीरमा अधिकार दिन्छ । पतिले आफ्नी पत्नीलाई आफ्नो शरीरलाई अधिकार दिन्छ । एकले अर्कालाई यौन सम्बन्धनबाट बञ्चित नगर्नुहोस्, जबसम्म तपाई दुवै सिमित समयको लागि यौन घनिष्टताबाट अलग रहन सहमत हुनुभयो ताकि तपाई आफैँलाई पूर्णरूपमा प्रार्थना गर्न सक्नुहुनेछ । पछि तपाई फेरि एकसाथ आउनुपर्दछ ।

पतिपत्नी दुवैले यस विषयमा भावनात्मक साझेदारी गर्नुपर्दछ । दुवै जनाको समझदारी भएमा मौखिक सम्भोग पूर्णरूपमा जायज छ भनी बाइबल गवाही दिन्छ ।

सोलोमनको गीतमा मौखिक सम्भोगलाई अत्यन्त मीठो तरिकाले व्याख्या गरेको छ । श्रेष्ठगीत ८:१ गीत "तपाई मेरो भाइजस्तो हुर्कनुभयो, जसले मेरी आमाको स्तनहरू चुस्नुभयो । जब म तपाईलाई बाहिर भेट्छु म तिमीलाई म्वाई खान्छु । हो म तुच्छ हुनुहुँदैन ।

श्रेष्ठगीत ८:२ म तिमीलाई मेरो आमाको जस्तै घरमा लैजान्छु, जसले मलाई सिकाउन चाहन्छन् । म तपाईलाई मेरो अनारको रस मसलायुक्त दाखमद्य पिउन दिन्छु ।

श्रेष्ठगीत २:२-३ काँडाको लिलीजस्तो मेरी केटीहरूको बीचमा पनि बगैंचाको रूखहरूको बीचमा स्याउको रूखले जस्तै मेरा प्रेमीहरू पनि जवान मानिसहरूमाझ म उनको छायामा बस्न रमाउँछु । त्यसको फल मेरो स्वादको लागि मीठो छ ।

श्रेष्ठगीत १:१५-१६ तपाई एक बगैंचाको स्रोत, ताजा पानीको कुवा हुनुहुन्छ, लेबनबाट बगिरहेका धाराहरू व्यूँझनुहोस्, उत्तरी बतास र

आउनुहोस् दक्षिण बतास । मेरो बगैँचालाई सास फुकिदिनुहोस् ताकि यसको सुगन्ध बगोस् । मेरी प्रेमीलाई उसको बगैँचामा आउन दिनुहोस् र यसका फलहरू खान देऊ । त्यस्तै मौखिक सम्भोगलाई अनुमति दिएको छ । खण्ड हे मेरी दिदी, मेरी दुलही, म आफ्नो बगैँचामा आएँ, मैले मेरो मसलाको साथ भेला गरेको छु । मैले मेरो महको चाका र मह खाएँ । मैले मेरो दाखमद्य र दुध पिएँ ।

हितोपदेश (५:१५-१८) ले भन्छ, "आफ्नै कुण्डको पानी र आफ्नै कुवाबाट बगेको पानी, पि.के तेरो कुवाको पानी सडकतिर र तेरो खोला-धाराको पानी बजारहरूतिर बग्न दिन ? त्यो तेरै निम्तिमात्र होस् । पराई त्यसको हिस्सेदार पटक्कै हुन नपाओस । तेरी फुहरा आर्शिवाद होस् र तेरी युवावस्थाकी पत्नीसँग तँ आनन्दित हो ।"

पवित्र बाइबलमा भएका यी रूपकहरू माथि अन्याय नगर्ने हो भने यो नियमित सम्भोग मात्र थिएन । मुखमैथुनको वर्णन गरिएको थियो । विश्वप्रसिद्ध क्रिश्चियन पास्टर डानियल भन्छन् रात परेपछि श्रीमतीसँग मुख मैथुन गर्नेहरू नै दिउँसो यो आलङ्कारिक शब्द हो, मुख सम्भोग होइन भनी गलत व्याख्या गर्छन" ।

# बाइबलभित्र बाइबलको नाम नै नहुनु

खीष्टीयन पन्थको प्रभाव बढ्दै जाँदा प्रचारकहरूमाझ मतभेद पनि गहिरिँदै जान थालेको थियो । येशूको मृत्युसँगै सुरू भएको शक्ति संघर्ष पछिल्ला दिनहरूमा यो झन् गहिरिँदै गयो । धार्मिक अगुवाले एक अर्काको नाम नतोकी फलानोको शिक्षा झुट्ठो हो भन्न थालेका छन् । खीष्ट विरोध भइरहेको छ । अब धेरै खीष्ट विरोधी आएका छन् । केहीले भन्ने गरेका छन्, "तिनीहरू हामीबाट निस्केर गए किनकि तिनीहरू हाम्रा थिएनन् ।"

चेलाहरूको बीचमा मतभेद र झगडा बढ्दै गइरहेको तथा इसाई अगुवाले आफूखुशी विश्वासीहरूलाई शिक्षा दिइरहेको अवस्थामा अन्त्य गर्न, बाइबलको पुस्तक संग्रह गर्न तथा बाइबलका शिक्षामा एकरूपता ल्याउन भनेर सन् ३२५ मा काउन्सिल अफ निसिया डाँकियो ।

यो भेला रोमन राजा कन्स्ट्यान्टाईनले डाँकेका थिए । उनले भर्खरभर्खर रोमन साम्राज्यमा इसाईकरणलाई कानुनीमान्यता दिएको समय थियो । यस भेलामा रोमन साम्राज्यको सरहदभित्रबाट ३ समयभन्दा बढी इसाईधर्मगुरूले भाग लिएका थिए । भेलाको सारा खर्च राजा कन्स्ट्यान्टाईनले बेहोरेका थिए । यस सभामा खास गरेर दुईवटा मान्यतामाथि बहस चर्केको थियो पिता, पुत्र फरक हुन् । पिता र पुत्र एकै हुन् । एरियस, जो अलेक्जेण्ड्रियादेखि भेलामा सहभागी हुन आएका इसाई पुजारी थिए । उनले पिता र पुत्र फरक हुन् भन्ने मत राख्दै येशू ईश्वरको सिर्जना भएको कारण पुत्रलाई होइन पितालाई पुज्नुपर्छ भन्ने मान्यताअगाडि सारे । सभाबाट उनको मत पारित भएन ।

पुत्र र पिता एकै हुन् । पुत्रलाई पुजेपछि मात्रै पितालाई पुजेको ठहरिन्छ भन्ने अर्का इसाई पुजारी एथ्नासियसको मतलाई सभाले पारित गऱ्यो । अहिले चर्चहरूमा पढ्ने गरिएको ६६ पुस्तक संग्रहित बाइबल एथ्नासियसको देन हो किनभने बाइबलमा संग्रहित गरिने पुस्तकहरूको सूची उनले नै तयार पारेका थिए ।

सन् ४०० मा सन्त जेरोमीले ती पुस्तकहरूलाई एउटै किताबको रूप दिए । यसअघि बाइबलको वर्तमान ढाँचा मौजुद थिएन । इसाई विश्वासीको आ-आफ्नै प्रकारको ढाँचा थियो । त्यस ढाँचाभित्र विभिन्न पुस्तकहरू थिए । काउन्सिल अफ निसियाले ती विभिन्न पुस्तकहरूमध्येबाट पिता र पुत्र एकै हुन् भन्ने मान्यतासँग सहमत ६६ वटा पुस्तकहरूलाई आधिकारिक इसाई धार्मिक पुस्तकको मान्यता दिएको थियो ।

बाइबल वास्तवमा ६६ पुस्तक वा खण्डको सङ्गालो हो । यो पुस्तक १६०० वर्षको अवधिमा ४० जना मानिसले लेखिएको मानिन्छ । ३९ पुस्तकमध्ये धेरै जसो हिब्रुभाषामा र केही भाग आरमीमा लेखिएको थियो । जसलाई आज हिब्रुधर्मशास्त्रको पुरानो करार भनिन्छ । बाँकी २७ ग्रीकभाषामा लेखिएको थियो जसलाई आज युनानी धर्मशास्त्रको नयाँ करार भनिन्छ । यो पवित्र र पूर्णग्रन्थ मानिने धर्मशास्त्रभित्र कहीँकतै 'बाइबल' भन्ने शब्द उल्लेख गरिएको छैन ।

उत्पत्ति १:१ देखि प्रकाश २२:२१ सम्म वा शुरूदेखि अन्त्यसम्म यो धर्मशास्त्रको चिनारी नामको रूपमा रहेको बाइबल शब्द नहुनु चाहिँ अचम्मको रहस्य मानिन्छ । पछिल्लो समयमा पवित्र धर्मशास्त्र विरुद्ध गएर बाइबलको विभिन्न शब्द कल्पना गर्नु, बाइबलभित्र बाइबल शब्द नै नहुनुले यो शब्दमाथि शङ्का उब्जाएको छ । बिभिन्न अगमवक्ता र येशू स्वयम्‌ले यस शास्त्रको नाम सम्बन्धित सम्बोधन नगर्नुले कतै यो नाम बाइबलमा भनिएको प्रभातको बिहानीले पवित्र शास्त्रको नयाँ नाम बाइबल राखेको त होइन भनी शङ्का उब्जाइदिएको छ ।

अर्को यस्तै अद्‌भुत सत्य बाइबलमा इसाईधर्म वा ख्रीष्टियनधर्म भनेर बताइएको छैन । बाइबलमा बेबीलोनी धर्मको बारेमा लामो दस्तावेज

तयार गरी समेट्नु तर आफ्नो धरातलबारे अनविज्ञ रहनुले खीष्टियनधर्मलाई धर्म नभई येशू-योहबाको नाममा दशांम्स सङ्कलन गर्न तयार गरिएको समूह हो भन्ने विभिन्न विद्वान्को मत आएको छ अर्कोतिर विश्व प्रसिद्ध व्यक्तित्व नित्सेले "बाइबल पाप हो" भनेका छन् । आज यूरोपमा खीष्टियनको पवित्र धर्मग्रन्थ बाइबलभन्दा नित्से, मार्क्स, डार्विन, सिमाने, दिब्युभोर आदिको दर्शन पठनीय र प्रभावकारी छ । त्यसकारण परमेश्वरको अदालतमा बाइबलभित्र बाइबल शब्द राखियोस् वा बाइबलको नाम परिवर्तन गरियोस् साथै यस धर्मशास्त्रलाई पठनीय र प्रभावकारी बनाइयोस् भनेर परमेश्वरको अदालतमा प्रमाण पेश गरेको छु ।

# विज्ञानको नजरमा बाइबल र पुराणको वचन

१) हनुमान् पवनपुत्र हुन् । (रामायण)

येशू परमेश्वरको पुत्र हुन् (युहून्ना, ३ :१६) ।

२) पुनर्जन्म र पूर्वजन्म हुन्छ (वेदादि शास्त्र) ।

पुनरूत्थान हुन्छ (मर्कुस, १२ :।१८,२३,२५,१ र कोरिन्थी, १५ :४२) ।

३) हनुमानले पहाड उचाले (रामायण)

येशूले.(मत्ती.रा) माछाको मुखबाट चाँदीको सिक्का निकाले (मत्ती १७ :२७)

४) बेहोस लक्ष्मण सञ्जीवनी बुटी खाएर बौरी उठे (रामायण)

मारेर गाडेको तीन दिनपछि येशू बौरी उठे (मत्ती २८ : ६) ।

५) कमाएको केही रकम दान गर (नीतिशास्त्र)

कमाएको दशांश प्रभूभेटि चढाऊ । (बाइबल)

६) कर्ण कुन्तीबाट विना बाबु जन्मिए (महाभारत)

येशू विना बाबु नै मरियमबाट जन्मिए (लुका १:३५)

७) गजेन्द्रले (हात्ती) भगवान् विष्णुको प्रर्थना गऱ्यो (गजेन्द्रमोक्ष) ।

गधाले स्वर्गदूतलाई देख्यो (गन्ती, २२ :२३)

८) रामनामले ढुङ्गा समुद्रमा तैरियो (रामायण) ।

इज्राएलीहरूसमुद्रमाथि हिँडे,वरिपरिसमुद्रको पानी पर्खाल जसरी उभियो (प्रस्थान, १४ :२२) ।

९) रामराज्य आएको होस् । (सनातनी)

प्रभू येशूको राज्य आएको होस् । (खीष्टीयन)

१०) पृथ्वी शून्यमा अडिएको छ (ऋग्वेद १० ।८५ ।१)

पृथ्वी शुन्यमा अडिएको छ (अय्युब, २६ : ७)

११) गणेशको टाउकोमा हात्तीको टाउको शल्यक्रियाद्वारा जोडियो (शिवपुराण) ।

आमदको ढाडबाट करङ निकालेर हब्बाको सृष्टि भयो (उत्पत्ति २ :२१-२२)

१२) भूत पिशाच निकट नही आवे महावीर जब नाम सुनावे (हनुमान चालिसा) ।

येशूले भूतप्रेत लागेको मान्छेलाई निको पार्नभयो (मत्ती, ८ :२८)

# देउकी र झुमामा दास प्रथा, देहव्यापारको प्रभाव

बाबुआमा नभएका टुहुरा बालबच्चालाई सहारा दिने उद्देश्यले मन्दिर वा गुम्बामा राखिएको बच्चा नै देउकी, झुमा र ढवा हुन् । यस्ता अवोध बालबालिका तथा सहारा नभएका महिलाहरूको सेवा र उद्धार गरिदिंदा पुण्य प्राप्त हुने कथ्य प्रमाण सुन्न पाइन्छ । मन्दिर, गुम्बामा चढाइएका फलफूल, प्रसाद, दानबाट सहारा नभएका महिलाहरूको जीवन निर्वाह हुने गर्दथ्यो । बैतडीजिल्लाको मौलालीमन्दिर र मुस्ताङ थाकखोला, वारागाउँ, पाँचगाउँजस्तै थुप्रै पवित्र तीर्थस्थल गुम्बाहरूमा अबोध बालबालिकाको बाल तथा अनाथ आश्रम बनेका थिए । शुरूका शताब्दीहरूमा यस्ता बालबालिकाको लागि उचित शिक्षादीक्षाको व्यवस्था मिलाइएको थियो । उमेर पुगेपछि आफूखुसी घरजम गर्न समेत छुट थियो । मल्लकालको उत्तरार्द्धतिर विश्वबजारमा फैलिएको दास प्रथा र देह व्यापारको प्रभावले यी क्षेत्र पनि अछुतो रहन सकेन । तात्कालिक विधर्मीहरूद्वारा ३ वर्ष ३ महिना ३ दिनको गुप्तवास बसाइदिने रातोवस्त्र धारण गर्न लगाउन थाले । विस्तारै आफ्नो भाकल पूरा गर्न साधनको रूपमा हेर्न थाल्यो । अब हेरौँ पवित्र बाइबलको प्रमाणतिरः पवित्र बाइबलअनुसार कमाराकमारी मालिकको सम्पत्ति हो । (प्रस्थान २१:२०-२१) ।

"कुनै मालिकले आफ्नो कमाराकमारीलाई लट्ठीले कुट्छ अनि यस्तो कुटाईले यसको मृत्यु हुन्छ भने त्यो हत्याराले सजाय पाउनै पर्छ । तर यदि कमाराकमारी मरेनन् अनि एक दुई दिनमा ठीक भइहाल्यो भने हिर्काउने मानिसलाई सजाय हुँदैन । किन ? कमाराकमारीको निम्ति उसले दाम तिरेको छ र कमाराकमारी उसको सम्पत्ति हो ।" (प्रस्थान, २१:२०-२१) ।

"यदि कुनै मालिकले कमारालाई मुखमा हिर्काएर दाँत फुकालिदिन्छ भने त्यस कमाराले कुनै पैसा नतिरी त्यो स्वतन्त्र भएर जानसक्छ । (प्रस्थान २१:२७) ।

बाइबल (मत्ती, ५:१७-१९) मा प्रष्टरूपमा येशूले भनेका छन् कि उनी कुनै पनि पुरानो व्यवस्था रद्द र भङ्ग गर्न आएको होइन भनेर उनले त्यहाँ फेरि भनेका छन् ।

तेह्रौं शताब्दीमा पोपइन्नेसेन्ट तृतीयको पालामा चर्चका पादरीहरूका निम्ति सेलिब्रेसी (कुमारी) नै रहनुपर्ने नियम बन्यो । त्यसअन्तर्गत नारीले शरीर, कामबासना र विवाद तीन कुरा गर्न नपाइने नियम भयो । नियमानुसार नारीको विवाह वर्जित भयो । अनिर्बन्ध कामभोगलाई खुल्ला छुट भयो । सेलीब्रेसीको अर्थ कर्सलाई लोग्ने बनाएर बस्न नपाइने तर पादरी, विशप तथा क्लर्जीहरूलाई चाहेअनुसार सम्भोग गर्न दिनु थियो । अर्को शब्दमा यो पादरी, विशप तथा क्लर्जीहरूलाई वेश्यागमन गर्ने व्यवस्था थियो । चरित्रको स्तर यति गरेको थियो कि सेलीब्रेसी गरेका पादरीका बहिनी र आमासँग पनि यौन सम्पर्क राख्न छुट थियो । यसलाई अनैतिक भन्न छाडेर राज्यले पादरीहरूको नजिक आमा र बहिनी एक्लै जान नपाउने नियम बनाएको थियो । चर्चले यिनीहरूबाट वेश्या करसमेत असुल गर्दथ्यो । यसरी मानव अधिकार विरुद्ध विश्व बजारमा फैलिएको दासप्रथा स्त्री देहव्यापार नेपाली गुम्बा र मन्दिरमा समेत फरक शैलीमा भित्रियो ।

अब जाऔँ शास्त्रीय प्रमाणतिर ऋग्वेद (८/६/१०/१०२/५) मन्त्रहरू (१/३२/११) मन्त्र, तैतरीय ब्राह्मणको (१/६/७,) वृहद् देवताको (६/४६) अनि (८/१२/९०) ले वैदिक नारीहरूको सामाजिक अधिकार उच्च भएको प्रष्ट गराउँछ । प्राचीन हिन्दू धर्मशास्त्रले मानिसको किनबेचलाई (दासप्रथा) निन्दनीय ठानेको छ । वैदिक शास्त्रमा कहीँकतै पनि दासप्रथाको विषयमा उल्लेख छैन ।

# खीष्टीयन सम्प्रदायहरू

खीष्टीयनमतको बारेमा विस्तृत रूपमा बुझ्नको लागि केवल बाइबलमात्र पर्याप्त छैन । आदिम युगदेखिको मानव विकासक्रम, विस्तारै मान्छेको चेतनास्तर विकाससँगै अलौकिक शक्तिलाई पुज्ने प्रचलन आपसी मनमुटावको कारणले नयाँ मतहरूको उदय भयो । त्यहाँको विकसित रूपले कालान्तरमा धर्मको रूप लियो । यदि हामीले बाइबललाई नै आधार मान्ने हो भने बाइबलका मार्गदर्शनमा कुनै पनि इसाई समूह चलेको छैन । बाइबलको नियममा प्रष्ट रूपमा मूर्तिपूजाको विरोध गरिएको छ, तर आज इसाईहरू विशेष गरी रोमनक्याथोलिक, अर्थोडोक्स, प्रोटेष्ट र ज्याकोबाइटहरूको चर्चअगाडि भव्य मूर्ति वा क्रस पाइन्छ । यसलाई कसरी लिने सर्वसाधारणले ? बाइबल गलत कि अहिलेको इसाईहरू गलत ? इसाई समूहहरू कुन सही ?, कुन गलत ? भनेर व्याख्या गर्नुभन्दा पहिला यो प्रष्ट हुन जरूरी छ । कुनै दैविक शक्तिले ब्रह्माण्ड र जीवनको उत्पत्ति गऱ्यो कि समाज विकास क्रमसँगै मानवले धर्मको परिकल्पना र विकास गऱ्यो । हजारौँ वर्षदेखि जीव र जगत्‌लाई बुझ्ने, व्याख्या गर्ने परस्पर फरक दृष्टिकोण रही आएको छ । सत्यकै पक्ष लिंदा सुकरातले विष सेवन गर्नुपऱ्यो । इतिहासलाई सरसर्ती नियाल्ने हो भने यस्ता लाखौं सुकरात पाउँछौं जसले कथित धर्मको विरूद्ध र सत्यको पक्षमा बोलेर आफूलाई बलिवेदीमा होमे । दासयुगमा यरूसलेममा जन्मेका येशु महामानव थिए यो सत्य हो । उनी कुनै परमेश्वरका पुत्र थिएनन् न त उनीभित्र कुनै अलौकिक शक्ति थियो । दासहरूको अगुवा जसले तात्कालिक यहुदी शासकहरूको विरूद्ध बोल्यो, यो सहन गर्न नसकी यहुदी शासकले येशुलाई

मृत्युदण्ड दिए । येशूको मृत्युपछि हुने सक्ने सम्भावित दास विद्रोह रोक्नका लागि मरेर फेरि ब्यूँतिएको भनी देवत्वकरण गरिएको त होइन ?

इसाईहरूको समूहहरू हाम्रो देशका राजनैतिक संगठनजस्तै हुन् । अलिकति भाग नमिल्दा अलग समूह निर्माण गर्ने, इसाईहरूमा पहिलो विभाजन सन् १०५४ मा भएको हो । भेटिकनसिटी र पोपसँग अलिकति मनमुटाव भएकोले उस्तै खालको अर्को इसाई समूह बनायो, जसलाई अर्थोडक्स भनेर चिनिन्छ । हाल रूस र पूर्वयूरोपमा यिनै अर्थोडोक्सहरूको बाहुल्यता छ । अर्थोडोक्सबाट पनि असहमत भएर ज्यकोबाइट समूह अस्तित्वमा आयो, यसरी खोतल्दै जाने हो भने इसाईहरूको नांगो यथार्थ सहजै बुझ्न सकिन्छ । मान्छेहरू आफ्नो कर्मप्रति विश्वास नगरेर किन धर्मको नाममा एक अर्काप्रति यतिविधि असहिष्णु बनेका होलान् ? सबै भन्छन् हाम्रो धर्म सत्य हो, हाम्रो धर्ममा लागेपछि स्वर्ग जाने ग्यारेन्टी, तर तिनै बबुराहरू जो तपाई हामीलाई स्वर्ग लाने एजेन्ट हुन् तीनलाई आफ्नै भविष्य थाहा छैन । मरेपछि पाइने कथित स्वर्गको लालचमा वर्तमानलाई किन नर्क बनाउने ? एक अर्काको विरूद्ध जाइलाग्ने ?, भौतिक आक्रमण गर्ने, एउटाको अस्तित्व अर्कोले नामेट पार्ने खोज्ने किन ? स्मरण रहोस् आदिमयुगदेखि आजसम्म जति पनि ठूला नरसंहार भएको छ त्यो धर्मकै नाममा भएको छ । धर्मको नाममा दिनौँ सयौँ मान्छे मरिरहेका छन् तर विडम्बना यहाँ धर्मको नाममा जे गर्दा पनि जायज छ । कथित धर्मभित्र रहेका पाखन्डको विरोध गऱ्यो भने नास्तिक बनाइन्छ । यथार्थमा मानवको सबैभन्दा ठूलो शत्रु कथित धार्मिक गुरु भनाउँदाहरू हुन् । नास्तिकबाट भन्दा धर्मको अपमान अगुवाहरूबाट धेरै भएको छ ।

येशूको यरूशेलम प्रस्थानपछि शुरू भएको खीष्टीयनसम्प्रदाय बिस्तारै बढ्दै गएको थियो । यसरी बढ्नको गहिराईमा पुगेर अध्ययन गर्दा चर्चहरूमा विश्वासीले बुझाउने दशांश र मुठीदानको प्रयोगकर्ताको विवाद हो भन्ने बुझिन्छ । खीष्टीयनहरूको सम्प्रदायको सन्दर्भमा विश्व प्रसिद्ध खीष्टीयन लेखक एवम् पाष्टर डा. थोमस ह्वाङ भन्छन् "यो संसारमा रहेका खीष्टीयन सम्प्रदायभित्रको एक सम्प्रदाय प्रोटेष्टेड मण्डलीभित्र २२ हजार सम्प्रदाय छन् । २२ हजार त प्रोटेष्टेडहरूको मात्र संख्या हो तर अरु थुप्रै समूह, सम्प्रदायहरू यस संसारमा खीष्टियनको नामले चिनिन्छन्

।"त्यसैले यस्तो अवस्थामा गुज्रिएको खीष्टीयनसम्प्रदायहरूको नामावली तयार गर्न कठिन देखिन्छ । केही मुख्य सम्प्रदायहरू यस प्रकार छन्:

१.रोमन क्याथोलिक

२. अर्थोडक्स

३. रसियन अर्थोडक्स

४. एङ्लिकन

५. यहोबाको साक्षी

६. मर्मोनवादी

७. ऐक्य ईश्वरशास्त्र

८.पिता परमेश्वर अनुग्रहको मण्डली

९. परमेश्वरको मण्डली

१०. सच्चाई

११. प्रोटेष्टेन मण्डली:

- क. पेन्टिकोस्टल
- ख. व्याप्टिस्ट
- ग. मेथोडिस्ट
- घ. लुथरन
- ङ. प्रेस्विटेरियन आदि

# त्रिपिटकमा येशूको वर्णन छ त ?

खीष्टीयन महासंघ नेपालका पूर्व अध्यक्ष सुन्दर थापाको कार्यकालमा थुप्रै अगुवाले यस्तो बोले "त्रिपिटक २७ को २३" पृष्टमार्फत बुद्ध भन्छन् "मैले बडो कष्ट गरेर शरीरलाई रित्याएर तपस्या गरी निर्वाण प्राप्त गरेँ र ज्योतिको दर्शन प्राप्त गरे । ज्योति दिनेवाला म होइन, म ज्योतिको पथप्रदर्शकमात्र हूँ । त्यो ज्योति दिन परमेश्वरले पठाएको पुत्रबाहेक कसैले पनि सक्दैन । त्यो पुत्रचाहिँ हत्केला र कोखमा छेडेको र मुहारमा चोटैचोटको डाम हुनेछ । (जो येशू हुनुहुन्छ)" यस्तो त्रिपिटकमा हुँदै नभएको गलत र भ्रामक मन्तव्य दिने पूर्वअध्यक्षसित सबै बौद्धमार्गीहरू सजक हुनुपर्ने देखिन्छ ।

त्रिपिटकभित्र यो अनुच्छेद कहीँकतै छैन भनेर थाहा नपाई यो कुरा बोल्नु दुखद कुरो हो । त्रिपिटकले येशूलाई चिन्दैन भन्ने कुरामा लामाहरू प्रष्ट छन् । तर सुन्दर थापाको कार्यकालमा यस्तो भ्रम फैलाएको कारण महासंघभित्र नै उनी विवादित भएको सबै घटना बाहिर ल्याउने, नल्याउने महासंघकै इच्छामा निर्भर हुने हुँदा खोजकारले केवल संकेतमात्र गरेको कुरा यहाँ प्रष्ट पार्न चाहन्छु । तसर्थ त्रिपिटकमा येशू मुक्तिदाता भनिएको गलत अनुवाद गरी सर्वसाधारणलाई भ्रमित गरिएका शास्त्र नपढी वास्तविक अनुवाद गरिएका पवित्र शास्त्रहरू पढ्नको लागि खोजक अनुरोध गर्दछन् ।

बौद्धधर्मका सर्वोच्च महायोगी गुरू चुटल साङ्गे दोर्जे रिम्पोछेका अनुसार, "वाल्मीकीरामायणमा बुद्धलाई चोर भनिएको सत्य हो तर त्यहाँ भनिएको बुद्धचाहिँ सिद्धार्थ गौतम बुद्ध होइन ।" हिजोआज विभिन्न लेख र रचनामार्फत व्यक्तिहरूबाट जानाजान भ्रमको खेती साम्प्रदायिक र 'दङ्गा भड्काउन लागि परेको देखिन्छ । यस्तो खेतीबाट उत्पन्न हुने बालीनाली भनेको प्राचीन ग्रन्थमाथिको भ्रम एवं दुष्प्रचार नै हो । इसाईद्वारा

परिचालित भेषधारी लामाहरूको भेटेसम्म, ठाउँ पाएसम्म ग्रन्थ अवमूल्यन नगरी आफ्नो चित्त बुझाउन सक्दैनन् । यस्तैमध्येको एउटा प्रसङ्गसहित बुद्ध शब्दको प्रयोग वाल्मीकीरामायणको अयोध्या काण्डमा गरिएको छ । सामान्य मान्छे जोसुकैले भन्न सक्छ, बुद्ध जन्मिएपछि रामायण ग्रन्थ लेखिएको होइन । रामायणको परिघटना बुद्ध जन्मिनुभन्दा धेरै अघिको हो र त्यहाँ प्रयोग गरिएको बुद्ध शब्द नास्तिक विद्वानको अर्थमा हो । सिद्धार्थ गौतम बुद्धलाई इङ्गित गरेर लेखिएको होइन । केही इसाईद्वारा परिचालित लामाहरूले नास्तिकमत धेरैपछि आएको भनी आफ्नो झुटलाई साँचो बनाउन झुटकै सहारा लिनेछन् । त्यतिबेला बुझ्नुहोस् तिनीहरू परिचालित अनुहार हुन् ।

प्रसङ्ग हेरौँ

"निन्दाम्यहं कर्म पितुः कृतं तद्धस्तवामगृहवाद्विप मस्थबुद्धिम् । बुद्धयाऽनयैवंविधया चरनत सुनास्तिकं धर्मपथादपेतम्

- अयोध्याकाण्ड, ११०, । : ३३

"यथा हि चोरः स तथा ही बुद्ध स्तथागतं नास्तिक मंत्र विद्धि तस्माद्धि यः शक्यतमः प्रजानाम् स नास्तीकै ननाभि मुखो बुद्धः स्यातम्" (अयोध्या काण्ड सर्ग ११० श्लोक ३४ गीताप्रेस, गोरखपुर १६७८)

"जसरी चोर दंडनीय हुन्छन् त्यसरी नै बुद्ध पनि दंडनीय छन्, त्यसरी नै तथागत र नास्तिकहरू पनि -चार्वाक) । त्यहाँ भनिएको छ नास्तिकहरूलाई चोरहरूसरह दंड देउ, तर जो वंशबाहिर छन् ती नास्तिक ब्राह्मण वर्ग भए पनि उनीहरूसँग कहिल्यै वार्तालाप नगर । यो बुद्ध र तथागतको प्रसङ्ग बुझ्न योभन्दा पहिलोको श्लोक हेरौं । श्लोक ३३ मा जाबालिलाई भगवान् श्रीराम भन्छन् नास्तिक विचार भएको कारण "विषमस्थ बुद्धिम् एवं अनय बुद्धया" । विषमस्थबुद्धिम् भनेको वेदमार्ग बिर्सेको, भ्रष्ट भएको, नास्तिक बुद्धि अनय बुद्धया माने कुत्सित बुद्धि भएको । त्यो श्लोक ३३ को पूर्ण अर्थ यस्तो हो ।

"अहं निन्दामि तत् कर्म कृतम् पितुः त्वाम् आगृह्णात् यः विषमस्थ बुद्धिम् चरन्तं अनय एवं विधया बुद्धया सनास्तिकम् अपेतं धर्म पथात्" ।

हे जबालि ! म मेरा बाउआमाको त्यो कार्यको निन्दा गर्दछु, जसले तिमीजस्तो वेदमार्गबाट पतीत, भ्रष्ट बुद्धि भएका धर्मच्युत नास्तिकलाई आफ्ना घरमा राखे । यसै प्रसङ्गअघि बढाउँदै भगवान् श्रीराम भन्छन्, जाबालि जस्तो वेदमार्ग च्यूत भ्रष्टबुद्धि भएको धर्मच्यूत नास्तिकलाई सभामा राख्ने होइन, राजाले त्यस्तो व्यक्तिलाई चोरलाई जस्तो दण्ड दिनुपर्छ ।

अब यहाँ गौतम बुद्धलाई किन ल्याइयो ? कसरी ल्याईयो ? ल्याउने कथित विद्वान्हरूले जान्लान् तर त्यहाँ श्लोक ३४ मा "बुद्धस्तथागतं" मा विसर्ग सन्धि छ, त्यसको विच्छेद गर्दा 'बुद्ध तथागत' । त्यसपछि आएको शब्द नास्तिकमात्र हो । जम्मा दुई शब्द छ, नास्तिकम् अत्र, त्यसपछि आउँछ, विद्धि । त्यसको अन्वय हुन्छ विद्धि नास्तिकम् अत्र तथागतम् । अर्थात् नास्तिकलाई केवल बुद्धिजिवीको रूपमा हेर्नुपर्छ । त्यस समान ठान्नुपर्छ । त्योभन्दा अघिल्लो पंक्तिको अन्वय 'यथा हि सः बुद्धाः चोरः' - अर्थात् जो बुद्धिजिवीमात्र छ ऊ चोरजस्तै हो, त्यसैले दण्डित गर्नुपर्छ ।

यहाँ प्रयोग भएको बुद्ध नास्तिक बुद्धिजीवीहरूको लागि प्रयोग हो, सबै बुद्धिजीवीहरूको लागि होइन । पूर्व श्लोक ३३ मा जाबालिको लागि प्रयोग हुँदा विषमस्थ बुद्धिम् बुद्ध्यानयेवंविधया मा वेद मार्ग भ्रष्ट, विषय बुद्धि भएकाको अर्थ हो । अतः ३४ औं श्लोकमा प्रयोग भएको बुद्ध शब्दको अर्थ - विषय बुद्धि भएका, वेदविरोधी, कुत्सित बुद्धि भएका बुद्धिजीवि जसले आफ्नोतर्क शक्तिको प्रयोग कुत्सित कार्यमा ल्याउँछ भन्ने हो । त्यसैले रामायण र विभिन्न पुराणहरूमा लेखिएका बुद्ध शब्द देखेर सिद्धार्थ गौतम बुद्ध सम्झनु चाहिँ अज्ञानता हो वा त्यसले बुझेर पनि स्वीकार्नुचाहिँ परिचालित हुनेहरूमात्र हो । अब आफैँ छुट्याउनुहोस् ।

अर्जुन ज्ञवालीद्वारा लिखित बाइबल र माओवाद (२०७३) नामक पुस्तकमा विभिन्न समयमा बौद्धधर्मको बदनाम गर्ने प्रयत्न क्रिश्चियन मिसनले गरेको तथ्य उजागर भएको छ । वर्तमान समयमा त्रिपिटकमा येशू मुक्तिदाता हो भनिएको छ भनी गलत अनुवाद गरिएको लेख, रचनाहरू अनलाइन मिडिया, हातेपर्चा पम्प्लेट र विभिन्न लेखहरूको माध्यमबाट जनसमक्ष ल्याइएको छ । यसरी अरूका शास्त्र र संस्कृतिलाई

अनर्थ र कुब्याख्याको सुकुल ओढाएर आफ्नो अनुकूलतामा ब्याख्या गर्ने छद्मभेषी इसाईहरू हाम्रा सामु निर्लज्ज उभिएका छन् यिनीहरू नै बाइबलमा भनिएको शैतानको क्रियाकलाप हो भनी खीष्टीयन जगत्ले बुझ्न जरूरी छ । आफ्नो मण्डलीमा विश्वासीहरूको संख्या थप्न, दशांशको रकम धेरै उठाउन, नाम कमाउन तथा शक्ति प्रर्दशन गर्न यस्ता गलत क्रियाकलापमा संलग्न जो कोहीलाई पनि कानुनी दायरामा ल्याउनुपर्ने देखिन्छ । समयमै यस्ता गतिविधि नियन्त्रण गर्न सकिएन भने निकट भविष्यमा धर्म युद्ध हुन सक्ने निश्चित छ ।

वि.सं. १३३४ (सन् १२७७) मा युरोपमा वैदिक धर्म मान्दथे । तिनका विरूद्ध इन्कुईजिशन लागु गरियो । खीष्टीयन(पोप) ले २०,००० स्त्री, पुरूष र बालकका टाउको गिँडेका थिए । जनताले पोपलाई सामन्तको कुकुर मान्दथे । यसै समयसँगै आर्यविरोधी लेख र रचना योजनावद्ध ढंगमा अगाडि बढाइयो । फलस्वरूप अप्रत्यक्ष रूपमा आर्यावर्त क्षेत्रका सनातन धर्मले धेरै समस्या भेल्नुपर्‍यो । नेपाल, चीन, भारत, कोरिया, जापान, मङ्गोलिया, मध्य-पूर्वी एसिया आदि देशका धर्म संस्कृति खतरामा परिसकेको छ । विद्यर्मी इतिहासकारका कारण भारतवर्षको पवित्र शास्त्रलाई समेत गलत अनुवाद गरेको पाइन्छ । (नेपालमा इसाईको चलखेल-२०७२, डा. शास्त्रदत्त पन्त) ।

१८ औं शताब्दीको अन्तमा अष्ट्रेलियामा विद्यर्मीहरूको प्रभावको कारण अष्ट्रेलियाको टोटेमवादसँग सम्बन्धित संस्कृति परम्परा मूल्य मान्यता सबै समाप्त भए । अष्ट्रेलियाका आदिवासीहरूका धर्म टोटेमवादसँग सम्बन्धित थियो । उनीहरूको धर्मले सम्मोहन, भारफुक र टुनामुना विश्वास गर्दछ तर धेरै अष्ट्रेलियाको आदिवासीहरू आज इसाई संयन्त्रद्वारा स्थापित वस्तीहरूमा रहन्छन् जहाँ गैह्र-इसाई अनुष्ठान र संस्कार पूर्णतः निषेध गरिएको छ । (शेतोकरेव, अनुवादकः युवराज पन्थी, धर्मको इतिहास, पृ. ३०, मालिका प्रकाशन, काठमाडौँ) ।

सिरियाका इसाई र वेवीलोनियाका विशपलाई क्याथोलिकभन्दा भिन्न भयो भन्दै जलाएर मारिदिए र आफ्नो मनगढन्ते विद्यर्मी दस्तावेज प्रस्तुत गर्‍यो । यस्ता थुप्रै उदाहरण विश्व इतिहासमा पाइन्छ ।

# रोमन क्याथोलिक र प्रोटेष्टेनको इतिहास

खोजकले रोमन क्याथोलिक मण्डली र प्रोटेष्टेड मण्डलीको इतिहासमा भएका हेर्नै नसक्ने विभत्स दृश्यहरू अध्ययन गरी तिनका केही अंश र गम्भीर अपराधहरूको टिपोट गरेका छन् जसले पाठकलाई खीष्टीयन इतिहासभित्रको कहालीलाग्दो सम्प्रदायिक ज्याजती सहजै अनुमान गर्न सक्नुहुनेछ ।

१. जोन विकलिफ (John Wycliff, 1920-1384) : सन् १९२० मा बेलायतमा जन्मेका जोन विकलिफले रोमन क्याथलिक चर्च र पोपको भ्रष्टता एवं पाखण्डको विरोध गरे । उनले पोप विरुद्धको गतिविधिको खुल्ला विरोध गर्न सङ्घ बनाए जसलाई 'पोअर प्राइष्ट' (Poor Priest) भनियो । यही चर्च विरोधी नीतिको कारण यिनलाई अक्सफोर्ड विद्यालयबाट निष्कासित गरिएको थियो ।

२. जोन हस (Hohn Huss, 1369-1414) : जोन हसले चेकोस्लोभाकियाको वोहेमियामा चर्चको भ्रष्टताको भण्डाफोर गरेका थिए । यिनको विचारले वोहेमियामा निकै समर्थन प्राप्त गर्‍यो । यिनको लोकप्रियताबाट तर्सेर इसाई नेतृत्वले यिनलाई मृत्युदण्ड दिए । सन् १४१५ मा यिनलाई खाबामा बाँधेर जिउँदै जलाइयो ।

३. जिरोलामो साभोनारोला (Girolamao Savonarola, 1452-1498) फलोरेन्सका चर्चमा देखिएका कुरीतिहरू जनसमक्ष प्रस्तुत गरे । यिनको भनाईमा दैवी प्रेरणाले गर्दा यिनलाई मानव नियन्त्रणबाट मुक्त पारेको छ

। यिनको विचरा कडा भाषामा प्रयोग हुन्थ्यो । यिनको व्याख्याबाट इसाई प्रमुख पोप एलेक्जेण्डर चौँथो अत्यन्त क्रुद्ध र यिनलाई क्रसमा भुण्ड्याएर जलाइयो ।

४.डेसिडेरस इरासमस (Desiderius Erasmus) : डेसिडेरस इरासमस प्रसिद्ध डच विद्वान् थिए । यिनको विद्धता र वौद्धिकताले गर्दा सम्पूर्ण युरोप नतमस्तक थियो । यिनले चर्चको भ्रष्टता र दुराचारको विरोध गरेका थिए । उनीमाथि पनि तात्कालिक पोपहरू क्रुद्ध भएका थिए ।

५.मार्टिन लुथर : सन् १४८३ मा जर्मनीको आइलवेनमा जन्मेका लुथरले क्याथोलिक धर्मको विरोध (Protest) गरेको हुनाले यिनले चलाएको धर्म वा अनुयायीरूलाई प्रोस्टेन्ट (Protestant)भनियो । यिनको कारण नै रोम, जर्मनलगायत अन्य युरोपियन देशहरू युद्धमा होमिए । रोमन क्याथोलिक र प्रोटेस्टेन्टको युद्धमा हजारौँ मानिस मारिए ।

६.उलरिच ज्विङ्गली (Ulrich Zwingli 1484-1531) : सन् १४८४ मा स्वीट्जरल्याण्डमा जन्मेका उलरिच ज्विङ्गली क्याथोलिक धर्ममा देखिएको अनियमितताबाट स्वतन्त्र चर्च स्थापना गरे । सन् १५३१ मा प्रोटेस्टेन्ट र क्याथोलिकबीचमा भएको युद्धमा प्रोटेस्टेन्टहरू युद्धमा यिनी मारिए ।

७.जोन (John Valvin, 1509-1564) : सन १६०९ मा जोन कालविनको जन्म फ्रान्सको पिकार्डीमा भएको थियो । यिनी युवा अवस्थामा ज्यादै प्रतिभाशाली थिए । यिनले बास्लेमा प्रोटेस्टेन्ट धर्मका पक्षामा लोकप्रिय विज्ञप्ती प्रसारित गरे । यस विज्ञप्तीले गर्दा स्वीट्जरल्याण्डमा धार्मिक भुइँचालो आयो । यिनको कारण स्केटल्याण्डमा क्याथोलिक रानी मेरीको विरुद्ध आन्दोलन भयो । फ्रान्स, डच गणतन्त्रमा पनि आन्दोलन भयो । फ्रान्स, डच गणतन्त्रमा पनि आन्दोलन भयो ।

८. राजा हेनरी अष्टम : वेलायतको राजा हेनरी अष्टम आफ्नी रानी क्याथरिनलाई पारपाचुके गरेर दरवारकी सुसारे एन बालेनसँग विवाह गर्न चाहन्थे । वेलायती संसद्ले राजाको पक्षमा अनेक पारपाचुके गर्न पोपलाई दबाव दियो । तर पोपले यस्तो घृणित कार्यलाई अस्वीकार गरिदिएपछि वेलायतको संसदले सर्वोच्चताको विधेयक पास गराए । उनीहरूले राजालाई चर्चका एक मात्र सर्वोच्च प्रमुख घोषित गऱ्यो । हेनरी अष्टमले आफ्नो समयमा प्रोटेस्टेन्टधर्मको व्यापक प्रचारप्रसार गरे । उनको शासनकालपछि रानी मेरीको शासनकालमा क्याथोलिक धर्मलाई पुनर्जीवित गरियो । यो समयमा रोमन क्याथोलिक र प्रोटेस्टेन्टधर्मको कारण सयौं मानिसहरू जिउँदै जलाइएको थियो ।

९. सम्राट् फर्डियन द्वितीय (रोम सम्राट्) : सन् १६१८ देखि १६४८ सम्म प्रोटेस्टेन्टधर्म र क्याथोलिकहरूबीच भएको युद्धमा धेरै इसाईहरू मारिए । सन् १६४८ मा भएको वेस्ट फेलियाको सन्धिपछि युद्ध टुङ्गिए तापनि एकले अर्कोलाई शैतान भन्ने कार्य आजको दिनसम्म चर्चभित्र देखिन्छ ।

१०. रोमन क्याथोलिक र अर्थोडक्स मण्डलीको विभिन्न प्रकारको मूर्तिहरूको प्रयोग गर्न, बहुधर्मवादको सिद्धान्त अँगालको कारण उनीहरू शैतान हो भनी आफ्नो विचार प्रस्तुत गरेका छन् । ( धर्महरूको इतिहास पृ. १२४, डा. थोमस ह्वाङ) ।

११. रोमन क्याथोलिक मण्डलीले परमेश्वरसमक्ष मध्यस्तता गरिदिनको निम्ति मरियम तथा सन्तहरूसँग प्रार्थना गर्ने, एक्स क्याथेडिरा (पोपको कुर्चीबाट) बोल्छन् । यो सन्नाले नियामक हुने विश्वास गर्ने हुँदा यी झुटा मण्डली छन् । (इसाई मतको प्रतिरक्षा मण्डलीको इतिहास र आत्मिक युद्ध-सन् २०११, डा. वटर हेन्री ओर्सलर) ।

१२. शेतेकारवद्वारा लिखित धर्मको इतिहास पृ. ३०७ पल्टाउँदा "पहिलेदेखि नै यी ख्रीष्टीयनसम्प्रदायहरूबीच प्रायः शत्रुता देखिने गर्दछ । धर्मले मानिसहरूको हृदय परिवर्तन बनाई सामाजिक सद्भावलाई कायम राख्नुपर्ने थियो । मानिसलाई सन्मार्गमा हिडाउनुपर्ने थियो । क्याथोलिक र प्रोटेण्डबीच सधैं शत्रुताको व्यवहार हुँदै आएको छ । एकले अर्कालाई सिध्याउने र वद्नाम गराउने कसरत भएको पाइन्छ ।

# बाइबलभित्र परस्पर विरोधी कुराहरू

पश्चिममा फैलिएको खीष्टीयन धर्म, दर्शन, संस्कार र संस्कृतिको मूल ग्रन्थ बाइबल हो । जुन ग्रन्थ परमेश्वरको अनुग्रह पाएका फरक फरक व्यक्तिद्वारा लेखिएको विश्वास गरिन्छ । स्मरण रहोस्, खीष्टीयन जगत्मा बाइबललाई एक पूर्ण ग्रन्थको रूपमा लिइन्छ । तर यस्तो ग्रन्थमा परस्पर विरोधी कुरा लेखिनुचाहिँ बाइबलीय सत्यता र पूर्णतामाथि प्रश्न चिन्ह खडा हुन्छ । बाइबलमा भएका यी प्रसङ्गहरूले यहोवाको क्षमता र सामर्थ्यमाथि प्रश्न चिन्ह खडा गरिदिन्छ । बाइबलमा भएका यी प्रसङ्गहरूले उब्जाएका आशंकालाई खोजकले परमेश्वरको अदालतमा पेश गर्ने जमर्को गरेको छ ।

१. येशूले मरेकीलाई बचाएको हो कि मर्न लागेकीलाई ?

"मेरी छोरी भर्खरै मरेकी छ । तर आइकन त्यसमाथि आफ्नो हात राखिदिनुस् र त्यो बाँच्नेछ ।" मत्ती ९:१८ ।

"मेरी सानी छोरी मर्न लागेकी छ, दया गरी ऊ निको होस् र बाँचोस् भनी आईकन तपाईंको हात उमाथि राखिदिनुस् ।"मर्कुस ५/२३ यस्ता विवादस्पद कुराहरूले धर्म ग्रन्थलाई हाँस्यास्पद किताब बनाइदिएको छ ।

२. रूख तत्काल सुक्यो कि रातभरि लागेर सुक्यो ?

अबदेखि तैँले फेरि फल नफलाउनु । त्यो रूख तुरुन्तै सुक्यो ।" मत्ति २१:१९ फेरि,

"विहान उहाँहरू जानुहुँदै गर्दा तिनीहरूले त्यस नेभाराको रूखलाई जरैदेखि सुकेको देखे । पत्रुसले सम्फेर येशूलाई भने, "हे गुरु ! हेर्नुहोस्, तपाईंले सराप्नुभएको नेभाराको रूख सुकेछ ।" मर्कुस ११:२०-२१

३. कुन वचन सत्य हो ?

"यदि मैले आफ्नै विषयमा साक्षी दिएँ भने त मेरो साक्षी मान्य हुँदैन ।"- यहुन्ना ५:३१

येशूले जवाफ दिनुभयो, "मैले आफ्नै विषयमा साक्षी दिए तापनि मेरो साक्षी सत्य ठहर्छ किनकि म कहाँबाट आएको हूँ र कहाँ जाँदैछु सो म जान्दछु । तर म कहाँबाट आएको हूँ र कहाँ जाँदैछु भन्ने तिमीहरू जान्दैनौ ।" यहुन्ना ८:१४

४. यहुदा मरेको कसरी हो ?

"यसकारण यहुदाले त्यो पैसा मन्दिरमा फ्याँकिदियो र बाहिर निस्कियो । तब ऊ गएर आफैँलाई झुण्ड्यायो ।" मत्ती २७:५

फेरि,

आफ्नो दुष्टतापूर्ण कामका निम्ति पाएको इनामबाट यहुदाले एउटा खेत किन्यो । त्यहाँ त्यो उँधोमुन्टो भएर खस्यो र त्यसको भुँडी फुट्यो अनि त्यसका सबै आन्द्राभुँडी बाहिर छरपष्ट भए ।" प्रेरित १:१८

५. लठ्ठी बोक भनेको हो कि नबोक भनेको हो ?

मत्ती १०:१० लुका ९:३ यात्राको दौरानमा येशूले १२ जना चेलालाई भन्नुभयो कि लठ्ठी नबोक्नु ।

तर मर्कुस ६:८ मा येशूले भनेका छन्, लठ्ठीबाहेक अरू नबोक्नु अर्थात् लठ्ठी बोक्नु ।

६. पृथ्वी सदासर्वदाको निम्ति बनाउनु भयो कि केही समयका लागि ?

भजनसंग्रह (७८:६९) "परमेश्वरले त्यो उच्च पर्वतमा आफ्नो मन्दिर बनाउनुभयो । परमेश्वरले आफ्नो पवित्र मन्दिर पृथ्वीझैँ सदा सर्वदाको निम्ति बनाउनुभयो ।"

त्यस्तै (१०४:५) "हे परमेश्वर, तपाईंले यसको आधारमा पृथ्वी बनाउनुभयो, यसैले यो ध्वंस हुने छैन ।"

तर भजन, १०२:२६ "संसार र यो आकाश समाप्त होला तर तपाईं सदा सर्वदा रहिरहनुहुनेछ ।

मत्ती ५:१८, २४:३५, मर्कुस १३:३१) मा त प्रष्ट रूपमा स्वर्ग (आकाश) र पृथ्वी वितेर जानेछन् भनेको छ त ।

७. परमेश्वरको नियम पर्फेक्ट (पूर्ण) छ कि छैन ? (पुरानो नियम अपूर्ण देखियो)

भजनसंग्रह (१८:३०) अनुसार "परमप्रभूको मार्ग सिद्ध छ र उहाँको वचन सच्चा छ । "

फेरि,
१९:७ अनुसार "परमप्रभूको व्यवस्था सिद्ध (पफेक्ट, पूर्ण) छ ।"
तर हिब्रू, (८:६, ७) अनुसार "तर जुन करारको मध्यस्थ उहाँ हुनुहुन्छ त्यो करार पुरानो करारभन्दा उच्चदर्जाको भएझैँ..... र "किनकि यदि त्यस पहिलो करारमा केही भुल नभएको भएता अर्को करारका लागि कुनै ठाउँको खाँचो हुने थिएन ।"
८. के यहोवा थाक्छ ?
यशैया, (४०:२८) अनुसार, "परमप्रभू थाक्नुहुन्न र आरामको खाँचो पर्दैन ।"
तर,
यशैया, (४३:२४) अनुसार "तर तिमीहरूले मलाई आफ्नो पापको भारी बोकायौ । तिमीहरूले त्यतिञ्जेल पाप गऱ्यौ जबसम्म म तिमीहरूका नराम्रा कुराहरूले अत्यन्त कमजोर भएँ (अर्थात् थाकेँ) ।" त्यस्तै,
यशैयाा (१:१४) अनुसार, "अनि म ती भारीहरू बोकेर थाकिसकेको छु ।"
फेरि यर्मिया (१५:६) अनुसार "तिमीलाई दया देखाउँदा देखाउँदा म थाकिसकेँ ।"
९. यहोवा र शैतान एक कि बाइबलका वचन झुट ?
मर्कुस (९:१७, २५) "भीडबाट एक जना मानिसले जवाफ दियो, "हे गुरु ! मैले तपाईंकहाँ मेरो छोरा लिएर आएँ जसलाई दुष्टात्मा लागेको छ अनि त्यसले उसको बोली नै लगिदिएको छ ।"
जब येशूले त्यस ठाउँमा एउटा भिड आइरहेको देख्नुभयो । उहाँले त्यस दुष्टात्मालाई यसो भनेर हर्कानुभयो, "तँ बहिरो र लाटो आत्मा म तँलाई त्यसबाट बाहिर आइज अनि त्यसमा फेरि कहिल्यै नपस् भनी आज्ञा दिन्छु ।"

यसरी पवित्र बाइबलमा बहिरो र लाटो हुने भनेको दुष्टात्मा लागेर हो भनी पूर्णतया अवैज्ञानिक र अन्धविश्वासयुक्त कुरा राख्नुले परमेश्वरको महिमा घटाइदिएको छ ।
फेरि,
येशूले जन्मैको अन्धालाई दृष्टि दिएको प्रसङ्ग यहुन्ना (९:१,२,३) "त्यहाँबाट जाँदै गर्नुहुँदा येशूले एउटा जन्मैको अन्धालाई देख्नुभयो । उहाँका चेलाहरूले उहाँलाई सोधे, "गुरुज्यू ! कसले पाप गऱ्यो, यो मानिसले कि यसका आमा

बाबुले जसबाट यो अन्धो जन्म्यो ?" येशूले भन्नुभयो, "न त कसैले, न यसका आमाबाबुले पाप गरे, तर यसको जीवनमा परमेश्वरको काम प्रकट होस् भन्ने हेतुले यसो भएको हो ।"

त्यस वचनमा चाहिँ दुष्टात्मा लागेर भनिएको छ भनेर यस वचनमा चाहिँ परमेश्वरको महिमाका लागि भनिएको छ । कुन सत्य हो ? त्यस्तै पुरानो करारको प्रस्थान ४:११ मा पनि भनिएको छ कि, त्यसपछि परमप्रभू मोशालाई भन्नुभयो, "मानिसको मुख कसले बनायो ? अनि मानिसलाई कसरी बहिरो, बोल्न नसक्ने बनाउन सक्छ ? कसले मानिसलाई अन्धो बनाउन सक्छ ? त्यो म नै एक हूँ जसले यी कर्महरू गर्न सक्छ । म यहोवा हूँ ।"

ल अब अलिकति विचार गरौँ त, एकातिर बाइबलको परमेश्वर यहोवा भन्छ कि अन्धो लाटो, बहिरो बनाउने सामर्थ्य केवल उसमा मात्र छ अनि अर्कोतिर नयाँ करारले भन्छ कि त्यो काम शैतानको हो भनेर । कुन सत्य हो ? यसको सिधा अर्थ त यही हो कि यहोवा र शैतान एक नै हो । होइन भने यहोवाले मात्र गर्न सक्ने काम शैतानले पनि कसरी गर्न सक्यो त ?

# बाइबल र ट्रिनिटी

विश्व प्रसिद्ध प्रोष्टेण्टेड रेभ तथा लेखक डा. हेन्री ओर्सलर, डाक्टर ग्रेग कप्पास तथा रेभ. जरेद नेल्स्‌ले "इसाईमतको प्रतिरक्षा मण्डलीको इतिहास आत्मिक युद्ध" नामक पुस्तक (पृष्ठ नं. ८५) मा त्रित्व भन्ने शब्द बाइबलमा नभएको स्वीकार गरेका छन् । येशूले आफू परमेश्वर हूँ भनी कहिल्यै दाबी गर्नुभएन । आफू प्रतिज्ञा गरिएका मसीह अर्थात् ख्रीष्ट हूँ भनी उहाँले स्वीकार्नुभयो । साथै उहाँले आफूलाई परमेश्वर होइन तर "परमेश्वरको छोरा"को रूपमा चिनाउनुभयो ।" (सबैभन्दा महान् पुरुष-२०११ ई.सं. यहोवा साक्षी ।)

यहोवा र येशूमाथि विश्वास गर्ने यहोवाका साक्षीहरू येशू एउटा महान् ईश्वर भएको तर यहोवा बराबरी नभएको विश्वास गर्छन् । साथै उनीहरू त्रिएक सिद्धान्त शैतानले थालेको भनी विश्वास गर्छन् । (इसाईमतको प्रतिरक्षा मण्डलीको इतिहास आत्मिक-२०११, पृष्ठ नं. ८४. युद्ध, डा. हेन्री ओर्सलर, डाक्टर ग्रेग कप्पास तथा रेभ. जरेद नेल्स् ।)

ट्रिनिटी भन्नाले पिता, पुत्र र पवित्र आत्माको एकत्व हो भनेर इसाईहरू मान्दछन् । यद्यपि बाइबलमा कतै ट्रिनिटी भन्ने शब्द छैन तर कतिपय यस्ता पदहरू छन् जसले ट्रिनिटीलाई सम्बोधित गर्छन् । जस्तै मत्ती (२८:१९, २), कोरिन्थी  (१३.१४, १ यहुन्ना-५:७) बाइबलमा पिता, पुत्र र पवित्र आत्माको कुरा आएको छ तर कतै पनि यी तीन व्यक्तित्वलाई एकै हो भनेर भनिएको छैन । मुख्य गरी ४ वटा गोस्पेल (सुसमाचार) मा कतै पनि येशूले आफू, पिता र पवित्र आत्मा एकै भएको कुरा गरेकै छैनन् । केवल तिनीहरूको नाममात्र उल्लेख छ, एकत्वको प्रमाण छैन । यो त इसाई मिसनरी हो जसले बाइबलका पदहरूको गलत व्याख्या गर्दैसोझासाझा जनहरूलाई बेवकुफ बनाउँदै आएको छ । विश्वकै ठूलाठूला इसाई विद्यार्थीहरूले पनि ट्रिनिटीलाई गलत हो भनेर प्रमाणसहित प्रमाणित गरेको उल्लेख

गरिन्छ । ("www.jw.org, बाइबलले वास्तवमा के सिकाउँछ, यहोवाका साक्षी/विज्ञानको नजरमा वेद र बाइबल"सुरेन्द्र गौतम/नवराज पनेरु) । यो ट्रिनिटी भन्ने शब्द मुश्लिम धर्मग्रन्थ कुरानमा भने दुई ठाउँमा आएको छ । तर यसलाई अस्वीकार गरेर आएको छ ।

"ट्रिनीटी शब्द निकाल्दै ननिकाल ।"सुरा निसा ४।१७१

"जसले यो भन्छ कि अल्लाह तीन (ट्रिनिटी) मा एक हुन् ती सब काफिर हुन् ।" सुरा माइदा ५।७३

बाइबलमा ट्रिनिटीसँग सम्बन्धित श्लोकहरू त छन् तर ट्रिनिटी भन्ने शब्द कहीँ कतै छैन । तर पनि बाइबलमा यस्तो एउटा श्लोक छ जो ट्रिनिटीको अत्यन्त नजिक छ । बाइबलको किङ्ग जेम्स भर्जन (King james version, 1611) को १ यहुन्ना ५/७ जहाँ लेखिएको छ कि for there are three that bear record in heaven, the father, the world and the holy ghost: and these three are one." अर्थात्, साक्षी दिनेहरू तीन छन् पिता, पुत्र र पवित्र आत्मा, यी तीन एकै हुन् ।

विश्वका सबैभन्दा ठूला-ठूला ३२ जनाहरूद्वारा निकालिएको भर्जन हो । यसलाई ठीक त्यस्तै अरु ५० वटा इसाई संगठनहरूको पनि समर्थन प्राप्त छ । यी ३२ जना इसाई संगठन प्रमुखहरूको भेलाले भन्यो कि "बाइबलको त्यो किङ जेम्स भर्जनले भनेझैँ येशू, पिता र पवित्र आत्मा एकै हो भन्नु मूर्खता हो । त्यो श्लोक भनेको Interpolation (पछि थपिएको) हो, Fabrication (मनगढन्ते) हो, Concoction (मिक्स गरिएको) हो र Corruption (भ्रष्ट) हो । ३२ जना इसाईले किङ्ग जेम्स भर्जन को यहुन्ना ३:१६ मा भएको begotten भन्ने शब्दलाई पनि झिकेर फालिदिएका छन् । उनीहरूले यो पनि भने कि त्यो शब्द पनि पछि थपिएको हो र मनगढन्ते हो ।" (विज्ञानको नजरमा वेद र बाइबल, विद्यार्थी २०७३, सुरेन्द्र गौतम/नवराज पनेरु)

इस्लामको धर्मग्रन्थ कुरानले येशूलाई परमेश्वर होइन एउटा दूतमात्र मानेको छ -"येशूको हालत अल्लाहको छेउ आदमको जस्तै छ, जसलाई माटोले तयार गरी आदेश गरे कि तत्काल भइहाल । अनि ऊ मानव भइहाल्यो ।" सुरा-इम्रान ३:५९

- "र त्यो समय पनि वर्णन योग्य छ जब अल्लाहले भन्नेछ, "हे इसाबिन मरियम ! के तिमीले मानिसहरूसित भनेका थियौ कि अल्लाहबाहेक मलाई र मेरी आमालाई पूज्य बनाइहाल ?"

येशूले भन्नेछन् कि "तिमी पवित्र छौ । मलाई त्यो कुरो भन्न कसरी उचित हुन्थ्यो, जुन कुराको मलाई कुनै अधिकार छैन ? मैले त्यसो भनेको भए तिमीलाई थाहा होला किनभने जुन कुरो मेरो मनमा छ त्यो पनि तिमीलाई थाहा छ । जुन कुरो तिम्रो मनमा छ त्यो कुरो मलाई थाहा छैन । निसन्देह तिमी सबै गुप्त कुराको ज्ञाता हौ ।"सुरा-माइदा ५/११६

- "मैले त तिनीहरूसित अरु केही पनि भनेको होइन तर त्योबाहेक जुन कि तिमीले मलाई भन्न आदेश गऱ्यौं यो कि तिमीहरूले अल्लाहको उपासना गर, जो मेरो र तिम्रो सबैको पालनकर्ता हो । जबसम्म म तिनीहरूको बीचमा थिएँ । तिनीहरूको अवस्थाको साक्षी थिएँ ।" सुरा-माइदा (५/११७) ।

- "बच्चाले (येशूले) तुरुन्त बोल्यो कि म अल्लाहको सेवक हूँ उसले मलाई ग्रन्थ प्रदान गरेको छ र मलाई आफ्नो सन्देष्टा बनाएको छ ।"सुरा-मरियम, (१९/३०) ।

- "मरियमको छोरा इसामसिह न त अल्लाह थिए, न त अल्लाहका छोरा थिए । बरु अल्लाहको रसुल मात्र थिए । उनको पवित्र सन्देशवाहक (दूत) थिए ।"सुरा-निसा (४/१७१) ।

१. "भन्दा मेरो पिता (परमेश्वर) नै महान् हुनुहुन्छ ।" यहुन्ना, (१४:२८) ।
२. "मेरो पिता सबैभन्दा ठूलो हुनुहुन्छ ।" यहुन्ना, (१०:२९) ।
३. "म परमेश्वरको आत्माद्वारा भूतहरू धपाउँछु ।" मत्ती (१२:२९) ।
४. "म परमेश्वरको औंलाले भूतहरू धपाउँछु ।" लुका (११:२०) ।
५. "म आफैं केही पनि गर्न सक्दिनँ । म जे सुन्छु त्यहीअनुसार न्याय गर्छु । अनि मेरो न्याय उचित छ किनकि म आफ्नो होइन तर मलाई पठाउनुहुनेको इच्छा खोज्छु ।" यहुन्ना (५:३०) ।
६. "किनकि मैले आफ्नो विचारले बोलिनँ तर मलाई पठाउनुहुने पिताले नै के बोल्ने र कसरी बोल्ने भनी मलाई आज्ञा दिनुभयो ।" यहुन्ना (१२:४९)
७. "म जे भन्छु ती सबै मलाई मेरो पिताले (परमेश्वर) नै भन्न लगाएका हुन् ।" यहुन्ना (१२:५०)

८. "अनि स्वर्गबाट एउटा आवाजले यसो भन्यो, ।"यिनी मेरो पुत्र हुन् जसलाई म अति प्रेम गर्छु, यिनीसित म अति प्रसन्न छु ।" मत्ती (३:१७)
९. "त्यस दिन र घडीको विषयमा कसैले जान्दैन, न स्वर्गका दूतहरूले, न त पुत्र (येशू)ले तर पिताले मात्र ।" मत्ति, (२४:३६)
११. येशूले भन्नुभयो, "इलोइ इलोइ लामा सबखथनी ? "हे मेरो परमेश्वर १ हे मेरो परमेश्वर ! तपाईले मलाई किन त्याग्नुभयो ?" मत्ती (२७:४६)
१२. "मेरो पिताको घरलाई बजार तुल्याउने कत्रो हिम्मत ?" -यहुन्ना ( २:१६)
१३. "हे इस्राएलका मानिस हो । यो कुरा राम्रोसँग बुझ्नुहोस्, नासरतका येशू यस्तो मानिस हुनुहुन्थ्यो जसलाई तपाईहरूका सामु परमेश्वरले शक्तिशाली, आश्चर्य कर्महरू र चिह्नहरूद्वारा प्रमाणित गर्नुभयो । तपाईहरू सबैले जानकै कुरा हो, तपाईहरूका बीचमा यी कामहरू परमेश्वर उहाँद्वारा गराउनुभएको हो । "प्रेरित (२:२२)
१४. "किनकि एउटै परमेश्वर अनि परमेश्वर र मानिसहरूको बीचमा एउटै मध्यस्थ हुनुहुन्छ अर्थात् ख्रीष्टयेशू जो एक मानिस हुनुहुन्छ ।" तिमोथी, (२:५)
"परमेश्वर मानिस हुनुहुन्न, यसर्थ उहाँ मर्नुहुन्न, परमेश्वर मानव हुनुहुन्न । "गन्ती (२३:१९) ।
१५. "किनकि मेरो इच्छा पुरा गर्नलाई म स्वर्गबाट ओर्ली आएको होइन तर मलाई पठाउनुहुनेको (परमेश्वरको) इच्छा पुरा गर्न आएको हूँ ।" यहुन्ना (६:३८) ।
१६. "के तपाईहरूलाई म पितामा छु र पिता ममा हुनुहुन्छ भनेर विश्वास छैन ? मैले तिमीहरूलाई भनेका यी वचनहरू मेरा आफ्नै होइनन् । वास्तवमा ममा हुनुहुने मेरो पिताले आफ्नो काम गर्दै हुनुहुन्छ ।" यहुन्ना (१४:१०) ।

पवित्र बाइबलमा बताइएका यी वचनहरूबाट येशू र यहोवा फरक-फरक भएको देखिएको कारण परमेश्वरको अदालतमा बाइबलमा त्रिएकसम्बन्धी स्पष्ट शब्द राखियोस् भनी प्रमाण पेश गरेको छु ।

# कसरी बन्छन् महाप्रेत

मृत्यु समय अगावै देहत्याग गर्दा भड्किएको आत्मालाई प्रेत भनिन्छ । प्रकर्षेण इतः प्रेत अर्थात् मर्नलाई अति इच्छा गरी मृत्युवरण गर्ने लाई प्रेतात्मा भनिन्छ यसले मृत्यु पछि धेरैलाई दु:ख दिन्छ । आफैं आत्महत्या गर्नु, फाँसी वा सुली चढाएर मारिन्छ, अचानक दुर्घटनामा पर्दा पनि प्रेत बन्छ । प्रेतलाई पूजा गर्दा छोटो समयका लागि धन, मान र यश ...... हुन्छ तर दीर्घकालमा त्यसले सर्वनाश निम्त्याउँछ । प्रेतको बारेमा विभिन्न भनाई निम्नानुसार छन् ।

जीवात्माबाट निस्किएको भड्किएको आत्मा (प्रेत) आफ्नो पितृलोकमा पुग्न नसकिएको स्थितिमा क्रिस्तानका जिसस क्राइस्ट रहेका छन् । प्रेतको भड्किएको आत्माका लागि 'प्रे' गरिन्छ । नेपालमा पनि क्रिस्तानहरूले 'प्रे' गरेकै बेला वि.सं. २०७२ बैशाख १२ गते शनिवार दिउँसो भूकम्पबाट उनीहरूको निधन भयो । यसरी मृत्यु भएका क्रिस्तानहरू जिसस क्राइस्टजस्तै प्रेत भएको विश्वास गरिएको पाइन्छ । (नेपालमा इसाईको चलखेल-२०७२ शास्त्रदत्त पन्त) ।

"झुण्डिएर मरेका र आत्महत्या गरेकाहरूको आत्मा महाप्रेतलोक जानेछ । उक्त आत्मा प्रेतलोक जानेछ तर उसको नाममा उसको शिष्य प्रेतात्माले हजारौं वर्षसम्म अन्य भूतात्माहरू बाहिर निकाल्न सक्नेछन् ।" २५०० वर्षपूर्व बौद्धभिक्षुहरूले बौद्ध ज्ञानमार्फत यसो भन्ने गरेको पाइन्छ । "यदि कुनै पवित्रजनलाई अकालमा मारियो भने अगति पारियो भने ३ दिनमा उसको अगति परेको आत्मा सेतो कपडा पहिरिएर सशरीर उसका जनहरूको सामु ४० देखि ४९ दिनसम्म रहनेछ । सो अवधि सकिएपछि महाप्रेत लोक जानेछ ।"

झण्डै ५००० वर्षपूर्व उपनिषद्ले बोल्यो, "अगति परेका मानिसलाई तार्न वेद मन्त्र जप्नुपर्छ, त्यसैले त मानिस मरेको ४५ दिनसम्म वरखी बार्ने र चोखोनिधो गर्ने चलन छ ।"

राजा परिक्षितलाई ५३०० वर्षपूर्व सर्पले टोकेर मार्ने श्राप पाएपछि उनलाई अगति पर्नबाट बचाउन सात दिनसम्म भागवतमहापुराण र वेदमन्त्र वाचन गरियो । अर्कोतिर धुन्धुकारीलाई मृत्युपछि उद्धार गर्न वेद मन्त्रको साथमा भागवत लगाइयो । २१०० वर्षअगाडि मनाङमा अवस्थित निसाङ्क तियाफुग नाम गुफामा विश्व शान्ति र पितृ उद्धार बौद्ध दीप प्रज्ज्वलन र बौद्ध मन्त्र जपी १००८ अगति परेका आत्मालाई महाप्रेत लोकबाट छुट्कारा दिलाइएको थियो । (मगर जातिको इतिहास र संस्कृति-२०७३ शमसेरबहादुर आलेमगर) ।

प्रेतहरूको उद्धार कार्यको सन्दर्भमा हिन्दू जागरण नेपालको अध्यक्ष रामकृष्ण भन्दछन् "१९१२ बैशाख बौद्ध पूर्णिमाको दिन गोरखा र तिब्बती बौद्ध भिक्षुद्वारा महाप्रेतको राजालाई महाप्रेत लोकबाट निकाल्न नुव्रि (हिनङ) मा बौद्धदीप प्रज्ज्वलन गरेका थिए । गोरखाको रानी वनमा हिन्दू ब्राह्मण र बौद्ध लामाद्वारा सात दिनसम्म बौद्ध र वेद मन्त्र जप गरेका थिए । गोरखा, फर्पिङ्ग, बद्रि, मुक्तिनाथमा एकै समय पारेर महाप्रेतको राजालाई महाप्रेतलोकबाट छुटाउन वेदमन्त्र र बौद्धमन्त्र जप गरिएको थियो । यसरी बौद्ध भिक्षु र हिन्दू ब्राह्मणद्वारा गरिएको कर्मको कारण महाप्रेतको राजा प्रेतलोकबाट छुट्कारा भइसकेको र बुद्ध परिवारमा जन्म लिइसकेको जनविश्वास छ ।"

यी माथिका कथनहरूलाई आधार मान्ने हो भने धार्मिकजनहरू पवित्र मानिसहरूलाई झुण्डयाएर मारिएमा, सर्पले टोकेर मरेमा, अन्य कारणवश मरेमा ऊ अगति पर्नेछ । अगति परेका जनहरूविना वेद र बौद्धमन्त्र उद्धार हुन नसक्ने जनविश्वास देखिन्छ । यस्ता व्यक्तिहरूद्वारा पृथ्वीको अन्त नहुँदासम्म चामत्कारिक कार्यहरू भइरहने प्रष्ट हुन्छ । यस्ता व्यक्तिका अनुयायीहरू महाप्रेतको नाममा आश्चर्यका कार्यहरू गर्दै धर्मको आड लिएर व्यापार सञ्चालन गर्नेछन् भन्ने तथ्य सत्यलाई उजागर गरी धार्मिक सद्भाव र शान्ति ल्याउनु धार्मिकजनको कर्तव्य हुन आउँछ ।

प्रेतात्मको उद्धार कार्यको शुरुवातको सन्दर्भमा बौद्धभिक्षु, बौद्धधर्मका विश्वशान्ति चक्र संघ स्थापना गर्नु महासंघ नायक ज्ञान सागर रिम्पोछ भन्छन् "२१०० वर्षअगाडि मनाङमा अवस्थित तिसाङ्क तियाफुग नामक

गुफा विश्व शान्ति र पितृ उद्धार कार्यबाट १००८ अगति परेका आत्मालाई शुद्ध गरियो ।"

उनका अनुसार "१९१२ बैशाख बुद्धपूर्णिमाको दिन गोरखा र तिब्बती बौद्ध (हिनाङ) मा बौद्ध दीप प्रज्वलन गरेका थिए । गोरखाको रानीवनमा हिन्दू ब्राह्मण र बौद्ध लामाद्वारा सात दिनसम्म बौद्ध र वेद मन्त्र जप गरेका थिए । फर्पिङ्ग, गोरखा, नुविमा एकै समय पारेर प्रेतआत्मालाई प्रेतलोकबाट छुटाउन वेद मन्त्र जप गरिएको थियो । यसरी बौद्धभिक्षु र हिन्दूब्राह्मणद्वारा गरिएको कर्मको कारण हजारौं प्रेतहरू प्रेतलोकबाट छुट्कारा भइसकेको आध्यात्मिक ज्ञान चर्चा गर्नु आजको आवश्यकता हो ।"

त्यस्तै २०७३ साल श्रावण १५ गते पूर्वी चितवनको कालिका नगरपालिका, कमलचोक स्थित ढोकुन थार्वालिङ्ग बौद्ध गुम्बाद्वारा आयोजित कार्यक्रममा लामा गुरूहरू र श्रीराम वैदिक संस्कृत गुरूकुलका ब्राह्मणहरूले वेद र त्रिपिटकका पाठ गर्नुका साथै विश्वशान्ति स्वस्ति शान्तिको समेत कामना गर्दै पाठ गरेका थिए ।

सन् २०१७ मा पवित्र देवघाट क्षेत्र नारायणीतटमा बौद्ध लामा र हिन्दूब्राह्मणद्वारा यसरी बौद्ध लामा र हिन्दू ब्राह्मणहरूद्वारा गरिएको महायज्ञद्वारा प्रेतलोक प्रेतहरूको उद्धार भइसकेको छ । नेपालमा गणतन्त्रको स्थापना भएसँगै पशुपति कैलाश क्षेत्रमा पितृ उद्धारको लागि यज्ञ गरेको पाइन्छ । भारतका विभिन्न क्षेत्रहरूमा अहिले पनि तन्त्र विधिबाट प्रेतआत्मालाई उद्धार गर्ने काम भइरहेको छ ।

# यसोफ परमेश्वरको बुबा कसरी बने ?

बेथलेहममा यसोफ नाम गरेका उच्च महत्वकांक्षी व्यक्ति थिए । उनी आफ्नो बच्चालाई परमेश्वरको दर्जा दिन चाहन्थे तर उनी गरीब थिए । एकदिन उनले एकजना ज्योतिषीलाई विनम्रपूर्वक अनुरोध गरेर भने, आफ्नो पहिलो सन्तानलाई ईश्वरको उपाधि दिने उपाय बताइदिनुहोस् । ज्योतिषीले भने ठीक छ, मैले भने मुताविक काम गर्छौ भने तिमीलाई म तिम्रो पहिलो सन्तानलाई तिमीले भनेजस्तै परमेश्वरको दर्जा पाउने बाटो बताइदिन्छु । त्यसपछि यसोफले भने, "हे गुरु !, हे अगमवक्ता !, तपाईं जे भन्नुहुन्छ म सोही गर्न तयार छु ।"

तब ज्योतिषीले भने, "जससँग तिमीले विवाह गर्न मन छ, उसलाई विवाहपूर्व नै गर्भवती बनाऊनू वा गर्भधारण गरेको कुमारी कन्यासित मगनी गर्नू किनकि बाइबलमा एउटा कुमारी कन्याद्वारा ईश्वरपुत्र जन्मन्छ भनेर लेखेको छ । त्यो तिमीले पूरा गर्नुपर्छ । म राजा हिरोदलाई डराइदिन उनको मनमा डर पसाइदिन तिम्रो बच्चा जन्मेपछि पूर्वबाट ज्योतिषीहरूलाई पठाइदिनेछु, अनि तिम्रो बच्चाको बालमस्तिष्कमा शुरूका केही वर्षमा नै ईश्वरीय ज्ञान र विद्रोही स्वभाव भरिदिनुपर्छ ।"

यसोफ पनि जो आज्ञा भनी बिदा भए । यसोफले त्यही गरे ज्योतिषीले जे भने । १२ वर्षदेखि ३० वर्षको उमेरसम्म येशू जब वेद, गीता, त्रिपिटकको गहन अध्ययन गरी जम्बुद्वीप खण्डअन्तर्गत काशी, गया, बद्रि, केदार, लुम्बिनी र तिब्बतको हिमोस गुम्बाबाट ध्यानको माध्यमद्वारा ईश्वरको दर्शन गरी आफ्नो देश फर्किए । त्यतिबेला यसोफले येशूका भाइ(मामाका छोरा) र आफन्तहरूसँग येशू परमेश्वरको पुत्र हो भनी चारैतिर हल्ला फैलाए । सबैले उनलाई परमेश्वरको पुत्र भनेर चिनाउन

थाले । हुँदाहुँदै येशू जहाँ गए त्यहाँ उनलाई परमेश्वरको पुत्र भनी जिस्काउँथे । केही समयपछि येशूलाई जहाँ जहाँ देखे । ईश्वरपुत्र ! ईश्वरपुत्र ! भनी चिच्याउँथे । त्यस्तै किसिमले दुई चार दिनमा येशू ईश्वरपुत्रजस्तो सुन्दर पदवीले विभूषित भए । परन्तु मानिसहरूले उनलाई ईश्वरपुत्र भन्न छोडेनन् । यसोफको परमेश्वरको पुत्रको बाबु बन्ने सपना सदाको लागि पूरा भइछोड्यो । यस कथाले हामीलाई के सन्देश दिन्छ भने ईश्वरप्रतिको दृढ विश्वास र संकल्पले हामीलाई ईश्वरसमक्ष पुऱ्याउँछ ।

# इन्साफका चिह्नहरू संसारको अन्त्य

धर्मको दुवाही दिएर समयसमयमा विभिन्न हल्ला पिटाएर मानिसलाई त्रस्त बनाउने गरिन्छ । सन् २०१२ मा पृथ्वी नष्ट हुँदैछ, उपग्रह, तारा, उल्का आदि पृथ्वीमा ठोकिन आउँदैछन् भनेर नेपालमा रहेका प्रोटेष्टेन रोमन क्याथोलिक र सच्चाई (पिता परमेश्वर) नामक मण्डलीहरूले प्रचार गरे । समय-समयमा पनि यस्तै हल्ला धर्मकै नाममा मच्चाइयो । सन् २०१२ मा प्रोटेष्टेन मण्डली र रोमन क्याथोलिक मण्डलीको बाहुल्यता रहेको अष्ट्रेलियन सरकारको तर्फबाट प्रधानमन्त्री जुलिया गिलाडले यसै वर्ष संसार ध्वस्त हुने भनी राष्ट्रको नाममा विज्ञप्ति जारी गरे । नेपालमा रहेका क्याथोलिक, प्रोटेण्टेड, सच्चाई, पिता परमेश्वरजस्ता थुप्रै भुट्टामण्डलीहरूले बाइबलका अगमवाणीअनुसार सन् २०१२ डिसेम्बरमा विश्व ध्वस्त हुन्छ भनी व्यापक प्रचार गरे । उनीहरूले भनेको दिनमा केही घटना नघटेपछि ती धर्मका खोलहरू आफैँ च्यातिएर गए ।

शासक वर्गहरूमा कुनै तागत हुँदैन र प्रजाले मान्दैनन् । शासकले जनताबाट थेग्न नसक्ने कर उठाएर लिने छन् । ठूला नदी, तलाउ, झरनाहरू सुक्ने छन् । शास्त्रहरूले सबै नदीहरू प्रदूषित हुने छन्, अन्तमा पानीको चरम अभाव हुनेछ भनेका छन् । पीपलको पातको टुप्पो जति मसिनो हुन्छ फेदसम्म उस्तै हुन्छ, उर्वरभूमि मरूभुमि बन्दछन्, नदीहरू गहिरिँदै गएर लुप्त हुन्छन्, नैतिकताको नाश हुन्छ, अनि कलियुग चरम अवस्थामा पुग्दछ ।

'सबै जना असत्य बोल्दछन्, पृथ्वीमा धानलगायतका अन्नहरू उत्पन्न हुँदैन, वृक्षहरूमा फल लाग्दैनन् र महिलाहरू सन्तानहीन हुन्छन् ।'

अहिले महिलाहरूमा सन्तान उत्पादन गर्ने क्षमता कम हुँदै गएको मात्र छैन, बच्चा नै नजन्माउने प्रवृति बढ्दै गएको छ । चीन, जर्मन एवम् विकसित राष्ट्रमा महिलाहरूको अवस्था अझ दर्दनाक छ । धर्म पुत्र/पुत्री पाल्ने तर बच्चा नजन्माउने लहर यसरी बढ्दै गयो भने वन्ध्या महिलाको संख्या अत्याधिक नहोला भन्न सकिन्न । आफूले नजन्माएको बच्चा र बुबा-आमाको काखमा नहुर्केका सन्तानबीच भावनात्मक सम्बन्ध स्थायी र आत्मीय हुन सक्दैन । अन्त्यमा आइपुग्दा पारिवारिक सम्बन्धहरू कमजोर हुँदै गएर हरेक सदस्यले एक्लोपन र रिक्तताको मात्र अनुभूत गर्नेछन् । केही वर्षयता समाजमा संयुक्त परिवारबाट एकल परिवारमा रूपान्तरण हुने क्रम बढ्दै गएको देखिन्छ । पूर्णरूपमा एकल परिवार भइसकेको पनि छैन र पारिवारिक सदस्यबीच आत्मीयता देखिएका कारण पनि यो युग समाप्त तुरुन्तै हुँदैन । बाइबलमा भनिएको छ, "परमेश्वरको क्रोधको कचौरा पृथ्वीमाथि खन्याइनेछ ।"

सात स्वर्गदूतमार्फत पालै-पालो क्रोध खन्याउने कार्य हुनेछ । सातौं स्वर्गदूतले आफ्नो क्रोधको कचौरा हावामा खन्याएपछि मन्दिरको सिंहासनमाबाट यसो भनी एउटा चर्को आवाज निस्कनेछ 'अब सिद्धियो' । तब विजुली चम्कनेछ, आवाजहरू र मेघहरू गर्जने छन् र भयानक भू-कम्प जाने छ यति भयानक भू-कम्प पृथ्वीमा मानिसको उत्पत्ति भएदेखि अहिलेसम्म कहिल्यै गएको थिएन । पहाडहरू बेपत्ता हुनेछ ।" (पवित्र बाइबल प्रकाश १६: १७-२१) ।

यो समय कहिले आउँछ यसको जानकारीका लागि गन्ती (१४:३४), इज (४:५-६), २ पत्र ३ को ८ को वचनसँग प्रकाश १२:१४-१७ दाँजेर अध्ययन गर्नुपर्ने देखिन्छ ।

गन्ती, इज, पत्रको वचनहरू हेर्दा १ दिनलाई १ वर्ष र हजार वर्ष भनी संकेत गरिएको छ ।

पवित्र बाइबल, हिब ४:३-६ यद्यपि उहाँका कार्यहरू संसारको उत्पत्तिदेखि नै पूरा भइसकेका थिए । किनकि उहाँले अरू कुनै ठाउँमा सातौं दिनको विषयमा यस किसिमले भन्नुभएको छ "परमेश्वरले सबै कार्यहरूबाट सातौं दिनमा विश्राम लिनुभयो ।"

परमेश्वरले सबै कार्यहरूबाट सातौँ दिनमा विश्राम लिनुभयो । फेरि यसै खण्डमा उहाँले भन्नुभयो, "मेरो विश्राममा तिनीहरू कहिल्यै पस्नेछैनन् । कसै-कसैलाई प्रवेश गर्न अझै बाँकी नै छ ।"

भनिएको 'त्यो विश्राम' लाई प्रेरित पावलले मानव इतिहासको ६ हजार वर्षपछि आउने अनन्त विश्राम हो, भनेर अर्थ लगाएका छन् । ६ दिनपछि आउने विश्राम-दिन, ६ वर्षपछि आउने विश्राम-वर्ष, हुन आउने कुराहरूको अगमवणी हो । बाइबालको अगमवाणी एक दिन एक वर्षको रूपमा पूरा गराउनुभएको कार्य छ । (पवित्र बाइबल, गन्ती १४:३४, इज ४:६ तुलना) ।

अनि एक दिनलाई हजार वर्षको रूपमा पनि दृष्टान्त गरिएको छ ।

पवित्र बाइबल, २ पत्र ३: ८ तर प्रिय हो, एउटा कुरा नभुल, कि प्रभूको निम्ति एक दिन हजार वर्षझैं र हजार वर्ष एक दिनझैं हुन्छ ।

प्रत्येक सातौँ दिनमा आउने विश्राम-दिनले अथवा प्रत्येक सातौँ वर्षमा आउने विश्राम-वर्षले, मानव इतिहासका ६ हजार वर्षपछि आउने वर्षको विश्रामलाई देखाउँछ (प्रकाश २०:६ तुलना) ।

त्यसैले परमेश्वरले ६ दिनसम्म सृष्टिकार्य गर्नुभयो भन्ने वचनले चाहिँ ६ हजार वर्षमा पूर्ण सृष्टिकार्य समाप्त गर्नुभई अनन्त विश्राममा प्रवेश गर्नुहुने । मुक्ति पाएका सन्तहरू पनि परमेश्वरसँगै अनन्त विश्राममा प्रवेश गर्ने कुरालाई देखाउँछ । त्यो विश्राम प्रवेश गर्ने कुरालाई प्रेरित युहन्नाले चाहिँ एक हजार वर्षसम्म राज्य गर्नेछन् भनेर वर्णन गरेका छन् ।

'त्यस स्त्रीलाई सर्पको सम्मुखबाट उजाड-स्थानमा उडेर जानलाई ठूलो गरूडका दुई पखेटा दिइए । त्यो उजाड-स्थान साढे तीन वर्षसम्म त्यस स्त्रीको पालन पोषण निम्ति तयार गरिएको थियो । त्यस स्त्रीलाई बाढीले बगाओस् भनेर त्यस सर्पले स्त्रीको पछि आफ्नो मुखबाट नदीजस्तै पानी निकाल्यो । तर पृथ्वीले त्यस स्त्रीलाई सहायता गर्‍यो । अजिङ्गरले आफ्नो मुख उघारेर निलिदियो । तब त्यो अजिङ्गर त्यस स्त्रीसँग क्रोधित भयो । त्यसका बाँकी सन्तानसँग युद्ध गर्न गयो अर्थात् तिनीहरूसँग जनहरूले परमेश्वरका आज्ञाहरू पालना गर्दछन् र येशूको गवाही दिन्छन् । त्यो अजिङ्गर समुद्रको किनारमा खडा भयो ।' (पवित्र बाइबल प्रकाश १२: १४-१७)

बाइबलका अगमवाणीअनुसार पृथ्वीको आयु समाप्त हुन १ दिनलाई १ वर्षसँग तुलना गर्दा अझ १२७७/५ वर्ष बाँकी देखिन्छ । एक दिनलाई हजार वर्षसँग तुलना गर्दा १२७७५०० वर्ष बाँकी हुन आउँछ । यसरी बाइबलभित्र दुईवटा तिथि देखिएपछि खोजक संसार ध्वस्तबारे वैदिक मत हेर्न पुगे ।

प्रश्नको आगमन र यसयुग समाप्तीको संकेतहरू के-के छन् । यो विषय संसारका सारा मानव जातिको चासोको विषयमा भएको छ । सन् २०१२ मा संसार ध्वस्त हुने भनी जानकारी केही खीष्टीयन अगमवक्ताहरूद्वारा सार्वजनिक भयो । अष्ट्रेलियाको राष्ट्रप्रमुखले समेत विश्व ध्वस्त बन्ने संकेत पाइरहेको भनी राष्ट्रको नाममा सम्बोधन गरे । समयसमयमा पृथ्वी नासिँदैछ । ग्रह, उल्का, तारा आदि पृथ्वीमा ठोकिन आउँदैछ भनेर भविष्यवाणी गरिदै आएका छन् । यसरी गरिदैँ आएको भविष्यवाणी पूर्णत झुट सावित भैसकेका छन् ।

प्रसिद्ध लेखक तथा संस्कृतिविद् हरिप्रसाद सोडारीले आफ्ना पुस्तक धर्मभित्रको विज्ञान (२०७३ पृ. १३६) मार्फत यस्ता रहस्य उजागर गरेका छन्,"बौद्धिक ग्रन्थ विज्ञान र सबै धर्मशास्त्रको जननी हुन् । यहाँ पृथ्वीको आयु बढाउने र घटाउने विधि दिएको छ । मानवीय क्रियाकलाप नै मानव अस्तित्वको समय निर्धारक हो भनिएको छ । कलियुगको आयु पहिलेका महर्षिहरूले चारलाख बत्तीस हजार वर्ष मानेका छन् । वि.सं. २०७४ सालसम्म आइपुग्दा यसको आयु चारलाख छब्बीस हजार आठ सय बयासी वर्ष बाँकी रहेको देखिन्छ । मानिसका कुविचार, कुसंसकार र कुकर्मले उसको आयु निर्धारण गर्छ ।"

त्यस्तै अर्का प्रसिद्ध दार्शनिक स्वामी प्रपन्नाचार्यले आफ्नो पुस्तक 'वेदमा के छ ? मार्फत पृथ्वीको (कलियुग) आयु ४ लाख ३२ हजार वर्ष बाँकी भएको बताएका छन् ।

शास्त्रले निर्धारण गरेको कलियुगको प्रभाव:

शासक वर्गहरूमा कुनै तागत हुँदैन र प्रजाले मान्दैनन् । शासकले जनताबाट थेग्न नसक्ने कर उठाएर लिने छन् । ठूला तलाउः झरना सुक्नेछन् । श्रीदेवीभागवत् (९/८/२८)

भयङ्कर त्रास फैलनेछ पृथ्वी फाट्नेछ, आकाश र पृथ्वीमा ठूला-ठूला चिह्नहरू देखा पर्नेछन् । विशाल त्रिपुरराज्य विनाश स्मृति

प्रत्येक प्रलयहरूको अन्त्यमा नाता विरुद्ध नाता उठ्नेछ । उनीहरूको कर्मको बोझ यति बढ्छ जसले उनीहरूको विनाशको आँधी ल्याइदिन्छ ( महाभारत)

नयाँ युगको आगमन र युग समाप्तीको चिह्नस्वरूप राज्यविरुद्ध राज्य लाग्नेछ । रामायणसबै जना असत्य बोल्छन्, पृथ्वीमा धानलगायतका अन्यहरू उत्पादन हुँदैन । वृक्षहरूमा फल लाग्दैन र महिलाहरू सन्तानहीन हुन्छन् ।

नारायण सेतो घोडा चढी प्रकट हुनुहुनेछ र समस्त ब्रह्माण्ड आगो र पानीद्वारा नष्ट गराउनुहुनेछ । - भविष्यपुराण

संसारमा देखा परेको कलियुगको प्रभाव

संसारका ठाउँ-ठाउँमा भइरहेको नटुङ्गिने विवाद र युद्धको कारण अन्तर्राष्ट्रिय सुरक्षामाथि खतरा बढ्दै गइरहेको छ । यसको साथसाथै चारैतिर फैलिएको आतङ्कवादको त्रास विश्वभरि फैलिएको छ ।

ओजनको तह पातलिँदै गएको छ, जसले गर्दा समस्त मानिसको जीवन खतरामा छ ।

उत्तरी ध्रुवीय हिमखण्ड पर्वतहरूको हिउँ पग्लिदै जाँदा ठूला जलवायु परिवर्तन भएको छ ।

संसारभरी अनौठा घटनाहरू देखा परिरहेका छन् । महिलाहरू सन्तान नजन्माउने प्रवृति वृद्धि हुँदै गएको छ । माछा तथा मौरीहरूको सामुहिक मृत्युजस्ता घटना बढ्दै गएको छ । विश्वमा नयाँ-नयाँ खतरनाक रोगहरू देखापर्ने क्रम बढ्दै गएको छ । संसारभर अरबौं मानिस भोकमरीको शिकार हुँदै गएका छन् ।

पछिल्लो समयमा लगातार महाभूकम्पहरूको वृद्धिको कारण धेरैको जनधनको हानि भएको छ । यसबाहेक पनि विभिन्न संघसंस्थाहरूले विनाशको संकेत गरिरहेका छन् ।

"आउने दिनमा भोजन पानीका निम्ति युद्ध हुन्छ होला बाँच्नको निम्ति छ अरब मानज जाति सबैले युद्ध रोज्छन् होला" । (पिटर स्विर्ज/ग्लोबल बिजनेस् ।

"हाल विश्वका १०१ क्षेत्रमा विवाद" **KIDA,** रक्षा विश्लेषण प्रतिष्ठान कोरिया /२००७,१) ।

"विश्वमा भोकले ग्रस्त मानिसहरूको संख्या दुई वर्षमा २० करोड वृद्धि भएर कुल १ अरब २ करोड पुगेको छ । योचाहिँ इतिहास सबैभन्दा ठूलो संख्या हो"(जोसेट सिरन /WFP कार्यकारी निर्देशक २००९/१०) ।

"अनाजको मूल्यवृद्धिले गर्दा दोस्रोचरणको खाद्यसंकट आउन सक्छ" (जेक डि एफ/यू.एन. तथा कृषि सङ्गठनका महानिर्देशक) ।

"हिजो आज विश्वव्यापी भूकम्पको गतिविधि २० वर्षअगाडिको भन्दा ५ गुणा शक्तिशाली भएको छ । हामीले पृथ्वीमा सामना गर्नुपर्ने सबभन्दा गम्भीर पर्यावरणीय खतरा भनेको जलवायु परिवर्तन होइन कि शीघ्रताको साथ क्रमैसँग बढिरहेको भूकम्प र टेक्टानिक र ज्वालामुखीको गतिविधि हो "(टोम चाल्को /अष्ट्रेलियाली बैज्ञानिक) ।

हामीले सोचेको सबभन्दा ठूलो भूकम्प आयो भने त्यो नै महाविपत्तिमा जोडिन्छ भन्ने कुरालाई ध्यानमा राख्नुपर्छ "(थोमस एच.जोर्डन /दक्षिण क्यालिफोर्निया भूकम्प केन्द्रका निर्देशक)

"एक्काइसौं शताब्दी महामारीको युग हो "(विश्व स्वास्थ्य सङ्ठन) ।

"हामी निश्चित छौं कि, भविष्यमा नयाँ ईन्लुएन्जा आउनेछ, जो अर्को महामारीको कारण बन्ने छ ।" (ग्रेगरी हाटेल / विश्व स्वास्थ्य सङ्गठनका प्रवक्ता) ।

"तर हामी आश्चर्य चकित भएको चाहिँ हिउँ लोपको गति तीव्र भएकोले गर्दा हो "(Mark Serreze / University of Colorado *Glacier* specialist)

"हामीले जलवायु सङ्कटको सामना गरिरहेका छौं । यो गम्भीर छ । हामी परिणाम भोग्नुपर्ने समयमा प्रवेश गरेका छौं ।" (अल / गोर / अमेरिकाका पैतालिसौं उपराष्ट्रपति ।

"यस्तो विपत्ति आउला भनेर कति पनि थाहा थिएन" (ब्रस मोइनिया / भू-गर्भशास्त्री) ।

"यदि मौरी लोप भयो भने मानव-जाति चार वर्षभन्दा बढि बाँच्न सक्दैन"( अल्वर्ट आइन्सटाइन) ।

"भयानक सौर्य आँधी फेरि आँउछ भन्ने कुरामा शङ्का गर्ने ठाउँ छैन "- ल्यारिकोम्बस्-NASA.

"ठूलो ऊर्जा बोकेको छ । एकपल्टको विष्फोटनमा करोडौं परमाणु बम विष्फोटनको भन्दा पनि धेरै ऊर्जा सूर्यबाट निस्कन्छ । "(रोवर्ट रोए-Livescience.com)

"हालसम्म १५० मि. व्यासको पृथ्वीलाई खतरामा पर्न सक्ने करिब १,०७२ क्षुद्र ग्रहहरू पत्ता लागेको छन् । २०,००० क्षुद्रग्रह र धूमकेतुहरू छन्, जो पृथ्वीको निम्ति जेखिमपूर्ण छन् ।"(NASA)

"ग्रहको ठक्कर फेरि हुन्छ होला त ? तपाईं विश्वास गर्नुहोस् यो फेरि हुनेछ । (पिटर सयुल्ज / भू-विज्ञानका प्राध्यापक, ब्राउन विश्वविद्यालय) विश्वभर २३,३७५ भन्दा बढी परमाणु हतियार छ ।"(Ploughshare Ford)

परमाणु युद्ध हुने सम्भावना बढ्दै गएकोले, परमाणु जोखिमलाई चेतावनी दिनको निम्ति बनाएको 'पृथ्वी प्रलयको दिनका घड्ी लाई रातको ११ बजेर ५६ मिनेटमा मिलाउने योजना छ । "(अमेरिका परमाणु वैज्ञानिक संघ) Elohim Academy, (पृ. २-२०) ।

# इसाईमाथि लागेका आरोपहरू

केही वर्षयता ख्रीष्टीयनहरूमाथि जगन्य आरोप लागेका छन् । विश्व चर्चित व्यक्तिहरूले ती आरोप लगाएको देख्दा खोजकले ती घटनाको सत्यतथ्य छानबिन गर्ने अधिकार पाठक र ईश्वरीय अदालतलाई जिम्मा दिन्छ । कतिपय सानो त्यान्द्राको रहस्य नखुल्दा पुरै संरचना थन्किएको हुन्छ । स्पष्टरूपमा भन्नुपर्दा ख्रीष्टीयनहरूको धर्मप्रचारका नाममा देखिएका रेखाहरू उनीहरूलाई मदर टेरेशा, नेपोलियन, जामो कन्याट, भिक्षु कर्मसागरलगायतका विचार सुन्दा खोजकार उदास देखिन्छ ।

१. "धर्मपरिवर्तन गराउनु इसाई मिसनरी कार्यप्रणालीको मेरूदण्ड हो । यस्तो नभए त्यो मिसनरी मृतवत् हुनेछ"(मदर टेरेशा)

२. कुनै पनि राष्ट्र कमजोर बनाउनु छ भने सबैभन्दा पहिला त्यस देशको भाषा, संस्कृति, परम्परा र धर्ममाथि प्रहार गर्नुपर्छ । (नेपोलियन बोनापार्ट)

३. "जब मिसनरी अफ्रिकामा आए, त्यतिबेला उनीहरू हातमा बाइबल थियो । हाम्रो हातमा जमिन र सत्ता थियो । उनीहरू हामीलाई भने, 'आँखा बन्द गर र प्रर्थना गर ।' जब हामीले आँखा खोल्यौं, त्यतिबेला हाम्रो हातमा बाइबल थियो, उनीहरू हातमा जमिन र सत्ता थियो ।"(जामो कन्यटा)

४. नेपालमा युरोपका केपुचिनमतका इसाई धर्मप्रचारकहरू राजा प्रताप मल्लको शासनकालमा आएका थिए भन्नेसम्म थाहा पाइन्छ । बडामहाराजाधिराज पृथ्वीनारायण शाहले काठमाडौं उपत्यकालाई आफ्नो अधिकारमा लिएपछि उनले इसाईहरूले उपत्यकाको पोडे र कपालीहरूलाई इसाई बनाइसकेको रहस्य थाहा पाए । त्यसबाट भविष्यमा पर्न सक्ने खतरालाई विचार गरेर प्रमुख पादरीहरू जिसेप्पी र माइकेल एञ्जिलोलगायत धर्मपरिवर्तन गरी इसाई बनेका ६२ जना नेपालीहरूलाई देश निकाला गरियो । यसै सन्दर्भमा पृथ्वीनारायण शाहले दिव्योपदेशमार्फत भनेका छन्,

"विदेशी साहूमहाजन, धर्मसंस्कृतिलाई राष्ट्रभित्र आउन नदिनु, यो असली हिन्दूस्थान हो ।"यसबाट के प्रमाणित हुन्छ भने नेपाल आरम्भिककालदेखि हिन्दू राष्ट्र थियो ।

५. यदि इसाईले अवरोध नपुऱ्याएको भए आज हाम्रो देश नेपाल विशाल नेपालमै सीमाङ्कन हुन्थ्यो । ब्रिटिस इसाई साम्राज्यका सामु हाम्रा वीर नेपाली हिन्दू सैनिकहरू अन्तिम समयसम्म डटिरहे । नालापानीमा नेपाल आमाको वीर सपुत वलभद्र कुँवरले आइमाई र केटाकेटीको सहायतामा इसाई नेतृत्व लिएको जनरल जिलेस्पीको तोप र बन्दुकसहितको हजारौँ फौजसँग आफ्नो अगम्य पराक्रम प्रस्तुत गरे । युद्धमा घाइते भएकी, काखमा बच्चा लिएकी नेपालीनारी बरु मर्न तयार भए तर इसाईको हातबाट पानी पनि नपिएको साहसिक नेपाली हिन्दूनारीको चरित्र त्यस युद्धमा संलग्न ब्रिटिस सैनिकले आफ्नो पुस्तकमा सचित्र वर्णन गरेका छन् ।

६. नेपाल एकीकरण अभियानको सिलसिलामा आफूलाई पनि राज्य दिनुपर्छ भनेर माग राख्ने महोद्दामकीर्ति शाह, दलमर्दन शाह, दलजित शाहलगायत तात्कालिक भारदारलाई देश निकाला गरिएपछि उनीहरू पटना र बेतियातिर गए । उनीहरूलाई तात्कालिक इष्ट इण्डिया कम्पनीको दलाल बनाएर नेपालमा चलखेल गर्न पठाइयो । त्यही इसाईहरूको चक्रव्यूहमा परी विरोधीहरू विशाल नेपाल निर्माण सबैभन्दा बढी योगदान दिने बहादुर शाहलाई जेलनेल ठोकेर राखियो । इसाईहरूको यस्तै छलछाम र षड्यन्त्रमा परेर नेपालीले सुगौली सन्धिको नाममा आफ्नो दुई तिहाई भू-भाग गुमाउने अवस्था सिर्जना भयो ।

७. नेपालको जातीय, भाषिक एवं साँस्कृतिक विविधतालाई नष्ट पार्न नेपालमा जातीय संघ, संगठनहरू विस्तार गर्ने, उनीहरूलाई आर्थिक प्रलोभनमा पारी काम नगरी खाने वातावरण सिर्जना गराइने र अन्तमा आर्थिक नाकाबन्दी गराई संकटको स्थिति सिर्जना गर्न पश्चिमा इसाईहरू सक्रिय छन् । गुरूङ, मगर राई, लिम्बू, तामाङलगायत नेपालका आदिवासीहरूको भाषा, पोशाक र संस्कृतिलाई नष्ट गराउने र सबैलाई एउटै क्रूसको छायामा बन्धन गरी नेपाललाई सखाप पार्न नेपाली नै प्रयोग गरिराखेका छन् ।

८. "विभिन्न देशका नागरिकहरूलाई एकआपसमा लडाई फुटाऊ अनि शासन गर"को रणनीतिक अस्त्रबाट विश्वको प्राचीन सभ्यता र संस्कृति सखाप पार्ने महाअभियानमा इसाईहरूले सोही देशका नागरिकहरूलाई नै प्रयोग गरिएको छ । विश्वमा धेरै देशका आदिवासीहरूको स्वपहिचान धार्मिक, साँस्कृतिक मूल्य र मान्यताहरूलाई इसाई मिसनरीहरूले बाइबलमार्फत् नष्ट गरिदिएका छन् (४२ भन्दा बढी) । (धर्मको इतिहास, शेतेकराब)

९. नेपाल उच्च लगानी र योजनाबद्ध तरिकाले क्रिश्चियनहरू लागिपरेको रहस्य उद्घाटन भइसकेको छ । नेपालमा सर्वप्रथम बुद्धिष्ट र किरातीहरूको संस्कृति एवं पहिचानलाई निर्मूल पार्न इसाईहरू आतुर छन् । नेपालका बुद्धिष्टहरू अहिले आएर तिब्बतीयन बुद्धिष्टतिर पलायन भइरहेका छन् । यहाँका गुरूङ, तामाङ जातिका चैत्यहरू आफ्नो अस्तित्वलाई जोगाउन सक्ने स्थितिमा छैनन् । युरोप र अमेरिकाले स्वतन्त्र तिब्बतको नाउँमा तिब्बती बुद्धिष्टहरूलाई ठूलो रकम लगानी गरी चीनविरूद्ध प्रयोग गर्ने कार्य भइरहेको पनि बौद्धिक जगत्मा प्रष्टैछ । जनयुद्धकालीन समयको फाइदा उठाएर नेपालमा इसाईहरूले नेपाली सेनाभित्र प्रवेश गरी नेपाली राष्ट्रियता, अखण्डता र सार्वभौमिकताको संरक्षक नेपाली सेनालाई विभाजन गरी नेपाललाई हाइटी, रुवाण्डा जस्तो सैनिक विद्रोहमार्फत छिन्नभिन्न पार्न सेनाभित्र प्रवेश गरेको इसाईहरू अहिले सेनाको क्याम्पभित्र चर्च स्थापितं गर्न युद्धस्तरमा लागि परेका छन् ।

१०. हिन्दूलाई विरोध गर्ने खीष्टीयनरूले हिन्दूहरूको १८ पुराणमध्ये स्कन्दपुराणबाट झिकिएको नेपालको नामकरणसमेत हटाउने तयारीमा जुटिरहेका छन् । सम्पूर्ण जातजातिहरू मिलेर बसेको नेपालमा जातीय विभाजन ल्याई आपसमा वितृष्णा उत्पन्न गरेर नेपाललाई आफ्नो अस्तित्वबाट पतन गराउन बाइबल र खीष्टीयन मिसनरीहरू सक्रिय छन् । संसार जित्ने अभियानमा लागेका इसाई साम्राज्यवादीहरूले विश्वका धेरै देशहरू कब्जा गरे । आफ्नो बाइबल र खीष्टीयन सम्प्रदाय लदाउने काम गरे । त्यसको निरन्तरता नेपालमा पनि लागु गर्न लागि परे तर विगतमा हाम्रा वीर सैनिकहरूले तिनीहरूलाई परास्त गरी खीष्टीयन साम्राज्यबाट नेपाललाई जोगाउन सफल भएका हुन् । धन सम्पत्ति, वैभाव प्राप्त गर्नु खीष्टीयन सभ्यताका सुरूका दिनदेखिकै मानव चाहना हो । यही सन्दर्भमा मानिसलाई

व्यवसायिक सफलताको लक्ष्य चुम्नका लागि बाइबलीय वचनलाई आफू अनुकुल प्रक्षपण गरेको देखिन्छ । परिवर्तन गराउन हिँडेका मेशिनरीहरूले गैह्र खीष्टीयनहरूले मान्ने देवीदेवतालाई देवता नै होइन भन्छन् । अरूको सम्प्रदायको आदर गर्ने संस्कृतिभित्र पसेर श्रद्धाको बोट उखल्दै निन्दाको विउ रोपिदिएका छन् ।

यस्तै विदेशी धार्मिक प्रकृतिका गैर सरकारी संस्था यू. एन. एन. जस्ता बिग्रहकारीले हिन्दू समाजमा ब्राम्हणलााई आर्य र क्षेत्रीलाई खस बनाइ विभाजन गर्ने षड्यन्त्रपूर्ण खेललाई अगाडि बढाइएको छ । राष्ट्रिय जनगणना २०७८ लाई माध्यम बनाएर नेपालीहरूलाई विभाजन गर्ने षड्यन्त्र अघि बढिसकेको छ ।

आज विकराल बन्दै गएका धर्मान्तरको धन्दाले आमसमाजले उच्च स्थान दिँदै आएको सहिष्णुता र मेलमिलापलाई असहिष्णुता परम्परा भित्र्याएर भित्रैदेखि घोच्न थालेको ठान्न थालिसकेका छन् । पछिल्लो समयमा विश्व चर्चित व्यक्तिहरूले इसाईकरणको बढ्दो प्रभावसँगै प्रेम, श्रद्धा, भातृत्व र मानवता हराउँदै गएको भनी चिन्ता प्रकट गरिरहेका छन् ।

# प्राचीन सभ्यताहरूको निर्मम नाश

खीष्टीयन धार्मिक संघ भन्दा बेग्लै मत राखेको सुचना पाउने वित्तिकै तत्काल संघको अदालतमा सुम्पिदिने गरिन्थ्यो । अभियुक्तहरूलाई पाशविक यातनाहरू दिएपछि सिधै आगोमा फ्याँकिदिने गरिन्थ्यो । चर्चले लाखौं निरीह निरपराध मानिसलाई आगोमा जलाईदिने कार्य गर्दथ्यो । चर्चको निर्देशनमा थुप्रै वैज्ञानिक अनुसन्धानकर्ता र नास्तिक माथि सहनै नसक्ने गरी यातना दिने र मृत्युदण्ड दिइएको थियो । यसको साथै चर्चको निर्देशनमा आगजनी पुऱ्याइएका सय भन्दा बढी सभ्यताहरू छन् । यिनीहरूद्धारा नष्ट गरिएका महत्वपूर्ण सभ्यता यस प्रकार छन् ।

१. पेगन सभ्यता
२. मलय सभ्यता
३. दिदेन्तायन सभ्यता
४. बेल् सभ्यता
५. प्राचीन रोमन सभ्यता
६. माग्यार सभ्यता
७. हेलेनिक सभ्यता
८. जम्रेन सभ्यता
९. हेलेबेत्ती सभ्यता
१०. फेक सभ्यता
११. मय सभ्यता
१२. आर्यन सभ्यता
१३. एकटेक सभ्यता
१४. मिस्री सभ्यता
१५. माली सभ्यता
१६. असान्ते सभ्यता
१७. अग्नी सभ्यता
१८. बाँटू सभ्यता
१९. घाना सभ्यता
२०. लुन्डा सभ्यता

२१. सुडानी सभ्यता
२२. क्रेट सभ्यता
२३. यमरित सभ्यता
२४. अकन सभ्यता
२५. केल्ट सभ्यता
२६. हित्ति सभ्यता
२७. जुनि सभ्यता
२८. शिवा सभ्यता
२९. अक्सुम सभ्यता
३०. बेबिलोनिय सभ्यता
३१. नार्मन सभ्यता
३२. नुविया सभ्यता
३३. कुश सभ्यता
३४. प्रेतानी सभ्यता
३५. मोचे सभ्यता
३६. इन्का सभ्यता
३७. युनानी सभ्यता
३८. ग्रिक सभ्यता
३९. ऋसियन सभ्यता
४०. सेक्सन सभ्यता
४१. गाथ सभ्यता

# बाइबलका केही चिन्तनीय विषय

**१ . पहिलो आदम र अन्तिम आदमः**

उत्पत्ति (१,२,३ अध्याय)को लेखाई छोटो इतिहासजस्तै देखिएको छ । आत्मिक रूपमा अर्थ लगाउने हो भने यसको क्षेत्र एकदमै विशाल छ । आदम हब्बा र सर्पको इतिहासलाई सामान्य प्रोटेस्टेन्ट मण्डलीले सोचेको जस्तो प्राचीन आदतको बगैंचाको एक इतिहासको रूपमा मात्रै होइन कि, यो इतिहासबाट पहिलाको संसारदेखि यो संसारको विषयको गम्भीर सत्यतालाई पत्ता लगाउन सक्ने गराउनु भएको छ । (स्वर्गीय संसारबाट आएका पाहुनाहरू, पृ ८३, आन साङ होङ)

**२. एलोहिम परमेश्वर**

एलोहिमचाहिँ हिब्रूभाषामा परमेश्वरहरूलाई बुझाउने बहुवचनको नाम हो । जुन हिब्रू मूल बाइबलमा करिब २५०० पटक भन्दा बढी देखा परेको छ । हिब्रूभाषामा एक जना परमेश्वरलाई बुझाउने "एल"अनि "एलोआह"भन्ने शब्द हुँदाहुँदै जोडसँग बहुवचनको परमेश्वरहरूलाई बुझाउने एलोहिम भन्ने शब्द बाइबलमा हजारौंपटक प्रयोग भएको चरणचाहिँ साँच्चै के होला ? यसको बारेमा बाइबलको उत्पत्तिको पुस्तक पहिलो अध्यायदेखि स्पष्ट उत्तर दिइएको छ ।

फेरि परमेश्वरले भन्नुभयो, "मानिसलाई आफ्नै स्वरूपमा, हाम्रै प्रतिरूपमा बनाऔं । परमेश्वरले मानिसलाई आफ्नै स्वरूपमा सृष्टि गर्नुभयो । परमेश्वरकै प्रतिरूपमा उहाँले तिनलाई सृष्टि गर्नुभयो । नर र नारी गरी उहाँले तिनीहरूलाई सृष्टि गर्नुभयो । (उत १:२६-२७)

हाम्रै -उत ११:१-७, यशै ६:८) भन्नुहुन्छ परमेश्वरको स्वरूपमा जस्ताको जस्तै बनाइएका मानिसचाहिँ नर र नारी थिए । यो नै मानिसलाई सृष्टि गर्नुहुँदा नमूना हुनुभएका परमेश्वर नर र नारी स्वरूपको रूपमा अस्तित्वमा

रहनुहुन्छ भन्ने कुरा गवाही दिने कुरा हो । नरस्वरूपको परमेश्वरलाई चाहिँ हाम्रा पिता नारी स्वरूपको परमेश्वरलाई चाहिँ हाम्री माता भनेर बोलाउनुपर्ने कारण हो । (मत्ती ६:९, गला ४:२६) ।

केवल एलोहिम हुनुभएका पिता परमेश्वर र माता परमेश्वरमा मात्रै अमरत्व (अनन्त जीवन) भएकोले, परमेश्वरले उचित समयमा आफ्नो स्वरूप प्रकट गरिदिनेछु भन्नु भएको छ । (तिमो ६:१५-१६) । यसैको निम्ति सृष्टि गर्नुभएका प्रत्येक थोकमा आफ्नो स्वरूप खोपिदिनुभई सृष्टिका थोकहरूमा पनि बाबु र आमा रहने गराउनुभएर (प्रका ४:११) अन्तिम समयमा त्यसको वास्तविकता हुनुभएका पवित्र आत्मा र दुलहीको रूपमा प्रकट हुनुभएर अनन्त जीवनद्वारा मुक्तिको अनुग्रह दिनुहुन्छ । पवित्र आत्मा र दुलही भन्नुहुन्छ, "आउनुहोस् !"...जसले इच्छा गर्छ त्यसले जीवनको पानी सित्तैंमा लिओस् । (प्रकाश २२:१७) ।

### ३. मरियम प्रतिमाको उपासना

यसरी अन्य धर्महरूको प्रथा सुरूको मण्डलीमा पनि मिसिन थाल्यो । अनि रूप मात्र परिवर्तन भएर अन्य धर्मको मूर्तिपूजा, बालक येशूलाई अंगाली रहेकी मरियमको रूपमा हस्तान्तरण हुँदै आयो । यो नै हिजो आजको क्याथोलिक मण्डलीमा गरिने मरियम प्रतिमाको उपासनाको उत्पत्ति हो । यो अवश्य नै बाइबलका शिक्षा होइन । (मेरो भेडाहरूले मेरो स्वर सन्छन्, पृ ७७,किम जु छल) ।

### ४. हिन्दूहरू जाति, जनजाति वा आदिवासी ?

वैदिक सनातन धर्मका अनुयायी, वेदलाई प्रमुख धार्मिक ग्रन्थ मान्ने, तेत्तीसकोटी देवीदेवता, चौध लोक, चार युग, त्रिदेवता, पुनर्जन्ममाथि विश्वास गर्ने आर्यहरूलाई हिन्दूभनिन्छ । हिन्दूहरू कति पुराना हुन् भन्ने सम्बन्धमा विद्वान्हरूबीचमा मतैक्य छैन । यसको उत्पत्तिको तिथिमिति ज्ञान नभएकाले अनादि धर्म पनि भनिन्छ । ब्रह्माको मानस सृष्टिदेखि नै मानवको अस्तित्व देखिन्छ । यसतर्फ ध्यानै नदिईकन कतिले सिन्धुघाँटीको सभ्यतादेखि हिन्दूको बीजारोपण भएको बताउँछन् । कतिपयले प्राचीनकालदेखि नेपालमा बस्दै आएका आचार, विचार र संस्कारमा पक्का, नैतिकवान,

मन्त्रद्रष्टा ऋषिमुनिहरूका सन्ततिलाई हिन्दू भनेका छन् । पाणिनिको धातुपाठमा 'हिडि' धातु छ, केही विद्वान्हरूले पाणिनिको जन्मभूमि अर्घाखाँची जिल्लाको पणेना गाउँ बताएका छन् । आधुनिक वैज्ञानिकहरूले हिन्दूहरूको बसोबास प्राचीनकालदेखि एसिया महादेशमा रहेको बताउँछन् । कालीकोटको मान्मा र मनाङ मनुको साधनास्थल थियो । सत्ययुगमा महादेवले यही भूमिमा किरातरूप धारण गरे । त्रेतायुगमा राजा जनकको ज्ञान प्रचार क्षेत्र, द्वापरयुगमा अर्जुनको साधनास्थल, कलियुगमा गौतम बुद्धको जन्म यही भूमिमा भयो । रावणदेखि बाल्मीकिसम्म, परशुरामदेखि मञ्जुश्रीसम्मले यही भूमिलाई आश्रयस्थल बनाएका थिए । सीता, पार्वती यही भूमिका उपज हुन् । हजारौं देवीदेवता, ऋषिमुनि, महापुरूष आदिले यो भूमिलाई जन्म र कर्मस्थल बनाएका प्रमाण शास्त्रमा सर्वत्र पाइन्छन् । आदिमकालदेखि नेपालमा देवीदेवता, ऋषिमुनिका सन्ततिबाहेक अरू कुनै मानिसको बसोबासै थिएन । अहिले गुफा, नदी किनारा आदिमा फेला परेका मानव हड्डी रामापिथेकस, नियरन्डरथल आदि मानवको होइन ऋषिमुनि र महापुरूषहरूका हुन् । सृष्टिको दोस्रो परार्धको कलियुगसम्म आइपुग्दा कैयौँ अरब वर्ष बितिसकेका छन् । थेप्चो र चुच्चो नाकलाई आधार बनाएर कसैले डलर कमाउन् वा राजनीतिक स्वार्थ पूरा गरून् तर एउटै पुर्खाका सन्ततिलाई जाति र जनजातिमा विभाजन नगरून्, हिन्दूहरू शरणार्थी हुन् भनेर सत्यतथ्य इतिहास, गौरव र गरिमालाई नबेचून् । प्राचीनकालदेखि बस्दै आएका किरात, जनजाति, ब्राह्मण परिवार सबै हिन्दू थिए । किरातहरूले पारूहाङ मान्नु र सनातनीहरूले महादेवलाई पूज्नु एउटै कुरा हो । बोनधर्मले प्रकृतिको स्तुति गर्ने र हिन्दूले नदी एवम् वनस्पतिलाई देवीदेवता स्वरूप मान्नु एकै हो । (धर्मभित्रको विज्ञान २०७०, पृ. १२९ हरिप्रसाद सोडारी)

### ५. मूलधर्म हिन्दू

वैदिक सनातन धर्मबाट विभक्त भएका सम्प्रदायहरू यी हुन्- पारसी, बौद्ध, युनानी, रोम, वैन्डिक, स्ट्युटनिक, स्कान्डेनेबियन, 'केल्टिन' र स्लाबोनियन यी नौ धर्म पुराणकालसम्ममा फिँजिएर पृथक् भए । अनि सेमेटिक धर्ममा पनि अनेक प्रकारका शाखाहरू छन् । ती शाखा इजिप्सियन,

बबोलियन, आसिरियन, फिनिसियन, जिडइज्म, महम्मदनिज्म (मुस्लिम), क्रिश्चियानिटी (इसाई) आदि छन् । शाखा प्रशाखामा बाँडिएर यसमा उपभेदहरू छन् । स्वाध्याय र बुझाईका अनुसार जति गहिरियो उति नै आर्य धर्मको गहिराई बुझ्न गाह्रो छ । (वेदमा के छ ? पेज नं. ६०, डा. स्वामी प्रपन्नाचार्य) ।

### ६. कथित पत्रकारले सोच्नुपर्ने भयो

वेद सबैभन्दा मूल्यावन् र प्राचीन उच्चाङ्क साहित्य हो । वेदको महत्वलाई सारा विश्वले स्वीकार गरेको छ । म प्रश्न गर्दछु किन आजका सञ्चार माध्यमहरू वेद विषयमा यतिका नकारात्मक छन् । हाम्रो वैदिक सम्प्रदाय एक विशाल जाति हो । हामीसँग संसारले अचम्म मान्ने अद्‌भूत इतिहास, ज्ञान छ तर हामी त्यसलाई स्वीकार गर्न तयार छैनौं किन ? (डा. ए.पी.जे. अब्दुल कलाम, भारतका एघारौं राष्ट्रपति, (Pride of the Nation, Dr. APJ Abdul Kalam) .

### ७. वेदान्तको जगमा अधुनिक विज्ञान

अधुनिक विज्ञानका सबै सिद्धान्तहरू वेदान्तले हजारौं वर्षअगाडि प्राप्त गरिसकेको छ । आधुनिक कालमा त्यसलाई भौतिक शब्दहरूले प्रकाशित गरेको छ । आज हामीले विश्वको विज्ञानमा धेरै आविष्कारहरू पाएका छौं । जो बिना मेघले चट्याङ परेको जस्तो हामीकहाँ आइपुगेको छ । यी सबै पुरानो युगमा भइसकेका तत्वहरूको पुनः अविष्कारको कुरा गर्दैछ । त्यो धेरै अगाडि संहितामा यी सबै शक्तिलाई एउटा शक्तिमा परिवर्तन गर्न मिल्दछ भनी उल्लेख भएको छ । (The complete Works of swami Vivekananda) .

### ८) क्रिश्चियनले कसलाई कसरी फुटाउँछ ?

अनादिकालदेखि नै सर्वजातीय समभावको आधारमा विश्वब्रह्माण्डलाई नेतृत्व गरेको नेपाल अहिले फुटाउ र राज गर भन्ने सिद्धान्त बोकेको खीष्टीयन मिसिनरीहरूको चक्रब्यूहमा फस्न लागि सकेको छ । योजनावद्ध रूपमा खीष्टीयन मिसीनरीहरूले एनजीओ, आइएन्जीओ राजनैतिक दलमार्फत

जातीय युद्ध गराउने तयारीमा जुटिरहेका छन् । विभिन्न जातीय संघ-संगठन खडा गराई अर्गानिक, भौतिक, नैतिक सहयोग गर्दै आएका छन् । ब्राह्मण समाज, क्षेत्री समाज, मगर घेदुङ संघ, तमाङ समाज, गुरूङ समाज, राइलिम्बू, चेपाङ, थारु आदि जातीय संगठन गठन गराई आफ्नो पहिचान, अस्तित्व आदिको नाम दिएर जातीय गुट समूह र सम्प्रदाय खडा गरी एकविरूद्ध अर्को उतार्ने योजनावद्ध तयारीमा जुटेका छन् । समयमा सरोकारवाला र सरकार होशियार नभएमा यो देशले ठूलै क्षति ब्यहोर्नु पर्नेछ । विखण्डनकारी खीष्टीयनहरूले इतिहासको कुनै कालखण्डमा मगरराज्यले गुरूङ्गराज्य माथि गरेको आक्रमण देखाएर मगर र गुरूङ्ग बीचजातीय वैमनस्यता र द्वन्द मच्चाइदिने छन् । तमाङविरूद्ध राई, लिम्बू उठाइनेछ । थारूहरूले इतिहासको कुनै कालखण्डमा गरेका अपराधलाई देखाएर चेपाङ्ग जातिविरूद्ध युद्ध गराउने मिसन तयार गरिएको छ । यसको पूर्व तयारीमा मगर, तमाङ, गुरूङ्ग, राई लिम्बूलाई मंगोलियनको कालो बिल्ला लगाएर बाहुन क्षेत्रीविरूद्ध मङ्गोल नेशनल अर्गनाइजेसनलगायत विभिन्न जातीय संगठन मार्फत खीष्टियन मिसिनरीहरूको चलखेल शुरु भइसकेको छ । शुरूको अवस्थामा शाहवंशीय राजाहरूले राज्य एकीकण गर्दा जनजातिहरूको अधिकार खोसेको लोकप्रिय नारा दिएर खस क्षेत्री, बाहुनविरूद्ध प्रहार गरे पनि उनीहरूको अन्तिम लक्ष्य भने मगरविरूद्ध तमाङ, गुरूङविरूद्ध राई, लिम्बू खर्नि राईलिम्बूविरूद्ध शेर्पा, थापाविरूद्ध बस्नेत, रायमाझीविरूद्ध पाण्डे, उपाध्यायविरूद्ध शर्मा, एक जातविरूद्ध अर्को जात (थर) युद्ध गराई कहिल्यै नरोकिने जातीय युद्ध गराउने लक्ष्य हो । यसको भ्रुणहरूलाई किनारा लगाई समन्वयात्मक अध्यात्मवाद र सबै जातीय समभावको आधारमा नेपाललाई द्वन्द्व रहित बनाउन सकिएन भने यसको पहिलो प्रभाव भारतलाई र चीनलाई हुनेछ ।

## ९. मुलुकी ऐन १९१०

"मध्यकालमा नेपाल भारतको भूमि न्युराबाट आएका नेवारी समुदायका मल्लहरू नेपालमा प्रवेश गर्दा अहिलेका शिल्पकारहरूका पुर्खाहरू नेपालको पश्चिमतर्फ कर्णाली नदीदेखि पूर्वतर्फ गण्डकी नदीसम्मको पहाडी भूभागका समथर र उब्जाउ क्षेत्रमा अड्डा जमाई सबेका थिए । उनीहरू शान्त स्वभावका थिए । संस्कृत र साहित्य, संगठित, कलाकौशलका धनी थिए

। ठाउँ ठाउँमा सुन्दर वस्तीहरू निर्माण गरी बसोबास गरेका थिए । संस्कृत र साहित्य, संगीत, कला कौशलका धनी थिए । ठाउँ ठाउँमा सुन्दर वस्तीहरू निर्माण गरी बसोबास गरेका थिए । त्यस क्षेत्रको उब्जाउ जमिन र धन धान्यले प्रभावित भएका आक्रमणकारी मल्लाहरूको पुर्खाले शिल्पकारहरूको पुर्खामाथि निर्मतापूर्वक युद्ध छेडे । अनन्तः लडाईमा मल्लहरू विजयी भए भने शिल्पकारका पुर्खाहरूले आफ्नो पुख्यौली भूमिको स्वामित्व सधैंका लागि गुमाउन बाध्य हुनुपर्‍यो । उक्त लडाई विजय भएका मल्ल राजा र तिनका भारादारहरूले शिल्पकारहरूको बलिया र चलाख योद्धाहरूलाई खोजी खोजी सखाप पारियो । कयौं शिल्पि शिल्पकार चेलीहरूलाई बलात्कारपछि मारिदिए त्यो इतिहास सुन्दा हेर्दा हरेक नेपालीको आँसु रोकिदैन । सोभ्का शिल्पकारहरू जो बाँस, छाला, काठ, धातु, आदिको सामाग्री बनाउन सकेन । नाचगान गर्न जानेका दैनिक जीवनमा योग हुने विभिन्न कला, सीप र संगीतले भरिपूर्ण भएकाहरूलाई चाहिँ भविष्यमा आफ्नो परिवार र राज्यको निम्ति काम लाग्ने सोचेर मल्लहरूले उनीहरूको परिवारलाई जीवनदान दिई दास बनाएर राखे । विजेताले आफ्नो विजयलाई चिरस्थायी बनाउन सर्वप्रथम शत्रु पक्षलाई दासको मानसिकतामा कहिल्यै प्रतिशोधको भावना जागृत हुन पाओस् भन्ने हेतुले उनीहरूले धर्म र संस्कृतिको गलत व्याख्या गरी दास बनाए ।

जयस्थिति मल्लको पालामा भारतको मलवर चर्चका अगुवा भिकाई उनीहरूको सल्लाहमा कानेकुब्जेबाट बाहुन भिकाई जातीय विभाजन व्यवस्थित गरे । राजा जयस्थिति मल्लका छोराले आफ्ना बाबुको जातीय विभाजनको विरूद्धमा सुर्तिनाम कि शिल्पकार समुदायका महिला विवाह गरे । यसबाट आक्रोशित बनेका राजा जयस्थिति मल्लले सुर्तीको नामै परिवर्तन गरी आफ्नै कुलकी रानी भनी भित्राएका थिए । जयस्थिति मल्ले आफ्नो राज्य स्थापना गर्न सहयोग गरेकाहरूलाई मलवरबाट भिकाईएका चर्चका पादरीलाई विभिन्न क्षेत्रबाट शिल्पकारहरूको २५ जना सुन्दरी चेली भिकाएर भोगविलास गरी घर फर्किए । बलात्कृत महिला घर फर्काउँदा २५ जानै चेलीहरूको त्रिशूली नदीमा हामफालेर सामुहिक आत्महत्या गरेका थिए । जयस्थितिमल्ल जस्ता शासकहरूले शिल्पकार समुदायहरूलाई कुकुरभन्दा तल्लो स्तरमा राख्ने कानुन बनाए । राज्य

एकीकरण अभियानमा गोर्खाली पल्टनसँगसँगै हिडेर भाँडाकुँडा, हातहतियार, झोला, जुत्ता, कपडा तयार पार्ने विश्वकर्मा, मिजार, परियार र गोर्खाली विजय अभियानको गीत गाउँदै गाउँगाउँ वस्ती वस्ती चाहारेर जनतालाई देशको लागि लड्न मर्न तयार मनस्थिति बनाउने गन्धर्वहरू र युद्धमा होमिएका शिल्पि शिल्पकारहरूको इतिहासमा पृथ्वीनारायणले भने ध्यान दिएका थिए । राणा शासनको सुरूवातले शिल्पकार जगत अर्को दुःख बाढी ल्याएको थियो । जब ठूलो दलबलका साथ वि.सं. १९०६ साल माघमा नेपालबाट हिंडेको राजप्रतिनिधिमण्डलले पटनाको पहिलो स्वागतमै १९ तोपको सलामी पायो । कलकत्ताबाट पनि त्यस्तै सम्मान सत्कार सलामी लिंदै विं.सं. १९०७ साल जेठमा जंगबहादुर बेलायत पुगे । बेलायतमा पुगेपछि विशेषचाहिँ त्यहाँको इसाई शासन व्यवस्थामा रहेको सैनिक संरचना, शस्त्रागार आदिले उनलाई प्रभाव पार्‍यो । उनी बेलायती रानीको सल्लाहमा विश्व हल्लाउने फ्रान्सतिर लागे ।

जंगबहादुरले युरोप भ्रमणका बेला वि.सं. १९०७ भाद्र १० गते फ्रान्सको सर्टरी मैदानमा सैनिक परेड हेर्न घोडा चढी अघि बढ्दा घोडालाई नियन्त्रणमा ल्याई प्रोसेसन पिछा पारेपछि बेलायत र फ्रान्स को पूर्वयोजनाअनुसार नेपालको ऐन कानुन तयार गर्नका लागि यूरोपियन इसाई पादरीहरूलाई विज्ञको रूपमा नेपाल पठाइदियो । तिनै राष्ट्रको सहयोगमा बाइबलीय जगमा मुलुकी ऐन १९१० तयार भयो । यो मुलुकी ऐन नेपालको सबैभन्दा पहिलो लिखित कानुन हो । जुन मुलुकी ऐन पूर्णतः बाइबलीय जगमा तयार भएको थियो । हाम्रो मुलुकी ऐनमा बाइबलमा भएको कालाजाती र गोराजातीले बीचकोविभेदलाई नयाँ शैलीमा प्रस्तुत गरिएको छ । इसाई र गैह्रइसाई बीचको विभेदलाई यसमा समेटिएको छ । यहुदीभित्रका १२ कुलका जाती र अन्य जातीमा भएको चरम विभेदलाई नयाँ शैलीमा समावेश गरिएको छ । तत्कालीन युरोपमा भएको कानुनी व्यवस्थामा कालाजातिलाई गोराजातीले मार्न र किनबेच गर्न छुट थियो । उक्त कानुनी व्यवस्था बाइबलको प्रस्थान १ देखि २७ को जगमा तयार भएको थियो । सोही नियमलाई नयाँ शैलीमा मासिने मतवाली र पानी नचल्ने अछुत बनाइयो । त्यस्तै बाइबलको कानुनी व्यवस्था र तत्कालीन यूरोपियन कानुनअनुसार अन्य जातप्रति गरिने

व्यवस्था र व्यवहारचाहिँ नमासिने मतलबी भनी मगर, राई, लिम्बू र मुसलमानलाई गर्ने व्यवस्थामा समेटियो । बाइबल र यूरोपियन कानुनअनुसार यहुदी कुलका १२ जातीलाई श्रेष्ठ मानवजाति भनेर चुनिएझैं खस, क्षेत्रीबाहुनभित्रका जातजातिलाई श्रेष्ठजाति चुनियो । उनीहरूलाई बाइबलमा जस्तै अधिकार दिइयो । यसरी इसाई साम्राज्यवादले नेपालमा पहिलो लिखित मुलुकी ऐनमार्फत "फुटाउ र राज गर" को मान्यता अनुसार वैदिक हिन्दू शास्त्रमा कहीं नभएको जातीय विभेद हिन्दू संस्कृतिभित्र भित्राएर हिन्दूधर्मलाई विकृत बनाई छाड्यो । (शिल्पकारको लुकाईएको प्राचीन इतिहास-२०७७, चित्रबहादुर रसाईली) ।

## १०. अल्बर्ट आइन्सटाइनको बोली

समग्र विश्वमा उपनिषद् जत्तिको उच्चकोटीको र आत्मालाई माथि उठाउन सक्ने साहित्य अरू कुनै पनि छैन । उपनिषद् मेरो जीवनको शान्तिको मुहान हो भने मृत्युमा पनि त्यसले मलाई शान्ति दिन्छ भन्ने आशा राख्दछु । उपनिषद् संसारको सबैभन्दा उच्चकोटीको ज्ञानको उपज हो । बितेका शताब्दीहरूमा हामीले जेजति तत्वहरू पाएका छौं, त्यो शताब्दीमा तिनीहरूभन्दा धेरै मूल्यवान तत्व हामीले वेदमा पायौं । यो वैदिक दर्शनको जगमगाउँदो सूर्यका अगाडि हाम्रा पश्चिममा ज्ञान बबुरो देखिन्छ । कुन बेला समाप्त हुन्छ ठेगान छैन । हामीले पूर्वीय दर्शनका अगाडि घुँडा टेक्नै पर्दछ । विश्वप्रसिद्ध वैज्ञानिक अल्बर्ट आइन्सटाइन, स्रोतः (The Discovery of India, by Jawaharlal Neharu Autobiography of Yogi, by Paramhansa Yogananda) ।

## ११. इस्लामी अकिदा

त्यस्तै गरी इसाईका क्याथोलिक समूहहरूले आ-आफ्ना पोपहरूलाई यही (गल्तीरहित) गुण दिने गर्दछन् । त्यसै गरी आजको समयमा नेपाल र भारतमा साईबाबाजस्ता व्यक्तिहरूलाई अल्लाहको विशेषता दिइएको पाइन्छ । जुन इस्लामी अकिदाअनुसार कदापि ठीक होइन । (अकीदह पृ. १९, ई.अन्वर अली) ।

# निष्कर्ष

मेरो भ्रमण, अध्ययन, हेराई र भोगाईको थुप्रै सामग्रीहरूलाई समावेश गरी परमेश्वरको अदालतसमक्ष यो कृति पेश गरेको छु । सयौँ पुस्तकलाई आफ्नै नजरमा हेर्दा मस्जिद, चर्च, मन्दिर र गुम्बाहरूमा मनमोजी पर्यावलोकन पाएका नतिजालाई पुस्तकमा पस्केको हो ।

बाल्यकालमा पाएको अर्ती अनि प्रकृतिसित एकोहोरो गतिमा आफूखुसी गुज्रँदा मैले ईश्वरीय कानूनमा स्वतन्त्रता देखे पनि धर्मभिरुहरूचाहिँ पराधीन बनाएको भेटेँ ।

पाष्टर र पोप भनेका पाखण्डी गुणले शोभायमान हुन् भन्ने कुराको ख्याल विश्वासीहरूले कहिल्यै गरेनन् । पोप र पाष्टरको आदेशलाई शिरोपर गरेको इसाईजगत् घृणित बन्यो । बाइबललाई देखाएर चर्चभित्र मुठिदान, दशांश, भेटीकार्ड, पापमोचन पत्रमार्फत पाष्टरहरूले लुटलाई निरन्तरता दिए ।

रोगले थलिएका, सर्पदंशमा परेर छटपटाई रहेकालाई उपचारका निम्ति हस्पिटल लान निरूत्साही गर्ने पाष्टरहरूको चर्तिकला देख्दा बाइबल कहिल्यै नहेरौँ र नपढौँजस्तो लाग्छ । गोठका पशुलाई नाम्ले पर्दा शैतानको दोष लगाएर पाष्टरलाई खर्च दिन बोका नै बेच्नुपर्नेहरूलाई नजिकबाट नियाल्दा मन नै अमिलो हुने रहेछ । घरपरिवारको सदस्यको मृत्यु भएर शोकाकूल बनेको बेला मृतक आत्मालाई यरूशेलम (स्वर्ग) पुऱ्याउने टेण्डर पाएका पाष्टरहरूले मनोमानी मृतकको नाममा आफ्नो आवश्यकता पूरा गर्न पैतृक सम्पत्ति नै बेच्नुपर्ने परम्परा र प्रचलन अझैँ बचाएको देख्दा म आश्चर्य चकित हुन्छु ।

प्रत्येक चर्चले जतिबेला मन लाग्यो त्यतिबेला असहाय नारीलाई बोक्सीको आरोप लगाएर होलिएन पर्वमा जिउँदै आगो लगाएको दृश्य सम्झदा मुटु काँप्छ । कैयौँ मानिसलाई बोक्सी र डायनाको आरोपमा सर्वस्व हरणसमेत गर्ने पाष्टर र पादरीको बारेमा कसैले अनुसन्धान गऱ्यो भने ती यति नगण्य लज्जास्पद र निन्दनीय कारणहरू उसले पाउनेछ, तिनीहरूको सबै नालीबेली तयार भइसक्दा संभवतः लेखक नै पागल बन्नेछ ।

विधुवा र असहाय महिलाहरूप्रति गिद्धेनजर लगाउने कैयौँ पाष्टरहरूले नीति र विधिलाई मुट्ठीमा राखेर चमत्कार, जादू, तन्त्रमन्त्र, उत्पात आन्दोलनभित्र रमाइरहेका छन् । कयौँ चर्चका पोपहरूकहाँ महिलाहरूलाई एक्लै जान बन्देज गरिएको छ । पवित्र भनिने चर्चमा महिलाहरू एक्लै जाँदा पोपहरूबाट थुप्रैपटक शिकार भएका थिए । यस्तो क्रियाकलापलाई छुट दिने कानुनी व्यवस्था साह्रै लज्जाजनक छ ।

एउटै प्रक्रियाबाट नौ महिना गर्भमा राखेर हुर्काइएको दुई बच्चाबीच लैङ्गिकताको आधारमा एउटा मालिक अर्को दास कसरी हुन सक्छ ? पुरुष प्रधान समाजमा यो प्रश्न घरिघरि उठिरहन्छन् । दासप्रथा उन्मूलन भए पनि धार्मिक समाजमा धेरै मानिसहरू पाष्टर, सन्त, बाबा कसै न कसैको सहायक बनेका छन्, अन्धभक्त बनेका छन् । आफ्नो अगुवाको सानो ठूलो तस्विर कोर्न लागि रहेका छन् । यतिमात्र होइन आफू हुनुको अस्तित्व नै मेटाएर सेवा गरिरहेका छन् ।

बाइबलभित्र निर्दोष ६० हजार यहुदी र तीनका घरमा पालिएका अबोध पशुलाई यहोबाले मारिदिए । यसरी तिनीहरूलाई मार्नुको कारण मुक्तिको बाटोतय गरिएको बाइबलमा बताइए तापनि सतही कारण अर्कै थियो ।

बाइबलमा हजारौँ हजार इजरायलीमाथि यहोबाले शैतानबाट छुटकारा दिने नाममा आतंक फैलाएको घटना साह्रै हृदयविदारक छ । बाइबलका इतिहासमा कैयौँ निर्दोष विश्वासीहरू यहोबाको नाममा विभाजन र चरम यातनाको बादल खेप्नुपऱ्यो । त्यही बादलले ल्याएको बाढीमा आफ्ना सपनाहरू बगाएर जीवन गुमाउनु पऱ्यो । तर उस्तै दुखद समाचार, उस्तै धमिलो इतिहास नियाल्नेहरूले प्रायोजित ढंगमा एउटालाई गुम्राहामा राख्दै

अर्कोलाई सही भनेको देखियो । यही सही भन्ने जमातहरूलाई परमेश्वरको अदालतको कठघरामा उभ्याउने जमर्को गर्नुपर्दा खिन्न भएको छु ।

पछिल्लो समयमा चीनले आफ्नो संस्कार र संस्कृतिप्रति प्रेम गर्दै बौद्धधर्मलाई अंगालेको छ । त्यसमा भएका राम्रा पक्षलाई स्वीकार गरेको छ । अमेरिका, फ्रान्स, इटाली, यु.के.लगायतका ५० राष्ट्रहरूले बाइबलमा भएका अश्लीलता, ज्याजी, युद्ध, मानवीय भेदभावचाहिँ दुष्ट आत्माको काम हुन् भन्दै परमात्माको सन्देश बहुधर्मवादलाई आत्मसाथ गरिसकेका छन् । सन् १९४८ पछि विश्वमण्डली परिषद् (WCC) मार्फत बाइबलका विराटता र विशालता बाहिरियो । विश्व शान्ति अभियान मानव अधिकार अभियान भ्रष्टचार विरुद्ध अभियान, धनीगरीबबीचको अन्तर कम गर्ने अभियानजस्ता कार्यक्रमको मर्मद्वारा वाइबलीय रहस्य पूरा गर्न ६-८ वर्षमा अन्तर्राष्ट्रिय धार्मिक सम्मेलन आयोजना गरिएको छ । यही अभियानअघि बढाउने क्रममा सन्  १९८६ अक्टोर २७ तारिखमा इटालीको एसीफी सहरमा अवस्थित बासिलिका अफ सेन्ट मेरी अफ एन्जल्स भन्ने गिर्जाघरमा पहिलो विश्व प्रार्थना दिवस आयोजना गरियो । यसको निरन्तरता दिंदै गरिएको कार्यक्रममध्ये अक्टोबर २६, २०११ मा इटालीको एसिसि सहरमा पहिलो विश्व शान्ति प्रार्थना दिवसको पच्चीसौँ वार्षिकोत्सव भव्यरूपमा आयोजना गरियो । उक्त भेलामा ५० वटा राष्ट्रहरूबाट आएका विभिन्न धर्म गुरुहरूले उपवास बसी ईश्वर र आत्मासँग शान्तिको लागि प्रार्थना गर्नुहुँदै वाइबलीय सभ्यताको विशालताको थप जानकारी दिए ।

अन्तमा, आफ्नो  कुरा परमेश्वरका अदालतमा पेश गर्नै पर्ने देखियो । चर्च, मन्दिर, मस्जिद जानेहरूमध्ये केहीकेहीबाट थेग्नै नसकिने गरी देखेका, पढेका र भोगेका विषयवस्तु समेटेर किताब प्रस्तुत गर्न भनियो ।

लेख्दै जाने क्रममा एकाथरीले खोजकको खोजलाई ढलमा मिसाएर महाढलतिर बिलीन गराउन असफल प्रयास गरे तापनि यस हिंडाईले धर्मशास्त्रीहरूलाई  धर्मशास्त्रकै  भाषामा ईश्वरको अदालतमा पेश गरेको छ । बाइबलमा देखिएका फुस्रो, ढोङ्ग, आडम्बर र पक्षपातलाई परमेश्वरको अदालतमा पेश गरेर सरोकारवालाहरूलाई निर्णय सुन्न आतुर बनाइएको छ ।

# उपसंहार

यो पुस्तक 'परमेश्वरको अदालतमा वेद र बाइबल अन्तर्गत खीष्टीयन इतिहासको शुरूवात, बाइबलका धारणा र बाइबलले पारेका प्रभावहरू छन् । बाइबलमा परमेश्वरको नाम दिएर राखिएका कार्य बाइबलका अवधारणालाई आधार बनाएर पोप र पाष्टरले गरेका क्रियाकलापलाई समेटिएको छ । आफ्नो स्वार्थको लागि ईश्वरीय वचन र विश्वशान्ति प्रार्थना दिवसको विरुद्धमा उत्रिएर अन्य धर्मप्रति आक्रामक बन्दै गएकाहरूप्रति यस पुस्तकले ध्यानाकर्षण गराएको छ । उत्पीडित नारी र असहायहरूलाई शैतानको संज्ञा दिनेहरूबाट जोगाउन ईश्वरीय अदालतसमक्ष पुगेको छु । बाइबल बोकेर हिँड्ने तर मान्छेले मान्छेप्रति प्रेम गर्न नसक्नु नै दुर्भाग्य हो । यही दुर्भाग्यको बीचमा बाइबल बोकेर हिँड्नु बेइमानी हो । यस पुस्तकमा बाइबललाई मोटामोटी रूपमा केलाइएको छ । यदि सूक्ष्म रूपमा केलाउने हो भने अझ कैयौं आलोच्य प्रसंगहरू भेटिन्छन् जसका कारण थुप्रै विसंगति जन्मिएका छन् ।

यस्तै प्रसंगका धर्साहरू वेदका सुगन्ध घटाउँदै तयार गरिएका संशोधित पुराण र स्मृतिहरूमार्फत समाजमा नभएका होइनन् । तिनीहरूद्वारा देखिएका विकृति विसंगतिहरू पाठकहरूले लेख्न अह्राएछन् भने यदाकदा ती पनि थपिएलान नै ।

मैले त प्रश्न र शंकाहरू परमेश्वरको अदालतमा राखिदिएँ, प्रमाणहरू पेश गरिदिएँ, निर्णय गर्ने काम परमेश्वरको हो । साक्षी एवम् पत्रकारहरूको धर्म परमेश्वरको फैसला सुनेर सर्वसाधारणसमक्ष पुऱ्याउनु हो । हुन सक्छ, बहस गर्दा कतै कतै अतिसयोक्ति पनि भयो होला । गमलामा पानी हाल्दा गमलाबाहिर घाँसमा पनि परे होलान्, फूलहरूप्रति गवाही दिंदा मलाई घाँसप्रति ध्यान पुगे होलान् । म कुनै मतको विरोधी

होइन, म त परमेश्वरलाई अत्याधिक प्रेम गर्छु । येशूख्रीष्टमाथि उत्ति नै श्रद्धा गर्छु । मलाई बाइबलभित्रको सत्यतासँग प्रेम छ, बहुधर्मवादको सिद्धान्त र शान्तिका लागि विश्व प्रार्थना दिवस मनाइरहेको दृश्यले गहिरो छाप पारेको छ । त्यसैले परमेश्वरको मण्डली, त्रिएक मण्डली, यहोबाको साक्षी, अनुग्रहको मण्डलीहरूमा विश्वासीको भेषमा दशवर्षसम्म प्रेमपूर्वक बाइबल अध्ययन गरेँ र यसबाट लाभान्वित भएँ । डा. विकासानन्दले भनेझैँ "हिलोबाट कमलको फूल उत्पन्न हुन्छ, हिलोसँग होइन, कमलको फूलसँग प्रेम गर ।"

म हिलोलाई प्रेम गर्दिनँ, बाइबलभित्रका अश्लील र असत्यलाई सत्य हो भन्ने पक्षमा छैन । त्यसैले नै परमेश्वरको अदालतमा 'वेद र बाइबल' बोलाउन बाध्य भएको छु । सर्वज्ञानी, सर्वशक्तिमान् परमेश्वरको अदालतमा हुने फैसलामाथि यो पीडित नतमस्तक हुनेछ । आमेन ! नारायण ! साधुवाद !

# सन्दर्भग्रन्थ


• मेरो भेडाले मेरो स्वर सुन्छ-२०१२, किम जु छल मल्कीसेदेक प्रकाशन कम्पनी कोरिया

• परमेश्वरको रहस्य र जीवनको पानीको मूल-२०१०, आन साङ होङ, मल्कीसेदेक प्रकाशन कम्पनी कोरिया

• पिता पुत्र पवित्र आत्मा त्रिएक विषयको वर्णन -२००९, आन साङ होङ, मल्कीसेदेक प्रकाशन कम्पनी कोरिया

• मोसाको व्यवस्था र ख्रीष्टको व्यवस्था-२०१२, आन साङ होङ, मल्कीसेदेक प्रकाशन कम्पनी कोरिया

• स्वर्गीय संसारबाट आएका पाहुनाहरू-२००९, आन साङ होङ, मल्कीसेदेक प्रकाशन कम्पनी कोरिया

• असल र खराबको ज्ञान दिने रूखको फल र सुसमाचार-२००९, आन साङ होङ, मल्कीसेदेक प्रकाशन कम्पनी कोरिया

• माताको आशा-२०१३, पा. गिम जु छल, मल्कीसेदेक प्रकाशन कम्पनी कोरिया ।

• नयाँ भजन-२०१३, पा. गिम्जु छल परमेश्वरको मण्डली विश्व सुसमाचार प्रचार समाज कोरिया

• Evidence Book, परमेश्वरको मण्डली विश्व सुसमाचार प्रचार समाज कोरिया ।

• Elohim Academy, मल्कीसेदेक प्रकाशन कम्पनी, कोरिया ।

• विश्वको इतिहास -२०६८, एच.जी. वेहस, अनुवादक नारायण गिरी, प्रगती पुस्तक सदन काठमाडौँ

• विश्वको ऐतिहासिक रूपरेखा-२०५६, डा. सुरेन्द्र के.सी., पैरवी प्रकाशन, काठमाडौँ

• विश्वको इतिहास-२०७०, प्रा.डा. श्रीप्रसाद उपाध्याय, रत्न पुस्तक भण्डार, नेपाल

• आधुनिक भारतको संक्षिप्त इतिहास-२०५४, खेमराज पोखरेल, आठराई पुस्तक भण्डार, काठमाडौँ नेपाल

• आधुनिक भारतको इतिहास-२०५६, शैलेन्द्रकुमार मानन्धर, रत्न पुस्तक भण्डार, काठमाडौँ नेपाल

• भारतको इतिहास-सन् १९९०, डा. ओमप्रकाश, नोबेल्टी कम्पनी

• ब्रिटिसकालीन भारतको इतिहास-२०५७ प्रा.डा. श्रीरामप्रसाद उपाध्याय, रत्नपुस्तक भण्डार, काठमाडौँ नेपाल

• चीन र जापानको इतिहास-२०६६, प्रा.डा. राजेश गौतम, भुँडीपुराण प्रकाशन, काठमाडौं नेपाल

• सुदूरपूर्व चीन र जापानको इतिहास-२०७०, खेमराज पोखरेल, हेडलाईन पब्लिकेशन, काठमाडौं नेपाल

• दक्षिण अफ्रिकाको सत्याग्रहको इतिहास, मधुसूदन पाण्डे, सनराईज पब्लिकेशन, काठमाडौं नेपाल

• नेपालहिन्दूराज्यको इतिहास-सन् २०१३, सिल्भाँलेभि सम्पादन प्रमोद खकुरेल, भिक्टर प्रधान, वसन्त थापा, हिमाल किताब प्रा.लि. काठमाडौं, नेपाल

• पवित्र बाइबल-२०६९, नेपाल बाइबल सोसाईटी नेपाल

• यूरोपको आधुनिक इतिहास प्रा.डा. मेदनीप्रसाद शर्मा, प्रा.डा. श्रीरामप्रसाद उपाध्याय, प्रा.डा. तीर्थप्रसाद मिश्र, काठमाडौं नेपाल

• आधुनिक चीन र जापानको इतिहास-२०५८, डा. देवप्रसाद शर्मा कँडेल रत्न पुस्तक भण्डार काठमाडौं नेपाल

• धर्मको इतिहास से.तेकारोव अनुवादनक यूवराज पन्थी मालिका प्रकाशन काठमाडौं, नेपाल (मिति उल्लेख नभएको)

• धर्महरूको शुरुवात-सन् २०१४ डा. थोमस ह्वाङ, AMI Publication Sarah Hae-ok Cho Korea

• खीष्टीयन ईश्वर शास्त्रका महत्वपूर्ण शिक्षाहरू भाग-१, सन् २००५ डा. थोमस ह्वाङ, AMI Publication Sarah Hae-ok Cho Korea

• इसाईमतको प्रतिरक्षा मण्डलीको इतिहास आत्मिक युद्ध-सन् २०११, डा. हेन्री ओर्सलर, डा. ग्रेग कम्पास तथा रेभ. जरेद नेल्म्स् टिटीआई प्रकाशन पश्चिम पाल बीच फ्लोरिडा अमेरिका

• शान्ति प्रेमी विश्व नागरिक सन् म्योङ मुन वल्ड पब्लिकेशन प्रा.लि. नक्साल काठमाडौं

• बाइबलमा औषधिको रहस्य-२०७५, सुकदेव गिरी त्रिएक चर्च चितवन नेपाल

• विवाहको रहस्य-२०७० सुखदेव गिरी क्रियशन प्रिन्टिङ एण्ड पब्लिकेशन प्रा.लि. काठमाडौं

• यहोवा परमेश्वरको भजन सच्चाई पिता परमेश्वर समूह चित्रवन प्रिन्टिङ प्रेस सौराहाचोक, चितवन

• सबैभन्दा महान् पुरुष-सन् २०११ वाच टावर बाइबल एण्ड ट्रयाक सोसाईटी इन्डिया

• सत्यार्थ प्रकाशन नेपाली अनुवाद-२०६५ महर्षि दयानन्द सरस्वती सम्पादक आचार्य नन्द किशोर, बिक्रमादित्य प्रतिष्ठान

• वेदमा के छ ?-२०६७ डा. स्वामी प्रपन्नाचार्य, साझा प्रकाशन (काठमाडौँ, नेपाल)

• मगर जातिको इतिहास र संस्कृति-२०७३/०७५ शम्सेरबहादुर आलेमगर, दक्षिणकाली छापाखाना चितवन

•शिल्पकारको लुकाइएको प्राचीन इतिहास, २०७७,बिएन पुस्तक संसार प्रालि, काठमाडौं ।

• हिन्दूधर्म के हो ?-२०६५ इ.डि. विश्वनाथम् अनुवाद पुष्पराज ब्रोदर्श न्यूज एजेन्सी, काठमाडौं नेपाल

• नेपालमा इसाईको चलखेल-२०७२, डा. शास्त्रदत्त पन्त, काठमाडौं नेपाल

• विज्ञानको नजरमा वेद र बाइबल-२०७३, सुरेन्द्र गौतम र नवराज पनेरु, विद्यार्थी पुस्तक भण्डार काठमाडौं नेपाल

• धर्मभित्रको विज्ञान-२०७० हरिप्रसाद सोडारी, विष्णुमाया गजुरेल, काठमाडौं नेपाल

• बाइबल र माओवाद-२०७३, अर्जुन ज्ञवाली/पेशलकुमार निरौला, विश्वहिन्दूमहासंघ, काठमाडौं नेपाल

• हिन्दूधर्म भित्रको विज्ञान-२०७४, ए.पि अर्याल विचारी, डिकुरा पब्लिकेशन काठमाडौं नेपाल

• धार्मिक ग्रन्थ विजक-२०४१ आज्ञादास, संरक्षक साधु सचेत दास, सत्सङ्ग आश्रम वानेश्वर, काठमाडौं

• ऋगवेद-संहिता मूलसहित नेपालीभाषामा-२०७३ अनुवादक तिलकप्रसाद लुईटेल, विद्यार्थी पुस्तक भण्डार, काठमाडौं

• अर्थवेद-२०६३ अनुवादक तिलकप्रसाद लुईटेल, विद्यार्थी पुस्तक भण्डार काठमाडौं

• अर्थववेद-२०६६ अनुवादक तिलकप्रसाद लुईटेल, विद्यार्थी पुस्तक भण्डार काठमाडौं

• सामवेद-२०६७ अनुवादक तिलकप्रसाद लुईटेल, विद्यार्थी पुस्तक भण्डार काठमाडौं

• Message to trader of devotion, sat Gurudev Bandi Chod Bhakti Mukti Trust, Haryana India

• वोधि पुष्पाञ्जली-२०६२ वातुल वासवबज्र (आचार्य धर्म बज्र), श्री आचार्य श्रीधर शम्सेर राणा अनुवादनक नारायण प्रसाद रिजाल ब्यामो कुसुम बुद्ध धर्म संघ

• आर्य शान्ति देव विचित बोधिचर्यावतार-सन् २००१ अनुवादक नारायणप्रसाद रिजाल ब्यामो कुसुम बुद्ध धर्म संघ

• कुरआन शरीफको नेपाली व्याख्या सन् २००९ अनुवाद तथा अनु संघानको भाग मकतवा दाउ स्सलाम रियाध साउदी अरब ।

• चल हदीस-२०६७ रहमुतुल्लाह मिया द म्यासेज पब्लिकेशन घण्टाघर काठमाडौं नेपाल

● नेपाल र नेपाली मुसलमान-२०७१ अब्दुल सलाम खान, सोपान प्रेस प्रा.लि., डिल्लीबजार काठमाडौं

● भ्रमहरूको निवरण डा. जाकिर नाइक अनुवादक मो. हारून अन्सारी मर्कजी जमियत अल्लेहदीस नेपाल

● मनोनित धर्म-सन् २०१६ मो. सलीम साजिदमदवी मर्कजी जमियत अल्लेहदीस नेपाल ।

● इस्लामको वास्तविकता मौलाना अब्दुल कवी, नेपाल इक्रा एजुकेशन फाउण्डेसन नेपालगञ्ज-८, नेपाल

● अकीदह-२०७२ इ. अम्बर अली शाभा डिजिटल मिडिया काठमाडौं

● जे खोज्यो त्यही पाइने, ओशो, मधुवन प्रकाशन, काठमाडौं

● शून्यको संगीत, स्वामी आनन्द विनोद, विश्व जागरण अभियान काठमाडौं नेपाल

रामचन्द्र ढकालद्वारा लिखित *परमेश्वरको अदालतमा वेद र बाइबल* शीर्षकको तुलनात्मक अध्ययन गरी शल्यक्रिया गरिएको कृतिमार्फत एउटा राम्रो बहसको थालनी भएको छ । इसाई धर्मले प्रस्तावित गरेका सन्दर्भ र यसले दीर्घकालीन रूपमा असर पर्ने प्रमाणहरू प्रस्तुत गरिएको छ साथै जीवनको सुन्दर पक्षको अन्वेषणका लागि कृतिले स्पष्ट दिशा निर्देश गरेको छ । लेखकलाई यस कृतिका लागि साधुवाद छ ।

**प्रा.डा. यादवप्रकाश लामिछाने**
(उपकुलपति, नेपाल संस्कृत विश्वविद्यालय)

रामचन्द्र ढकालद्वारा लिखित *परमेश्वरको अदालतमा वेद र बाइबल* पाण्डुलिपि हेर्ने मौका मिल्यो । स्रोतसहित दुई धर्म र संस्कृतिको तुलनात्मक अध्ययन यस कृतिको चाखलाग्दो पक्ष हो । संस्कृति पैसामा व्यापार गरिने वस्तु होइन । तर असहाय र गरिबलाई प्रलोभनमा पारेर गरिने धर्मको व्यापारलाई हेर्ने हो भने त्यो संस्कृतिको विकृत रूप मात्र हो । धर्म, संस्कृति, राजनीतिक स्वार्थका लागि पनि प्रयोग गरिने वस्तु होइनन् । यही कुरा बुझाउने प्रयास प्रस्तुत कृतिले गरेको छ ।

**प्रा.डा. राजकुमार पोखरेल**
(इतिहास विभाग, त्रिभुवन विश्वविद्यालय)

रामचन्द्र ढकालद्वारा तयार गरिएको *परमेश्वरको अदालतमा वेद र बाइबल* नामक पुस्तकले बाइबलभित्र रहेका नारी अस्मिताको अपमान, आत्माको बारेमा भ्रामक चिन्तन, पाष्टरहरूको आचारण मण्डलीहरूमा दाताहरूले दिएको दशांश दानको चरम दुरुपयोग, विभिन्न राष्ट्रहरूमा खिष्टियनहरूको अवस्था इसाईधर्मका नाममा भएको नरसंहार, नेपाल धर्मनिरपेक्ष राष्ट्र भएपछि नेपालीहरूलाई विभिन्न प्रलोभन पारी धर्मान्तर तीव्र रूपमा अगाडि बढाइरहेको अवस्थालाई यस कृतिले चिरफार गरी दर्पणको काम गरेको छ । सो धर्म रक्षामा समर्पित सबैले यो पुस्तक एकपटक अवलोकन गर्नुपर्छ । अनुसन्धानकर्ता लेखकलाई यस्तै अन्य खोज गरी प्रकाशन गर्ने प्रेरणा मिलोस्, यही शुभकामना ।

**प्रा.डा. नारायणप्रसाद गौतम**
(संस्कृत विभाग, त्रिभुवन विश्वविद्यालय)

रामचन्द्र ढकालद्वारा लिखित *परमेश्वरको अदालतमा वेद र बाइबल* नामक इतिहासको पुस्तक पढ्दा अत्यन्तै आनन्द लाग्यो । यस पुस्तकमा नेपालमा इसाईहरूको प्रवेश र वैदिक कालखण्डको यथार्थतालाई अत्यन्तै सूक्ष्म रूपमा प्रस्तुत गरिएको छ ।

**प्रा.डा श्रीरामप्रसाद उपाध्याय**
(इतिहास विभाग, त्रिभुवन विश्वविद्यालय)

प्रचलित फरक धारबाट वस्तुनिष्ट ढङ्गले खोज र अनुसन्धान गर्दै तयार गरिएको यस पुस्तकले आजको बौद्धिक वर्गको समाजमा गजबको रहस्य पस्केको त छँदै छ, एउटा असल शिक्षक हुनुको धर्म पनि निभाउनुभएको छ, रामचन्द्रजीले । समाजको गाताभित्रको हरेक पन्ना जीवन गीत हुन् । आगामी दिनमा पनि सामाजिक वास्तविकता र त्यसको अन्तर्य उधिन्दै थप अनुसन्धान र जीवनपरक कृतिको अपेक्षा गर्दछु ।

**राजेन्द्र बानियाँ, वरिष्ठ सञ्चारकर्मी**
(हिमालयन टेलिभिजन, काठमाडौँ)

रामचन्द्रजी लौकिक अदालत त गएका छैनन् तर उनले उठान गरेका हरेक बिषय भने परमेश्वरको अदालतमै उभ्याउनुपर्ने र त्यतैको यात्रामा धकल्नुपर्ने देखिन्छ ।

**संस्कृतिविद् हरिप्रसाद सोडारी**
(गोरखा)

Rs. 450.00
इतिहास
BN Pustak Sansar
WWW.bnpustaksansar.com
9789937943994